श्रीभगवानुवाच

गच्छ त्वं दिव्यया गत्या मत्प्रसादसमुत्थया।

यद्वदर्याश्रमं पुण्यं गन्धमादनपर्वते ॥३२॥

नरनारायणस्थाने तत्पावितमहीतले।

मन्मना मत्प्रसादेन तत्र सिद्धिमवाप्स्यसि ॥३३॥

अहं स्वर्गं गमिष्यामि उपसंहृत्य वै कुलम्।

द्वारकाञ्च मया त्यक्तां समुद्रः प्लावयिष्यति ॥३४॥

पराशर उवाच

इत्युक्तः प्रणिपत्यैनं जगामाथ तदोद्धवः।

नरनारायणस्थानं केशवेनानुमोदितः ॥३५॥

ततस्ते यादवाः सर्वे रथानारुह्य शीघ्रगान्।

प्रभासं प्रययुः सार्द्धं कृष्णरामादिभिर्द्विज ॥३६॥

प्राप्य प्रभासं स्नातास्ते कुकुरान्धकवृष्णयः।

चक्रुस्तत्र सुरापानं वासुदेवानुमोदिताः ॥३७॥

पिबतां तत्र वै तेषां संघर्षेण परस्परम्।

अतिवादेन्धनो जज्ञे कलहाग्निः क्षयावहः ॥३८॥

जघ्नुः परस्परं ते तु शस्त्रैर्दैवबलात्कृताः।

क्षीणशस्त्राश्च जगृहुः प्रत्यासन्नामथैरकाम् ॥३९॥

श्रीभगवानले भन्नुभयो – हे उद्धव! तिमी मेरो कृपा प्राप्त गरेर दिव्य अर्थात् अलौकिक गतिका माध्यमद्वारा मन्धमादन पर्वत अर्थात् माल्यवान् देखि अगाडिको पर्वतमा अवस्थित रहेको बदरिकाश्रममा जाऊ ॥३२॥ त्यो आश्रम नरनारायणको निवासस्थान हो र त्यसबाट यो सम्पूर्ण पृथ्वी पवित्र भएको छ। तिमीले त्यहाँ गएर आफ्नो अन्तरात्मालाई यथार्थ रूपमा ममा स्थापित गरेर तपस्या गर्नू। त्यसपछि मेरो कृपाका प्रभावले गर्दा तिमीले आफ्नो मनोकामना अनुसारको सिद्धि प्राप्त गर्नेछौ ॥३३॥ अब म पनि यो यादवकुलको पूर्ण रूपमा सर्वनाश गरिदिएर स्वर्गलोकमा जान्छु। मैले परित्याग गरिसकेपछि समुद्रले यो अत्यन्त सुन्दर द्वारकापुरीलाई आफ्नो पानीमा पूर्ण रूपमा डुबाइदिन्छ अर्थात् आफ्नो नियन्त्रणमा लिन्छ ॥३४॥ **पराशरजीले भन्नुभयो–** परमात्मा श्रीकृष्णले यस किसिमको आज्ञा दिनुभएपछि उद्धव उहाँलाई प्रणाम गरेर उहाँबाटै अनुमोदन गरिएको नर–नारायणको निवासस्थान बदरिकाश्रममा तपस्या गर्नका लागि त्यहाँबाट हिँडे ॥३५॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामका साथ सम्पूर्ण यादवहरू अत्यन्त तीव्रगति भएको रथमा सवार भएर प्रभासक्षेत्रतर्फ जानका लागि त्यो अत्यन्त सुन्दर द्वारकापुरीबाट हिँडे ॥३६॥ त्यसपछि कुकुर, वृष्णि र अन्धकवंशीय यादवहरूले प्रभासक्षेत्रमा पुगेर संयमित भावपूर्वक स्नान गरिसकेपछि परमात्मा श्रीवासुदेवसँग अनुमति लिएर मद्यपान लिए अर्थात् मदिरा पिउन थाले ॥३७॥ त्यस समयमा त्यस स्थानमा मदिरा पिउँदाका अवस्थामा ती यादवहरूको आफैंभित्र अर्थात् आफू–आफूमा झगडामा उत्पन्न भएको कुवाक्यरूप दाउराबाट सम्पन्न प्रलय गराउने सामर्थ्य भएको परस्पर कलह अर्थात् झगडाको आगो सल्कियो अर्थात् दनदन बल्न थाल्यो ॥३८॥ तथा त्यही झगडारूपी आगो यादवकुलको विनाशको कारण बन्यो। त्यस समयमा दैववशीभूता ती सबै यादवहरू एक–आपसमा शस्त्र प्रहार गर्न थाले र अस्त्रशस्त्र समाप्त भइसकेपछि तिनीहरूले त्यहाँ नजिकै पूर्ण रूपमा मौलाएको सरकण्ड हातमा लिए ॥३९॥ त्यस

एरका तु गृहीता तैर्वज्रभूतेव लक्ष्यते।

तया परस्परं जघ्नुः सम्प्रहारे सुदारुणे ॥४०॥

प्रद्युम्नसाम्बप्रमुखाः कृतवर्माथ सात्यकिः।

अनिरुद्धादयश्चान्ये पृथुर्विपृथुरेव च ॥४१॥

चारुवर्मा चारुकश्च तथाक्रूरादयो द्विज।

एरकारूपिभिर्वज्रैस्ते निजघ्नुः परस्परम् ॥४२॥

निवारयामास हरिर्यादवांस्ते च केशवम्।

सहायं मेनिरे प्राप्तं ते निजघ्नुः परस्परम् ॥४३॥

कृष्णोऽपि कुपितस्तेषामेरकामुष्टिमाददे।

वधाय सोऽपि मुसलं मुष्टिर्लौहमभूत्तदा ॥४४॥

जघान तेन निःशेषान् यादवानाततायिनः।

ज!नुश्च सहसाभ्येत्य तथान्ये च परस्परम् ॥४५॥

ततश्चार्णवमध्येन जैत्रोऽसौ चक्रिणो रथः।

पश्यतो दारुकस्याशु हृतोऽश्वैर्द्विजसत्तम ॥४६॥

चक्रं गदा तथा शार्ङ्गं तूणौ शङ्खोऽसिरेव च।

प्रदक्षिणं हरिं कृत्वा जग्मुरादित्यवर्त्मना ॥४७॥

क्षणेन नाभवद् कश्चिद् यादवानामघातितः।

ऋते कृष्णं महाबाहुं दारुकञ्च महामुने ॥४८॥

युद्धमा उनीहरूले आफ्ना हातमा लिइएको त्यो सरकण्ड वज्रका समान भएको अनुभव गर्न थाले र उनीहरू त्यसले एकले अर्कालाई प्रहार गर्न अर्थात् हिर्काउन थाले अथवा त्यो सरकण्डलाई अस्त्रशस्त्रका रूपमा प्रयोग गर्न थाले ॥४०॥ हे ब्राह्मणश्रेष्ठ! त्यस यादववंशीय युद्धमा प्रद्युम्न, साम्ब, कृतवर्मा, सात्यकि, अनिरुद्ध, पृथु, विपृथु, चारुवर्मा, चारूक तथा अक्रूर आदि सबै यादवहरूले परस्परमा अर्थात् एकले अर्कालाई त्यो एरका अर्थात् गुँदरूपी वज्रले प्रहार गर्न थाले अर्थात् एकले अर्कालाई हिर्काउन थाले ॥४१–४२॥ त्यसपछि जब परमात्मा श्रीहरिले उनीहरूलाई परस्परमा युद्ध गर्न रोक्न खोज्नुभयो, त्यस समयमा उहाँलाई आफ्नो शत्रुको सहयोगी सम्झन थाले र निरन्तर रूपमा एकले अर्कामाथि प्रहार गरिरहे अर्थात् उनीहरूले परमात्मा श्रीकृष्णको आज्ञाको अवहेलना गरे ॥४३॥ त्यस समयमा परमात्मा श्रीकृष्णले पनि अत्यन्त क्रोधित भएर तिनीहरूको वध गर्नका लागि एक मुट्ठी एरका अर्थात् ठूलो गुँद समाउनु भयो र त्यो एक मुट्ठी ठूलो गुँद फलामको मूसलका रूपमा परिणत भयो ॥४४॥ त्यसपछि परमात्मा श्रीकृष्णले त्यस ठूलो गुँदबाट ती अत्यन्त आततायी प्रवृत्ति भएका यादवहरूको सर्वनाश गर्न आरम्भ गर्नुभयो। त्यसै समयमा अन्य यादवहरू पनि अनायास रूपमा त्यहाँ आएर एकले अर्काको वध गर्न थाले ॥४५॥ हे ब्राह्मणश्रेष्ठ! त्यस समयमा दारुक अर्थात् परमात्मा श्रीकृष्णको सारथीले हेर्दा–हेर्दै श्रीकृष्णको त्यस जैत्र नाम भएको अत्यन्त उत्तम रथलाई घोडाहरूले तानेर समुद्रमा लिएर गए अर्थात् सारथीले घोडालाई रोक्न सकेन ॥४६॥ त्यसपछि परमात्मा श्रीकृष्णको शङ्ख, चक्र, गदा, शार्ङ्ग धनुष, तरवार र खड्ग आदि अस्त्रहरू पनि परमात्मा श्रीकृष्णको तीन पटक प्रदक्षिणा गरेर आकाशमार्गबाट गए ॥४७॥ हे मुनिश्रेष्ठ! एक क्षणको अवधिमा परमात्मा श्रीकृष्ण र उहाँको सारथी दारुकबाहेक सम्पूर्ण यादवहरूमा कोही पनि जीवितावस्थामा रहेनन् अर्थात् अन्य सम्पूर्ण यादवहरूको पूर्ण रूपमा विनाश भयो ॥४८॥ त्यसपछि आफ्नो सारथी दारुक र परमात्मा

चङ्क्रम्यमाणौ तौ रामं वृक्षमूलकृतासनम्।

ददृशाते मुखाच्चास्य निष्क्रामन्तं महोरगम् ॥४९॥

निष्क्रम्य स मुखात्तस्य महाभोगो भुजङ्गमः।

प्रययावर्णवं सिद्धैः स्तूयमानस्तथोरगैः ॥५०॥

ततोऽर्घ्यमादाय तदा जलधिः सम्मुखं ययौ।

प्रविवेश च तत्तोयं पूजितः पन्नगोत्तमैः ॥५१॥

दृष्ट्वा बलस्य निर्याणं दारुकं प्राह केशवः।

इदं सर्वं त्वमाचक्ष्व वसुदेवोग्रसेनयोः ॥५२॥

निर्याणं बलभद्रस्य यादवानां तथा क्षयम्।

योगे स्थित्वाहमप्येतं परित्यक्षे कलेवरम् ॥५३॥

वाच्यश्च द्वारकावासिजनः सर्वस्तथाहुकः।

यथेमां नगरीं सर्वां समुद्रः प्लावयिष्यति ॥५४॥

तस्माद् भवद्भिः सर्वैस्तु प्रतीक्ष्यो ह्यर्जुनागमः।

त स्थेयं द्वारकामध्ये निष्क्रान्ते तत्र पाण्डवे ॥५५॥

तेनैव सह गन्तव्यं यत्र याति स कौरवः।

गत्वा च ब्रूहि कौन्तेयमर्जुनं वचनान्मम ॥५६॥

पालनीयस्त्वया शक्त्या जनोऽयं मत्परिग्रहः।

इत्यर्जुनेन सहितो द्वारवत्या भवान् जनम्।

गृहीत्वा यातु वज्रश्च यदुराज्येऽभिषिच्यताम् ॥५७॥

श्रीकृष्ण घुमफिर गरिरहनु भएका अवस्थामा अत्यन्त पराक्रमी बलरामको मुखबाट एउटा अत्यन्त विशाल (ठूलो) सर्प निस्किरहेको देख्नुभयो ॥४९॥ त्यसपछि अत्यन्त पराक्रमी बलरामका मुखबाट निस्किरहेको त्यो अत्यन्त भयानक सर्प समुद्रतिर गयो। त्यस समयमा सिद्ध एवं अन्य सर्पहरूले त्यो भयानक सर्पको स्तुति गरिरहेका थिए ॥५०॥ त्यस समयमा समुद्र अर्घ्य लिएर त्यो भयानक सर्पका अगाडि आए र उत्तम सर्पहरूले त्यसको पूजा गर्न थाले। पूजा समाप्त भएपछि त्यो विशाल सर्पले समुद्रको पानीमा प्रवेश गऱ्यो ॥५१॥ यसप्रकार अत्यन्त पराक्रमी बलरामजी आफ्नो अंशमा विलीन हुनुभएको देखेपछि परमात्मा श्रीकृष्णले आफ्नो सारथी दारुकसँग भन्नुभयो– तिमीले यहाँबाट गएर राजा उग्रसेन र वसुदेवलाई यहाँ भएका सबै कुराहरू बताइदेऊ ॥५२॥ अत्यन्त पराक्रमी बलरामजी अन्तर्धान हुनुभयो र सम्पूर्ण यादवहरूको पूर्ण रूपमा विनाश भइसकेको छ। अब म पनि योगस्थ भएर अर्थात् योगमा लीन भएर आफ्नो यो मनुष्यशरीर परित्याग गर्दछु। तिमीले यहाँबाट गएर उनीहरूलाई यो सबै कुरा सुनाइदेऊ ॥५३॥ द्वारकापुरीमा निवास गर्ने सबैलाई तथा महाराज उग्रसेनलाई तिमीले अब यो अत्यन्त सुन्दर द्वारका नगरीलाई समुद्रको पानीले पूर्ण रूपमा आफ्नो नियन्त्रणमा लिनेछ अर्थात् डुबाइदिने छ भनिदिनू ॥५४॥ त्यसकारण तपाईंहरू सबैले अर्जुनको आगमनको प्रतीक्षा गर्नू। तर अर्जुन यो द्वारकापुरीबाट निस्किएपछि तपाईंहरूमध्ये कोही पनि व्यक्ति द्वारकामा नजानू र नबस्नू पनि ॥५५॥ ती कुरुवंशीय अत्यन्त शक्तिशाली अर्जुन द्वारकाबाट निस्किएर जहाँ जान्छन्, तपाईंहरूले उनी सँगसँगै त्यही जानु। हे दारुक! तिमीले कुन्तीका पुत्र अर्जुनलाई मेरो यो सन्देश सुनाइदिनू ॥५६॥ अर्जुनलाई तिमीले भनिदिनू, उनले आफ्नो शक्ति अनुसार अर्थात् क्षमताअनुसार मेरो परिवारको रक्षा गर्नेछन्। तिमीले अर्जुनसँगै द्वारकामा भएका सबै मनुष्यहरूलाई लिएर जानू तथा वज्रलाई यदुवंशको राजा बनाउनू अर्थात् वज्रको राज्याभिषेक गरिदिनू ॥५७॥ **पराशरजीले भन्नुभयो–** परमात्मा

पराशर उवाच

इत्युक्तो दारुकः कृष्णं प्रणिपत्य पुनः पुनः ।

प्रदक्षिणञ्च बहुशः कृत्वा प्रायाद् यथोदितम् ॥५८॥

स गत्वा च तथा चक्रे द्वारकायां तथार्जुनम् ।

आनिनाय महाबुद्धिर्वज्रं चक्रे तथा नृपम् ॥५९॥

भगवानपि गोविन्दो वासुदेवात्मकं परम् ।

ब्रह्मात्मनि समारोप्य सर्वभूतेष्वधारयात् ॥६०॥

सम्मानयन् द्विजवचो दुर्वासा यदुवाच ह ।

योगयुक्तोऽभवत् पादं कृत्वा जानुनि सत्तमः ॥६१॥

आययौ च जरानाम स तदा तत्र लुब्धकः ।

मुसलावशेषलोहैक सायकन्यस्ततोमरः ॥६२॥

स तं पादं मृगाकारमवेक्ष्यारादवस्थितः ।

तले विव्याध तेनैव तोमरेण द्विजोत्तम ॥६३॥

गतश्च ददृशे तत्र चतुर्बाहुधरं नरम् ।

प्रणिपत्याह चैवैनं प्रसीदेति पुनः पुनः ॥६४॥

अजानता कृतमिदं मया हरिणशङ्कया ।

क्षम्यतामात्मपापेन दग्धं मा दग्धुमर्हसि ॥६५॥

पराशर उवाच

ततस्तं भगवानाह न तेऽस्ति भयमण्वपि ।

गच्छ त्वं मत्प्रसादेन लुब्ध स्वर्गं सुरालयम् ॥६६॥

श्रीकृष्णले यस किसिमको आज्ञा दिनुभएपछि दारुकले उहाँलाई पटक–पटक प्रणाम गरेपछि उहाँको अनेकौं पटक परिक्रमा गरे तथा परमात्माको आज्ञालाई शिरोधार्य गर्दै त्यहाँबाट द्वारकापुरीतिर प्रस्थान गरे ॥५८॥ ती धर्मात्मा दारुकले अत्यन्त सुन्दर द्वारकापुरीमा गएर परमात्मा श्रीकृष्णको आज्ञा अनुसार सबै कुरा विस्तारपूर्वक सुनाइदिए र अर्जुनलाई त्यहाँ ल्याएर यदुवंशको राजाको पदमा वज्रको राज्याभिषेक गर्ने कार्य सम्पन्न गराइदिए ॥५९॥ यता, परमात्मा श्रीकृष्णले सम्पूर्ण जीवमात्रमा पूर्ण रूपमा व्याप्त भएर रहनुभएका वासुदेवस्वरूप परब्रह्मपरमात्मालाई आफ्नो आत्मामा स्थापित गराउनु भएर उहाँको ध्यान गर्नुभयो ॥६०॥ परमात्मा श्रीकृष्णलाई महर्षि दुर्वासाले जसरी भनेका थिए, त्यसरी नै ती ब्राह्मणवचनको सम्मान गर्नका लागि उहाँ आफ्ना घुँडाहरूमा चरण अर्थात् गोडा राखेर विराजमान हुनुभयो अर्थात् योगयुक्त हुनुभयो ॥६१॥ यसै समयमा जरा नाम भएको व्याध अर्थात् सिकारी त्यहाँ आयो, जसले मुसलबाट बचेको तोमर अर्थात् गँडासी अथवा भालाको छाँटको प्राचीनकालको एक हतियारलाई आफ्नो वाणका टुप्पोमा लगाएको थियो ॥६२॥ हे ब्राह्मणश्रेष्ठ! उहाँको श्रीचरणलाई मृगको आकारजस्तो देखेकाले टाढै बसेर त्यो सिकारीले त्यही तोमर अर्थात् गँडासीले चरणहरूलाई भेदन गर्‍यो अर्थात् प्रहार गरेर छोडिदियो ॥६३॥ तर, नजिकमा गएर हेर्दाका अवस्थामा त्यस सिकारीले चतुर्भुज धारण गरेको अर्थात् चार हातहरू भएको एउटा मनुष्यलाई देख्यो। यो देखेबित्तिकै उहाँका चरणहरूमा शरणागत भएर "प्रसन्न भइदिनुहोस्, प्रसन्न भइदिनुहोस्" भन्न थाल्यो ॥६४॥ मैले अज्ञानतापूर्वक मात्र मृग सम्झिएर यस किसिमको अपराध गरे। कृपया मलाई क्षमा गरिदिनु होला। म आफ्नै पापबाट अत्यन्त पीडित भइरहेको छु, मेरो रक्षा गरिदिनुहोस् ॥६५॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि भगवान्ले त्यो सिकारीसँग भन्नुभयो– तिमी अलिकतिमात्र पनि नडराऊ। हे सिकारी! तिमी मेरो कृपाका प्रभावले देवताहरूको निवासस्थान स्वर्गलोकमा जाऊ ॥६६॥ परमात्मा श्रीकृष्णले यति

विमानमागतं सद्यस्तद्वाक्यसमनन्तरम्।

आरुह्य प्रययौ स्वर्गं लुब्धकस्तत्प्रसादतः ॥६७॥

गते तस्मिन् स भगवान् संयोज्यात्मानमात्मनि।

ब्रह्मभूतेऽव्ययेऽचिन्त्ये वासुदेवमयेऽमले ॥६८॥

अजन्मन्यजरेऽनाशिन्यप्रमेयेऽखिलात्मनि।

तत्याज मानुषं देहमतीत्य त्रिविधां गतिम् ॥६९॥

भनिसक्नु भएपछि त्यहाँ तुरुन्तै एउटा विमान आइपुग्यो। त्यही विमानमा चढेर त्यो सिकारी परमात्माको कृपाका प्रभावले त्यसै समयमा स्वर्गलोकमा गयो ॥६७॥ त्यो सिकारी स्वर्गलोकमा गइसकेपछि परमात्मा श्रीकृष्णले आफ्नो आत्मा अव्यय, अचिन्त्य, वासुदेवस्वरूप, स्वच्छ, अजन्मा, अमर, अप्रमेय, सम्पूर्ण ब्रह्मण्डको आत्मा तथा ब्रह्मस्वरूप भगवान् श्रीविष्णुमा विलीन गराउनुभएर त्रिगुणात्मक गतिलाई पूर्ण रूपमा उल्लङ्घन गरेर आफूले धारण गरिरहनुभएको मनुष्यशरीरको यथार्थ रूपमा परित्याग गर्नुभयो ॥६८–६९॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे सप्तत्रिंशोऽध्यायः।

ॐ

## अष्टत्रिंशोऽध्यायः

## अध्याय – ३८

### "यादवानामन्त्येष्टिसंस्कारः, परीक्षितो राज्याभिषेकः, पाण्डवानां वनगमनञ्च"

(यादवहरूको अन्तिम संस्कार, परीक्षित्को राज्याभिषेक तथा पाण्डवहरूको वन-प्रवेश)

**पराशर उवाच**

**अर्ज्जुनोऽपि तदान्विष्य कृष्णरामकलेवरे।**

**संस्कारं लम्भयामास तथान्येषामनुक्रमात् ॥१॥**

**अष्टौ महिष्यः कथिता रुक्मिणीप्रमुखास्तु याः।**

**उपगुह्य हरेर्देहं विविशुस्ता हुताशनम् ॥२॥**

**रेवती चैव रामस्य देहमाश्लिष्टा सत्तम।**

**विवेश ज्वलितं वह्निं तत्सङ्गाह्लादशीतलम् ॥३॥**

**उग्रसेनस्तु तच्छ्रुत्वा तथैवानकदुन्दुभिः।**

**देवकी रोहिणी चैव विविशुर्जातवेदसम् ॥४॥**

**ततोऽर्जुनः प्रेतकार्यं कृत्वा तेषां यथाविधि।**

**निश्चक्राम जनं सर्वं गृहीत्वा वज्रमेव च ॥५॥**

**द्वारवत्या विनिष्क्रान्ताः कृष्णापत्न्यः सहस्रशः।**

**वज्रं जनञ्च कौन्तेयः पालयञ्छनकैर्ययौ ॥६॥**

**सभा सुधर्मा कृष्णेन मर्त्यलोके समुज्झिते।**

**स्वर्गं जगाम मैत्रेय पारिजातश्च पादपः ॥७॥**

**पराशरजीले भन्नुभयो**–त्यसपछि कुरुवंशीय अर्जुनले परमात्मा श्रीकृष्ण र अत्यन्त पराक्रमी बलरामको पार्थिव शरीर एवम् अन्य यादवहरूका पनि मृत शरीरहरूको खोजतलास गरेर क्रमबद्ध रूपमा और्ध्वदेहिक अर्थात् प्रेतका लागि गरिने कर्म वा दान अथवा अन्त्येष्टि संस्कार गराइदिए ॥१॥ परमात्मा श्रीकृष्णका रुक्मिणी आदि जुन आठ पटरानी अर्थात् मुख्य रानीहरू रहेका थिए, तिनीहरू सबैले परमात्मा श्रीकृष्णको पार्थिव शरीरलाई अत्यन्त श्रद्धा र प्रेमपूर्वक अँगालो मारेर स्वयंले अग्निमा प्रवेश गरे ॥२॥ हे ब्राह्मणश्रेष्ठ! अत्यन्त पराक्रमी बलरामजीकी पत्नी रेवतीले पनि बलरामजीको पार्थिव शरीरलाई अत्यन्त श्रद्धा र प्रेमपूर्वक अँगालो मारेर पूर्ण रूपमा दन्किरहेको आगोमा प्रवेश गरिन् ॥३॥ यस किसिमको अत्यन्त दुःखद समाचार सुनिसकेपछि महाराज उग्रसेन, आनन्दकदुन्दुभिका नामबाट प्रख्यात हुनुभएका वसुदेव, देवी देवकी, तथा रोहिणी आदिले पनि स्वेच्छापूर्वक अग्निमा प्रवेश गरे ॥४॥ त्यसपछि कुरुवंशीय अत्यन्त पराक्रमी अर्जुन तिनीहरू सबैको विधिपूर्वक अन्त्येष्टि संस्कार सम्पन्न गरेर वज्रका अन्य यादवहरू र परमात्मा श्रीकृष्णका अन्य पत्नीहरूलाई साथमा लिएर द्वारकापुरीबाट निस्किए ॥५॥ त्यो अत्यन्त सुन्दर द्वारकापुरीलाई पूर्ण रूपमा परित्याग गरेर निस्किएका परमात्मा श्रीकृष्णका हजारौं पत्नीहरू, वज्र र यादवहरूको सुरक्षा गर्दै अर्जुन विस्तार-विस्तार हिंड्न थाले अर्थात् सावधानीपूर्वक अगाडि बढ्न थाले ॥६॥ हे मैत्रेय! यस प्रकार परमात्मा श्रीकृष्णले मर्त्यलोकलाई पूर्णरूमा परित्याग गरिदिनु भएपछि तत्कालै सुधर्मा सभा र अत्यन्त पवित्र पारिजातको रूख पनि स्वर्गलोकमा गए ॥७॥ जुन दिन परमात्मा श्रीकृष्णले

यस्मिन् दिने हरिर्यातो दिवं सन्त्यज्य मेदिनीम्।
तस्मिन्नेवावतीर्णोऽयं कालकायो बली कलिः ॥८॥

पृथ्वीलाई परित्याग गरेर स्वर्गलोकतिर प्रस्थान गर्नुभयो अर्थात् स्वर्गलोकमा जानुभयो, त्यसैदिनदेखि अत्यन्त शक्तिशाली कलिले पृथ्वीमा प्रवेश गऱ्यो अर्थात् कलियुग पृथ्वीमा आयो ॥८॥

प्लावयामास तां शून्यां द्वारकाञ्च महोदधिः।
वासुदेवगृहं त्वेकं नाप्लावयत सागरः ॥९॥

त्यसै समयमा परमात्मा श्रीकृष्णले निर्माण गर्नुभएको अत्यन्त सुन्दर पूर्ण रूपमा मनुष्यवीहिन भएको द्वारकापुरीलाई समुद्रले आफ्नो पानीमा डुबाइदियो अर्थात् द्वारकापुरीलाई आफ्नो नियन्त्रणमा लियो, तर परमात्मा श्रीकृष्णले निवास गर्नुभएको अत्यन्त पवित्र र उत्तम महललाई जस्ताको तस्तै छाडिदियो अर्थात् डुबाएन ॥९॥

नातिक्रान्तुमलं ब्रह्मंस्तदद्यापि महोदधिः।
नित्यं सन्निहितस्तत्र भगवान् केशवो यतः ॥१०॥

हे ब्राह्मणश्रेष्ठ! समुद्रले आजसम्म पनि परमात्मा श्रीकृष्णले निवास गर्नुभएको त्यो मन्दिरलाई डुबाउन सकेको छैन अर्थात् आफ्नो नियन्त्रणमा लिन सकेको छैन। किनकि त्यस मन्दिरमा परमात्मा श्रीकेशव निरन्तर रूपमा विराजमान भइरहनुहुन्छ अर्थात् विद्यमान रहुनुहुन्छ ॥१०॥

तदतीव महत् पुण्यं सर्वपातकनाशनम्।
विष्णुक्रीडान्वितं स्थानं दृष्ट्वा पापात् प्रमुच्यते ॥११॥

त्यो परमात्मा श्रीविष्णुको क्रीडास्थलका रूपमा रहेको तथा उहाँका सबै ऐश्वर्यबाट सम्पन्न भएको मन्दिरले सबै किसिमका पापहरूको पूर्ण रूपमा विनाश गरिदिन्छ। त्यस मन्दिरको दर्शन गर्ने मनुष्य सबै पापहरूबाट यथार्थ रूपमा मुक्त हुन्छ ॥११॥

पार्थः पञ्चनदे देशे धनधान्यसमन्विते।
चकार वासं सर्वस्य जनस्य मुनिसत्तम ॥१२॥

हे मुनिश्रेष्ठ! अत्यन्त शक्तिशाली कुरुवंशीय अर्जुनले धनधान्यबाट परिपूर्ण भएको पञ्चनद नाम भएको देशमा ती द्वारकापुरीबाट उनीसँगै आएका सबै मनुष्यहरूको बसोबास गराए ॥१२॥

ततो लोभः समभवद् दस्यूनां निहतेश्वराः।
दृष्ट्वा स्त्रियो नीयमानाः पार्थेनैकेन धन्विना ॥१३॥

त्यस समयमा ती विधवा भएका अनाथ स्त्रीहरूलाई गाण्डीव धनुष धारण गरेका अत्यन्त बलशाली अर्जुन एक्लैले लिएर गइरहेको देखेर चोर वा अत्याचारिहरूका मनमा ती स्त्रीहरूलाई प्राप्त गर्ने लोभ उत्पन्न भयो अर्थात् उनीहरू ती विधवाहरूलाई प्राप्त गर्न अत्यन्त उत्साहित भए ॥१३॥

ततस्ते पापकर्माणो लोभोपहतचेतसः।
आभीरा मन्त्रयामासुः समेत्यात्यन्तदुर्मदाः ॥१४॥

त्यसपछि ती अत्यन्त घमण्डी, पूर्ण रूपमा पापकर्ममा लागेका र अतिशय लोभी अहीर(अर्थात् महाभारतका अनुसार सिन्धु र सरस्वतीको तीरमा बस्ने एक क्षत्रिय जाति) परशुरामका डरले पर्वतको गुफामा लुकेर आफ्नो कर्म छोडेपछि यिनका सन्तान शूद्र भए। अर्जुनले द्वारकावासी आइमाई-हरूलाई लिएर जाँदा यी आभीरहरूले अर्जुनमाथि शंका गरेका हुन्) चोर अर्थात् डाकाहरूले आफूहरूका बीचमा विचार-विमर्श गर्न थाले ॥१४॥ हे यी गाण्डीव

अयमेकोऽर्जुनो धन्वी स्त्रीजनं निहतेश्वरम् ।

नयत्यस्मानतिक्रम्य धिगेतद्भवतां बलम् ॥१५॥

हत्वा गर्वसमारूढो भीष्मद्रोणजयद्रथान् ।

कर्णादिंश्च न जानाति बलं ग्रामवासिनाम् ॥१६॥

यष्टिहस्तानवेक्ष्यास्मान् धनुष्पाणिः स दुर्मतिः ।

सर्वानेवावजानानि किं वो बाहुभिरुन्नतैः ॥१७॥

ततो यष्टिप्रहरणा दस्यवो लोष्टधारिणः ।

सहस्रशोऽभ्यधावन्त तं जनं निहतेश्वरम् ॥१८॥

ततो निर्भत्स्य कौन्तेयः प्राहाभीरान् हसन्निव ।

निवर्तध्वमधर्मज्ञा यदि न स्थ मुमूर्षवः ॥१९॥

अवज्ञाय वचस्तस्य जगृहुस्ते तदा धनम् ।

स्त्रीजनञ्चैव मैत्रेय विष्वक्सेनपरिग्रहम् ॥२०॥

ततोऽर्जुनो धनुर्दिव्यं गाण्डीवमजरं युधि ।

आरोपयितुमारेभे न शशाक स वीर्यवान् ॥२१॥

धनुष धारण गरेका अर्जुन एक्लैले हामीहरूको अपमान गरेर अर्थात् हामीलाई अवहेलना गरेर यी अनाथ भएका द्वारकाका स्त्रीहरूलाई लिएर गइरहेका छन् । यस्तो अवस्थामा टुलुटुलु हेरिरहेका हामीहरूको बल अर्थात् पुरुषार्थलाई धिक्कार छ ॥१५॥ यी अर्जुन भीष्म, द्रोण, जयद्रथ र कर्णजस्ता अत्यन्त शक्तिशाली वीरहरूलाई मारेका कारणले गर्दा अत्यन्त अभिमानी भएका छन्। तर हामी गाउँका वासिन्दाहरूको बलका विषयमा ती पूर्ण रूपमा अनभिज्ञ रहेका छन् ॥१६॥ हामीहरूका हातमा लाठी (लौरो) मात्र रहेको देखेर यी बुद्धि पूर्ण रूमा भ्रष्ट भइसकेका अर्जुन आफ्नो हातमा धनुष भएका कारणले हामीहरूको अपमान गरिरहेका छन्। यस्तो अवस्थामा पनि सदुपयोग नगर्ने हो भने हाम्रा यी अत्यन्त बलवान् पाखुराको सदुपयोग कहिले गर्ने? अर्थात् यी हातहरू भएको के औचित्य भयो ? ॥१७॥ त्यसपछि यस प्रकारको निश्चय गरेर ती हजारौं डाँका अर्थात् अत्याचारीहरू आफ्नो लौरो र माटाको डल्लो लिएर ती पूर्ण रूपमा अनाथ भएका द्वारका निवासीहरूमाथि जाइलागे अर्थात् ती अनाथहरूमाथि आक्रमण गरे ॥१८॥ त्यसपछि अत्यन्त पराक्रमी कुरुवंशीय अर्जुनले ती डाँका अथवा अत्याचारीहरूलाई गाली गर्दै हाँसेर भने– "हे दुराचारीहरू! यदि तिमीहरूलाई आफ्नो शरीरको माया छ र केही समय जीवित रहन चाहन्छौ भने यसै समयमा यहाँबाट फर्किएर जाओ ॥१९॥ हे मैत्रेय! तर ती दुराचारी वा अत्याचारी डाँकाहरूले अर्जुनका वचनको अवहेलना गरेर अथवा त्यसमा ध्यान नदिएर परमात्मा श्रीकृष्णको सबै धन र स्त्रीहरूलाई अपहरण गरे अर्थात् पूर्ण रूपमा आफ्नो नियन्त्रणमा लिए ॥२०॥ त्यसपछि अत्यन्त शक्तिशाली कुरुवंशीय अर्जुनले युद्धक्षेत्रमा ननासिने त्यो अत्यन्त दिव्य गाण्डिव धनुषको प्रयोग गर्न चाहे, तर त्यसो गर्नमा उनी पूर्ण रूपमा असफल भएर अर्थात् उनले आफ्नो दिव्य गाण्डीव धनुषको त्यस समयमा सदुपयोग गर्न सकेनन् ॥२१॥ अर्जुनले धेरै पटक प्रयास

चकार सज्यं कृच्छ्राच्च तच्चाभूच्छिथिलं पुनः।

न सस्मार तथास्त्राणि चिन्तयन्नपि पाण्डवः ॥२२॥

शरान्मुमोच वै तेषु पार्थ वैरिष्वमर्षितः।

त्वग्भेदं ते परं चक्रुरस्ता गण्डीवधन्वना ॥२३॥

वह्निना येऽक्षया दत्ताः शरास्तेऽपि क्षयं ययुः।

युध्यतः सह गोपालैरर्जुनस्य भवक्षये ॥२४॥

अचिन्तयच्च कौन्तेयः कृष्णस्यैव हि तद्बलम्।

यन्मया शरसङ्घातैः सकला भूभुजो जिताः ॥२५॥

मिषतः पाडुपुत्रस्य ततस्ताः प्रमदोत्तमाः।

आभीरैरपकृष्यन्त्यः कामाच्चान्या प्रवव्रजुः ॥२६॥

ततः शरेषु क्षीणेषु धनुष्कोट्या धनञ्जयः।

जघान दस्यूंस्ते चास्य प्रहारन् जहसुर्मुने ॥२७॥

प्रेक्षतश्चैव पार्थस्य वृष्ण्यन्धकवरस्त्रियः।

जग्मुरादाय ते म्लेच्छाः समस्ता मुनिसत्तम ॥२८॥

ततः सुदुःखितो जिष्णुः कष्टं कष्टमिति ब्रुवन्।

अहो भगवता तेन मुषितोऽस्मि रुरोद ह ॥२९॥

गर्दा पनि अत्यन्त मुस्किलले आफ्नो धनुषमा ताँदो त चढाए, तर त्यो खुकुलो भयो अर्थात् बाण हान्नका लागि उपयोगी हुन सकेन र धेरै स्मरण अथवा सम्झना गर्दा पनि उनलाई आफ्ना अस्त्रहरूको स्मरण हुन सकेन अर्थात् उनी आफ्ना सबै किसिमका प्रयासहरूमा पूर्ण रूपमा असफल भए॥२२॥ त्यसपछि अत्यन्त क्रोधित भएका अर्जुनले आफ्ना शत्रुहरूमाथि बाणहरूको वर्षा गराउन थाले, तर गाण्डीव धनुष धारण गरेका अर्जुनद्वारा प्रहार गरिएका ती सबै किसिमका बाणहरू उनका शत्रुहरूका शरीरको छालामा साधारण किसिमको घाउ बनाउन मात्र सफल भए अर्थात् अत्यन्त पराक्रमी अर्जुनले चलाएका बाणहरूले उनका शत्रुलाई पराजित गराउन सकेनन्॥२३॥ तथा अर्जुनको प्रभाव अर्थात् शक्तिमा अत्यन्त ह्रास आएका कारणले गर्दा उनलाई अग्निद्वारा प्रदान गरिएका कहिल्यै नसकिने अर्थात् अक्षय बाणहरू ती अहीरहरूसँग युद्ध गर्दाका अवस्थामा सकिए अथवा पूर्ण रूपमा नष्ट भए॥२४॥ त्यसपछि अर्जुनले मनमनै चिन्तन गर्नथाले, मैले जुन बाणहरूको प्रयोग गरेर अनेकौं राजाहरूमाथि विजय प्राप्त गरेको थिएँ, त्यो सबै परमात्मा श्रीकृष्णको प्रभावको प्रसाद मात्र थियो। त्यसमा आफ्नो कुनै किसिमको महत्त्वपूर्ण भूमिका रहेको थिएन ॥२५॥ त्यसपछि अर्जुनको उपस्थिति भएकै अवस्थामा ती डाँका अर्थात् अत्याचारी अहीरहरूले परमात्मा श्रीकृष्णका स्त्रीरत्नहरूलाई समाएर लगे र कुनै कुनै स्त्रीहरू आफ्नो स्वेच्छाले तिनीहरूका साथमा गएका थिए ॥२६॥ आफ्ना बाणहरू पूर्ण रूपमा समाप्त भइसकेपछि धनञ्जय अर्जुनले आफ्नो गाण्डीव धनुषको टुप्पोले नै ती अत्याचारीहरूमाथि प्रहार गर्न थाले, तर हे मुनि! ती डाँका वा अत्याचारीहरू उनले त्यसरी आफूमाथि प्रहार गरेको देखेर हाँस्न थाले ॥२७॥ हे मुनिश्रेष्ठ! यसप्रकार अर्जुनले हेर्दा–हेर्दै अर्थात् उनकै अगाडिबाट ती अत्याचारीहरूले अर्थात् म्लेच्छहरूले वृष्णि र अन्धक वंशका स्त्री–रत्नहरूलाई अपहरण गरेको शैलीमा लिएर गए॥२८॥ त्यस समयमा कहिल्यै पनि पराजयको सामना नगरेका अर्थात् पराजय नभोगेका अर्जुन अत्यन्त दुःखी भएर रुँदै "ओहो यो कस्तो दुःख हो, कस्तो दुःख" अहो! भगवान्ले मलाई नराम्ररी झुक्याउनुभयो भन्न थाले॥२९॥ ओहो! त्यही

तद्धनुस्तानि चास्त्राणि स रथस्ते च वाजिनः ।
सर्वमेकपदे नष्टं दानमश्रोत्रिये यथा ॥३०॥

अहोऽतिबलवद्दैवं विना तेन महात्मना ।
यदसामर्थ्ययुक्तोऽपि नीचवर्गे जयप्रदम् ॥३१॥

तौ बाहू स च मे मुष्टिः स्थानं तत् सोऽस्मि चार्जुनः ।
पुण्येनैव विना तेन गतं सर्वमसारताम् ॥३२॥

ममार्जुनत्वं भीमस्य भीमत्वं तत्कृतं ध्रुवम् ।
विना तेन यदाभीरैर्जितोऽहं कथमन्यथा ॥३३॥

पराशर उवाच

इत्थं वदन् ययौ जिष्णुर्मथुराख्यं पुरोत्तमम् ।
चकार तत्र राजानं वज्रं यादवनन्दनम् ॥३४॥

स ददर्श ततो व्यासं फाल्गुनः काननाश्रयम् ।
तमुपेत्य महाभागं विनयेनाभ्यवादयत् ॥३५॥

तं वन्दमानं चरणाववलोक्य मुनिश्चिरम् ।
उवाच पार्थ विच्छायः कथमद्यत्वमीदृशः ॥३६॥

अवीरजोऽनुगमनं ब्रह्महत्याथवा कृता ।
दृढाशाभङ्गदुःखी वा भ्रष्टच्छायोऽसि साम्प्रताम् ॥३७॥

गाण्डीव धनुष, तिनै शस्त्रहरू, त्यही अतुलनीय रथ र तिनै घोडाहरू हुन्, तर आज यी सबै अवैदिक अर्थात् दुराचारी ब्राह्मणलाई दिइएको दानका जसरी नै एकैपटक नष्ट भए अर्थात् औचित्य-विहीन भए ॥३०॥ आहो! परमात्मा कति बलवान् हुनुहुन्छ, जब परमात्मा श्रीकृष्णले मर्त्यलोकको परित्याग गरिदिनु भयो, त्यसपछि मैले असमर्थ र नीच जातिका यी म्लेच्छहरूबाट पराजित भएर अपमानित हुनुपर्‍यो अर्थात् दैवले यी अहीरहरूलाई विजयश्रीबाट सम्पन्न बनाइदिए ॥३१॥ ओहो! कस्तो आश्चर्य, मेरा तिनै अत्यन्त शक्तिशाली हातहरू, त्यही मुट्ठी, त्यही स्थान र म पनि त्यही अर्जुन हुँ, तर परब्रह्म परमात्मा श्रीकृष्ण आफ्नो स्वर्गलोकमा जानुभएपछि अर्थात् उहाँको सामीप्यताको अभाव भएपछि आज यी सबै सारविहीन अथवा अस्तित्वविहीन भए ॥३२॥ निश्चय पनि ममा रहेको अर्जुनत्व र भीममा रहेको भीमत्व परमात्मा श्रीकृष्णका कृपाको प्रभाव थियो । यदि त्यो अर्जुनत्व मेरो आफ्नै भएको भए आज उहाँ परमात्मा श्रीहरिको अनुपस्थितिमा महारथीहरूमा सर्वश्रेष्ठ म अर्जुनलाई यी अहीरहरूले जित्न सक्ने थिएनन् अर्थात् मैले यिनीहरूबाट पराजित हुनुपर्ने थिएन ॥३३॥ **पराशरजीले भन्नुभयो–** यस प्रकारको चिन्तन गर्दै अर्जुन मथुरा नाम भएको अत्यन्त उत्तम नगरमा आए । त्यहाँ उनले यदुनन्दन वज्रलाई राजाका रूपमा स्थापित गरेर उनको राज्याभिषेक गरिदिए ॥३४॥ त्यसपछि उनले वनमा निवास गर्नुहुने महर्षि व्यासलाई देखे एवं धर्मात्मा व्यासजीका सामीप्यमा गएर उनलाई अत्यन्त श्रद्धा र विनम्रतापूर्वक प्रणाम गरे अर्थात् एउटा शिष्यको दायित्व निर्वाह गरे ॥३५॥ महर्षि वेदव्यासले धेरै समयसम्म आफ्नो चरणमा झुकिरहेका अर्जुनलाई भन्नुभयो– हे अर्जुन! आज तिमी किन यसरी कान्तिविहीन भइरहेको छौ? अर्थात् तिमीमा यस किसिमको नैराश्य उत्पन्न हुनुको कारण के हो? ॥३६॥ के तिमीले एउटा भेडाले उडाएको धुलोलाई अर्को भेडाले पछ्याएर दुवै एउटै खाल्डोमा परे जसरी नै कुनै अविवेकी काम गर्‍यौ? अथवा ब्रह्महत्या गर्‍यौ वा तिम्रो कुनै परम लक्ष्यमा व्यवधान उत्पन्न भयो ? जसको कारणले गर्दा तिमीले यस्तो निन्याउरो मुख वा अनुहार बनाइरहेका छौ? ॥३७॥ तिमीले सन्तान

सान्तानिकादयो वा ते याचमाना निराकृताः ।

अगम्यस्त्रीरतिर्वा त्वं येनासि विगतप्रभः ॥३८॥

भुक्तोऽप्रदाय विप्रेभ्य एको मिष्टमथो भवान् ।

किं वा कृपणवित्तानि हृतानि भवतार्जुन ॥३९॥

कच्चित्त्वं शूर्पवातस्य गोचरत्वं गतोऽर्जुन ।

दुष्टचक्षुर्हतो वापि निःश्रीकः कथमन्यथा ॥४०॥

स्पृष्टो नखाम्भसा चाथ घटाम्भप्रोक्षितोऽपि वा ।

केनातीवासि विच्छायो न्यूनैर्वा युधि निर्जितः ॥४१॥

पराशर उवाच

ततः पार्थो विनिःश्वस्य श्रूयतां भगवन्निति ।

प्रोक्त्वा यथावदाचष्ट व्यासायात्मपराभवम् ॥४२॥

अर्जुन उवाच

यद्बलं यच्च नस्तेजो यद्वीर्यं यत्पराक्रमः ।

या श्रीश्छाया च नः सोऽस्मान् परित्यज्य गतो हरिः ॥४३॥

इश्वरेणापि महता स्मितपूर्वाभिभाषिणा ।

हीना वयं मुने तेन जातास्तृणमया इव ॥४४॥

प्राप्तिको कामनाबाट अभिप्रेरित भएर तिमीसँग विवाह गर्न अनुरोध गर्नेको अपमान त गरेनौ? अथवा तिमीले समागम वा सम्भोग गर्न नहुने कुनै स्त्रीसँग सम्भोग त गरेनौ? जसको प्रभावले गर्दा तिमी यस समयमा यसरी तेज वा शक्तिविहीन भएका छौ अर्थात् अत्यन्त निराश भएका छौ ॥३८॥ हे अर्जुन! तिमीले ब्राह्मणलाई समर्पण नगरी अथवा नदिइकन एक्लैले मिष्ठान्न अर्थात् स्वादबाट सम्पन्न पदार्थको भोजन त गरेनौ, अथवा तिमीले गरिबको धन–सम्पत्तिको अपहरण त गरेनौ अर्थात् लिएनौ? ॥३९॥ हे अर्जुन! तिमीले नाङ्लोबाट आएको वायुको सेवन त गरेनौ, तिम्रा आँखाहरूमा पीडा त भइरहेको छैन अथवा तिमीले कसैको हत्या त गरेनौ? तिमी यस किसिमले श्रीविहीन अर्थात् ऐश्वर्यविहीन भएका छौ ॥४०॥ अथवा तिमीले नङ परेको पानीको सदुपयोग त गरेनौ? तिमीले घैंटोबाट छचल्किएर उछिट्टिएको पानीले स्नान त गरेनौ अर्थात् त्यस किसिमको पानी तिम्रो शरीरमा त परेन अथवा नीच जातिको वा शक्तिविहीन पुरुषबाट तिमी पराजित त भएनौ? फेरि तिमी यस्तो निराश किन भइरहेका छौ अर्थात् तिम्रो अनुहार किन यसरी बादलले ढाकेको सूर्य जसरी अत्यन्त मलिन भएको हो ? ॥४१॥ **पराशरजीले भन्नुभयो**– त्यसपछि लामो–लामो श्वास फेर्दै अर्जुनले भने– हे भगवन्! सुन्नुहोस्, भनेर अर्जुनले अत्यन्त भावुक हुँदै आफू अहीरहरूबाट पराजित भएको विषयमा आरम्भदेखि अन्तसम्मका सबै कुराहरू यथार्थ रूपमा वेदव्यासलाई सुनाए ॥४२॥ **अर्जुनले भने**– एकमात्र परब्रह्म परमात्मा श्रीकृष्ण मेरो बल, तेज, वीर्य, पराक्रम, श्री (ऐश्वर्य) र कान्ति (सौन्दर्य) सबै हुनुहुन्थ्यो, उहाँ मलाई एक्लै छाडेर स्वर्गलोकमा जानुभयो अर्थात् उहाँले मनुष्य शरीरको परित्याग गर्नुभयो ॥४३॥ हे मुनीश्वर! अत्यन्त साधारण पुरुषसँग पनि मुस्कुराउँदै अत्यन्त सुमधुर वचनमा कुराकानी गर्नुहुने परब्रह्म परमात्मा श्रीहरिबाट परित्याग भएको म एउटा सुकेको काठको अत्यन्त सानो छेस्को जसरी नै सामर्थ्यविहीन भएको छु अर्थात् अब ममा त्यो पहिलेको जस्तो शक्ति रहेको छैन ॥४४॥ जो मेरा

अस्त्राणां सायकानाञ्च गाण्डीवस्य तथा मम ।

सारता याभवन्मूर्तिः स गतः पुरुषोत्तमः ॥४५॥

यस्यावलोकनादस्मान् श्रीर्जयः सम्पदुन्नतिः ।

न तत्याज स गोविन्दस्त्यक्त्वास्मान् भगवान् गतः ॥४६॥

भीष्मद्रोणाङ्गराजाद्यास्तथा दुर्योधनादयः ।

यत्प्रभावेण निर्दग्धाः स कृष्णस्त्यक्तवान् भुवम् ॥४७॥

निर्यौवनाहतश्रीका भ्रष्टच्छायेव मेदिनी ।

विभाति तात नैकोऽहं विरहे तस्य चक्रिणः ॥४८॥

यस्य प्रभावाद्भीष्माद्यैर्मय्यग्नौ शलभायितम् ।

विना तेनाद्य कृष्णेन गोपालैरस्मि निर्जितः ॥४९॥

गाण्डीवं त्रिषु लोकेषु ख्यातिं यदनुभावतः ।

गतं तेन विनाभीरलगुडैस्तन्निराकृतम् ॥५०॥

स्त्रीसहस्राण्यनेकानि मन्नाथानि महामुने ।

यततो मम नीतानि दस्युभिर्लगुडायुधैः ॥५१॥

र मैले प्रयोगमा ल्याइरहेका अस्त्र–शस्त्रहरू अर्थात् बाणहरू एवं गाण्डीव धनुषका सार्थकताको परम कारण अर्थात् म, मेरा बाणहरू र गाण्डीव धनुषका शक्तिको मूलस्रोत हुनुहुन्थ्यो, उहाँ परमात्मा श्रीपुरुषोत्तम मलाई यो भयावह संसारमा शक्तिविहीन र अनाथ बनाएर जानुभयो ॥४५॥ जुन परमात्माको कृपादृष्टि सधैं ममा रहेका कारणले श्री, विजय, सम्पत्ति उन्नतिले कहिल्यै मलाई परित्याग गरेका थिएनन् अर्थात् तिनीहरू मेरो सहायक भएर रहेका थिए; उहाँ परमात्मा श्रीगोविन्दले हामीहरूलाई पूर्ण रूपमा परित्याग गरेर आफ्नो स्वधाममा जानुभयो अर्थात् मर्त्यलोकबाट सधैंका लागि विदा हुनुभयो ॥४६॥ जसको प्रभावरूपी अत्यन्त प्रज्वलित अग्निमा जलेर भीष्म, द्रोण, कर्ण र दुर्योधन जस्ता महारथीहरू पूर्ण रूपमा नष्ट भएका थिए, उहाँ सम्पूर्ण जगत्का सहृदयी, अनन्य मित्र एवम् प्राणीमात्रका अन्तरात्मास्वरूप परब्रह्म परमात्मा श्रीकृष्ण पृथ्वीलाई परित्याग गरेर स्वर्गलोकमा जानुभयो ॥४७॥ हे तात! (यसको प्रयोग आफूभन्दा मान्यजनका रूपमा गरिएको छ) उहाँ सुदर्शनचक्र धारण गर्नुहुने परमात्मा श्रीकृष्णसँग वियोगमा मेरो अवस्था मात्र कान्ति अर्थात् सौन्दर्यविहीन भएको नभएर पृथ्वी पनि उहाँसँग वियोग भएका कारणले यौवनविहीन, अँध्यारो मुख लगाएकी अर्थात् अत्यन्त उदास, डरपोक स्त्रीको जस्तै सौन्दर्यबाट वञ्चित भएकी छन् । ।४८॥ जसको प्रभावबाट भीष्म आदि अत्यन्त पराक्रमी वीरहरू बलिरहेको आगोमा परेको पुतलीका जसरी पूर्णरूमा भष्म भएका थिए, त्यही अर्जुन म आज परमात्मा श्रीकृष्णबाट परित्याग भएका कारणले अहीरहरूबाट पराजित भएर उनीहरूबाट अपमानित भएको छु ॥४९॥ जुन परमात्मा श्रीकृष्णका प्रभावले गर्दा मेरो यो गाण्डीव धनुष तीनोटै लोकहरूमा अत्यन्त प्रशंसनीय भएको थियो, उहाँले परित्याग गरिदिनुभएकाले आज म अहीरहरूको लौरोबाट पराजित भएँ अत्यन्त अपमानित भएँ ॥५०॥ हे मुनीश्वर! आज म स्वयं उनीहरूको रक्षक भएर परमात्मा श्रीकृष्णका हजारौं स्त्रीहरूलाई आफूसँगै लिएर आइरहेको थिएँ, तर डाँका अर्थात् अत्याचारीहरूले साधारण लौरोको माध्यमद्वारा मेरो प्रयासलाई असफल बनाइदिएर ती स्त्रीहरूको अपहरण गरे अर्थात् उनीहरूलाई लिएर गए ॥५१॥ हे वदेव्यासजी! आज

ानीयमानमाभीरैः कृष्ण कृष्णावरोधनम् ।

तं यष्टिप्रहरणैः परिभूय बलं मम ॥५२॥

ैः श्रीकता न मे चित्रं यज्जीवामि तदद्भुतम् ।

ीचावमानपङ्काकी निर्लज्जोऽस्मि पितामह ॥५३॥

यास उवाच

लं तै व्रीडया पार्थ न त्वं शोचितुमर्हसि ।

वेहि सर्वभूतेषु कालस्य गतिरीदृशी ॥५४॥

ालो भवाय भूतनामभवाय च पाण्डव ।

ालमूलमिदं ज्ञात्वा भव स्थैर्यपरोऽर्जुन ॥५५॥

द्यः समुद्रा गिरयः सकला च वसुन्धरा ।

वा मनुष्याः पशवस्तरवश्च सरीसृपाः ।५६।

ृष्यः कालेन कालेन पुनर्यास्यान्ति संक्षयम् ।

ालात्मकमिदं सर्वं ज्ञात्वा शममवाप्नुहि ॥५७॥

ती अत्याचारीहरूले लौरोरूपी अस्त्रको प्रयोग गरेर मेरो शक्तिमाथि विजय प्राप्त गर्दै अर्थात् अपमानपूर्वक मलाई पराजित गर्दै मद्वारा ल्याइएका परमात्मा श्रीकृष्णको परिवारलाई अपहरण गरेर लगे ॥५२॥ हे पितामह! मेरो सौन्दर्यमा उदासीपन आउनु कुनै आश्चर्यको कुरा होइन, तर म अहिलेसम्म जीवितावस्थामा रहेको छु, यो अत्यन्त आश्चर्यको विषय हो । किनकि, नीचजातिका पुरुषहरूद्वारा पराजित हुँदै अपमानको भुमरीमा रुमल्लिएर अहिलेसम्म म जीवित रहेको छु, यो नै आश्चर्यमय कुरा हो ॥५३॥ **श्री वेदव्यासजीले भन्नुभयो**– हे पार्थ! तिमी अनावश्यक रूपमा आफैं लज्जित भइरहेका छौ, यसैले यस्तो कार्य तिमीजस्तो बुद्धिमान् पुरुषका लागि कल्याणदायक हुन सक्दैन तथा तिमीले यस विषयमा शोक गरिरहनु उचित हुँदैन । किनकि सबै प्राणीमात्रको लागि काल गतिको यसरी नै घुमिरहेको हुन्छ अर्थात् कालले सानो–ठूलो, बलवान्– निर्बल, धनी–गरिब भएका आधारमा भेदभावपूर्ण व्यवहार नगरेर सबैमा समान किसिमको व्यवहार गर्दछ। यसैले तिमीले आफ्नो अन्तरात्मामा उत्पन्न भएको पीडाबाट सम्पन्न भएको चिन्तालाई परित्याग गरिदेऊ ॥५४॥ हे पाण्डव! काल अर्थात् समय अत्यन्त बलवान् हुन्छ अर्थात् कालमाथि कसैले विजय प्राप्त गर्न सक्दैन । किनकि यो काल अर्थात् समय नै मनुष्यहरूको उन्नति र अवनतिमा कारकतत्त्वको रूपमा रहेको हुन्छ । त्यसकारण हे अर्जुन! यी सबैलाई अर्थात् विजय–पराजय आदिलाई कालको स्वामित्वमा रहेको सम्झिएर तिमीले आफूलाई शान्त बनाऊ अर्थात् तिमीले धैर्यधारण गर अथवा शान्त बन ॥५५॥ नदी–नालाहरू, समुद्र, पर्वतहरू, सम्पूर्ण पृथ्वी, देवता, मनुष्य, पशु, रूख–बिरुवाहरू तथा सर्प आदि जे जति उत्पन्न भएका छन्, ती सबैको सृष्टि कालकै आधारमा भएको हुन्छ र तिनीहरूको विनाशमा पनि कालकै मुख्य भूमिका रहन्छ । त्यसकारण हे अर्जुन! यी सबै प्रपञ्चलाई कालबाट पूर्ण रूपमा व्याप्त भएको सम्झ, तिमीजस्तो वीर पुरुषका लागि यस किसिमको शोकाकुल अवस्था कल्याणदायक हुँदैन। त्यसले तिमी शान्त होऊ र यसलाई प्रकृतिको नियम सम्झिएर धैर्यधारण गर ॥५६–५७॥ हे धनन्जय! तिमीले

यच्चाह कृष्णमाहात्म्यं तत्तथैव धनञ्जय।

भारावतारकार्यार्थमवतीर्णः स मेदिनीम् ॥५८॥

भाराक्रान्ता धरा याता देवानां समितिं पुरा।

तदर्थमवतीर्णोऽसौ कालरूपी जनार्दनः ॥५९॥

तच्च निष्पादितं कार्यमशेषा भूभुतो हताः।

वृष्ण्यन्धककुलं सर्वं तथा पार्थोपसंहृतम् ॥६०॥

न किञ्चिदन्यत् कर्त्तव्यमस्य भूमितले प्रभोः।

अतो गतः स भगवान् कृतकृत्यो यथेच्छया ॥६१॥

सृष्टिं सर्गे करोत्येष देवदेवः स्थितौ स्थितिम्।

अन्तेऽन्ताय समर्थोऽयं साम्प्रतं हि यथा कृतम् ॥६२॥

तस्मात् पार्थ न सन्तापस्त्वया कार्यः पराभवात्।

भवन्ति भवकालेषु पुरुषाणां पराक्रमाः ॥६३॥

परमात्मा श्रीकृष्णको महात्म्यका विषयमा जसरी वर्णन गऱ्यौ, त्यो सबै यथार्थ सत्य हो। किनकि, उहाँ कालस्रूप परब्रह्मपरमात्मा श्रीकृष्णले पृथ्वीमा अत्यधिक मात्रामा बढिरहेको अन्याय, अत्याचार एवं अधर्मको विनाश गरेर धर्मको स्थापना गर्नका लागि पृथ्वीमा अवतार लिनुभएको थियो। त्यसकारण परमात्मा श्रीकृष्ण साक्षात् कालस्वरूप हुनुहुन्छ। परापूर्व कालमा अत्याचारीद्वारा पृथ्वीमा उत्पन्न गराइएको अधर्म, अन्याय र अत्याचारको भारबाट अत्यन्त पीडित भएर पृथ्वी देवताहरूको सभामा गएकी थिइन्। त्यसकारण परमात्मा श्रीकृष्णले उनीमाथि परिरहेको पीडाबाट मुक्त गराउनका लागि अवतार लिनुभएको थियो ॥५८-५९॥ परमात्मा श्रीकृष्णले जुन उद्देश्य अवतार लिनुभएको थियो, त्यो लक्ष्य पूर्ण भइसकेको छ। पृथ्वीको भारका रूपमा रहेका अनेकौं राजाहरू मारिइसकेका छन्। हे पार्थ! उहाँले वृष्णि र अन्धकजस्ता सबै यादवहरूको पनि पूर्ण रूपमा विनाश गरिदिनुभएको छ ॥६०॥ त्यसकारण परमात्मा श्रीवासुदेवका लागि यो संसारमा कुनै पनि कार्य बाँकी रहेको छैन अर्थात् उहाँले अवतार लिनाको उद्देश्य पूर्ण रूपमा सफल भइसकेको छ। त्यसकारण परमात्मा श्रीकृष्णले कृतकृत्य अर्थात् पूर्ण रूपमा सन्तुष्ट हुनुभएर स्वेच्छाअनुसार मर्त्यलोकको परित्याग गरेर स्वर्गलोकमा जानुभएको हो। त्यसैले तिमीले यस विषयलाई आधार मानेर व्याकुल हुनुहुँदैन ॥६१॥ उहाँ परमात्माले नै सृष्टिकालमा सृष्टिको रचना गर्नुहुन्छ, स्थितिका समयमा पालन-पोषण गर्नुहुन्छ र प्रलयका समयमा सबै जीवमात्र सहित पृथ्वीको विनाश गर्नुहुन्छ एवं यी सबै कार्य गर्न उहाँ सक्षम हुनुहुन्छ। यस समयमा उहाँले आफ्नो सबै कार्य सम्पन्न गरिसक्नु भएको छ। त्यसकारणले उहाँले मर्त्यलोक परित्याग गरी स्वर्गलोक प्रस्थान गर्नुभएको हो ॥६२॥ हे अर्जुन! तिमीले अहीरहरूबाट पराजित भएका कारणले यसरी व्याकुल हुन उचित हुँदैन अर्थात् तिमी दुःखी नहोऊ। किनकि, उदयको समय आएका अवस्थामा पुरुषहरूले यस्तै किसिमको कार्य गर्नुपर्दछ जसबाट त्यस पुरुषको प्रशंसा हुन्छ ॥६३॥ हे अर्जुन! जुन

**त्वयैकेन हता भीष्म–द्रोण–कर्णादयो नृपाः ।**

**तेषामर्जुन कालोत्थः किं न्यूनाभिभवो न सः ॥६४॥**

**विष्णोस्तस्य प्रभावेण यथा तेषां पराभवः ।**

**ततस्तथैव भवतो दस्युभ्योऽन्ते पराजयः ॥६५॥**

**स देवोऽन्यशरीराणि समाविश्य जगत्स्थितिम् ।**

**करोति सर्वभूतानां नाशं चान्ते जगत्पतिः ॥६६॥**

**भवोद्भवे च कौन्तेय सहायोऽभूज्जनार्दनः ।**

**भवान्ते त्वद्विपक्षास्ते केशवेनावलोकिताः ॥६७॥**

**कः श्रद्दध्यात् सगाङ्गेयान् हन्यास्त्वं सर्वकौरवान् ।**

**आभीरेभ्यश्च भवतः कः श्रद्दध्यात् पराभवम् ॥६८॥**

**पार्थैतत् सर्वभूतस्य हरेर्लीलाविचेष्टितम् ।**

**त्वया यत् कौरवा ध्वस्ता यदाभीरैर्भवान् जितः ॥६९॥**

**गृहीता दस्युभिर्याश्च भवतः शोचिता स्त्रियः ।**

**तदप्यहं यथावृत्तं कथयामि तवार्जुन ॥७०॥**

समयमा तिमी एक्लैले भीष्म, द्रोण र कर्णजस्ता अत्यन्त शक्तिशाली राजाहरूको विनाश गरेका थियौ अर्थात् तिनीहरूलाई सहज रूपमा मृत्युशय्यामा सुताएका थियौ, त्यस समयमा कालको क्रमअनुसार प्राप्त भएको आफूभन्दा कम शक्ति भएको पुरुषबाट उनीहरू पराजित भएका थिएनन्? अर्थात् उनीहरूका तुलनामा तिमी शक्तिहीन थिएनौ? ॥६४॥ जसरी परमात्मा श्रीविष्णुको प्रभावका कारणले तिमीले भीष्म आदि महारथीहरूलाई पराजित गरेका थियौ, त्यसैगरी अन्त्यमा दस्युहरू अर्थात् डाँकाहरूबाट तिमी पराजित भएका छौ । यो सबै समयको साधारण नियम हो ॥६५॥ उहाँ सम्पूर्ण जगतका अधिपति परमात्मा श्रीविष्णुले अन्य शरीरहरूमा प्रवेश गर्नुभएर जगत्को पालन–पोषण गरिरहनु भएको छ र अन्तमा अर्थात् प्रलयका समयमा उहाँले नै सबै प्राणीमात्रको संहार अथवा विनाश गर्नुहुन्छ ॥६६॥ हे कौन्तेय! जुन समयमा तिम्रो भाग्यको उदय भएको थियो, त्यस समयमा परमात्मा श्रीजनार्दन तिम्रा प्रेरणाको स्रोत अर्थात् सहायक भएर रहनुभएको थियो। जब तिम्रो भाग्यको अन्त समय आयो, त्यसपछि परमात्मा श्रीकेशवको कृपादृष्टि तिम्रो शत्रुहरूमा अवस्थित हुन पुग्यो अर्थात् समयको प्रभावले गर्दा तिमी सामर्थ्यविहीन भएका छौ ॥६७॥ तिमीले गङ्गापुत्रजस्ता महारथीलाई अत्यन्त सहज रूपमा पराजित गर्‍यौ, त्यस समयमा परमात्माका कृपाले पूर्ण रूपमा शक्ति भएका थियौ, अहिले तिमी अहीरहरूबाट पराजित भयौ, यस समयमा परमात्माको कृपादृष्टि उनीहरूले प्राप्त गरेका छन्, तर तिमीबाट भएका कामलाई कसैले विश्वास गर्न सक्दैन । त्यसैले यो समयको प्रभाव मात्र हो ॥६८॥ हे पार्थ! तिमीले परमात्मा श्रीकृष्णको आशीर्वादका प्रभावले कौरवहरूको पूर्ण रूपमा विनाश गर्‍यौ एवं तिमीलाई अहीरहरूले पराजित गरिदिए अर्थात् तिम्रा पराक्रमको उपहास गरिदिए। यो सबै प्राणीमात्रका अन्तरात्मामा निवास गर्नुहुने परमात्मा श्रीहरिको लीलाबाट सम्पन्न भएको खेल मात्र हो ॥६९॥ हे अर्जुन! ती अत्याचारीहरूले जुन स्त्रीहरूलाई अपहरण गरेर लिएर गए र त्यसैलाई आफ्नो अपमान भएको भनेर तिमी यसरी चिन्तित भइरहेका छौ, जुन नहुनुपर्ने थियो। म तिमीलाई यसका विषयमा पनि अत्यन्त विस्तारपूर्वक बताइदिन्छु, ध्यान दिएर सुन ॥७०॥ हे पार्थ! प्राचीन

अष्टावक्रः पुरा विप्रो जलवासरतोऽभवत्।

बहून् वर्षगणान् पार्थ गृणन् ब्रह्म सनातनम् ॥७१॥

जितेष्वसुरसङ्घेषु मेरुपृष्ठे महोत्सवः।

बभूव तत्र गच्छन्त्यो ददृशुस्तं वरस्त्रियः ॥७२॥

रम्भातिलोत्तमाद्याश्च शतशोऽथ सहस्रशः।

तुष्टुवुस्तं महात्मानं प्रशशंसुश्च पाण्डव ॥७३॥

आकण्ठमग्नं सलिले जटाभारधरं मुनिम्।

विनयावनताश्चैनं प्रणेमुः स्तोत्रतत्पराः ॥७४॥

यथा यथा प्रसन्नोऽसौ तुष्टुवुस्तं तथा तथा।

सर्वास्ताः कौरवश्रेष्ठ वरिष्ठं तं द्विजन्मनाम् ॥७५॥

अष्यवक्र उवाच

प्रसन्नोऽहं महाभागा भवतीनां यदिष्यते।

मत्तस्तद्व्रियतां सर्वं प्रदास्याम्यतिदुर्लभम् ॥७६॥

रम्भातिलोत्तमाद्यास्तं वैदिक्योऽप्सरसोऽब्रुवन्।

प्रसन्ने त्वय्यपर्याप्तं किमस्माकमिति द्विज ॥७७॥

इतरास्त्वब्रुवन् विप्र प्रसन्नोऽसि भवान् यदि।

तदिच्छामः पतिं प्राप्तुं विप्रेन्द्र पुरुषोत्तमम् ॥७८॥

कालमा अष्टावक्र नाम भएका एउटा ऋषिले सनातन ब्रह्मको चिन्तन अथवा उपासना गर्दै धेरै लामो समयसम्म पानीमा निवास गरेका थिए अर्थात् पानीमा बसेर सनातन ब्रह्मको ध्यान गरेका थिए ॥७१॥ त्यस समयमा देवताहरूले असुरहरूलाई पराजित गरेका थिए अर्थात् देवताहरूले विजय प्राप्त गरेका थिए र त्यसै विजयको उपलक्षमा सुमेरु पर्वतमा एउटा विजयोत्सवको आयोजना गरिएको थियो। हे पाण्डवहरूमा श्रेष्ठ अर्जुन! त्यही उत्सवमा सहभागी हुन गइरहेका रम्भा, तिलोत्तमा आदि सैकडौं हजारौं अप्सराहरूले बाटामा ती अष्यवक्र ऋषिले पानीमा बसेर तपस्या गरिरहेको देखेर उनको स्तुति गर्न थाले ॥७२–७३॥ स्तुति गर्नमा अत्यन्त सिपालु, उत्साहित एवं विनम्र स्वभाव भएका ती अप्सराहरूले आफ्नो घाँटीसम्म आएको पानीमा डुबेर एवं अत्यन्त लामो कपाल र दाह्रीबाट सम्पन्न भएर एकाग्रतापूर्वक सनातन् ब्रह्मको तपस्या गरिरहेका ती अष्यवक्र ऋषिलाई आदरपूवर्क प्रणाम गर्न थाले अर्थात् उहाँको प्रशंसासहित श्रद्धापूर्वक अभिवादन गर्न थाले॥७४॥ हे कौरववंशीय कुलभूषण अर्जुन! ब्राह्मणहरूमा सर्वोत्कृष्ट अष्टावक्र मुनि जसरी स्तुति गर्दा अत्यन्त प्रसन्न हुन सक्दछन्, ती अप्सराहरूले त्यसै अनुसारको स्तुति गर्न थाले अर्थात् ती मुनिको चाहना अनुसारको स्तुति गरे ॥७५॥ **अष्टावक्र मुनिले भने**– हे सौभाग्यवती अप्सराहरू! म तिमीहरूको स्तुतिबाट अत्यन्त प्रसन्न भएँ, तिमीहरू आफ्नो मनोकामना अनुसारको वरदान माग। यदि तिमीहरूले अत्यन्त दुर्लभ वरदान माग्यौ भने पनि म तिमीहरूको चाहनाअनुसार वरदान अवश्य दिन सक्दछु ॥७६॥ त्यसपछि रम्भा, तिलोत्तमा आदि वेदहरूमा अत्यन्त प्रसिद्ध भएका अप्सराहरूले मुनिसँग भने– हे ब्राह्मणश्रेष्ठ! तपाईं प्रसन्न भइदिनु भएपछि हामीहरूले प्राप्त गर्नै नसक्ने अर्थात् हाम्रा लागि अत्यन्त दुर्लभ वस्तु नै के छ र ? ॥७७॥ अन्य अप्सराहरूले भने – हे सर्वोत्कृष्ट ब्राह्मण! यदि तपाईं हामीहरूबाट प्रसन्न हुनुभएको छ भने हामीहरूलाई यस्तो वरदान दिनुहोस्, जसको प्रभावले गर्दा भविष्यमा परब्रह्म परमात्मा श्रीकृष्ण पुरुषोत्तमलाई आफ्नो पतिका रूपमा प्राप्त गर्न सकौं अर्थात् हामीहरूलाई उहाँका पत्नी भएर उहाँसँगै बस्ने अवसर प्राप्त होस् ॥७८॥ **वेदव्यासले**

व्यास उवाच

एवं भविष्यतीत्युक्त्वा उत्ततार जलान्मुनिः ।

ददृशस्तास्तमुत्तीर्णं विरूपं वक्रमष्टधा ॥७९॥

तं दृष्ट्वा गूहमानानां यासां हासः स्फुटोऽभवत् ।

ताः शशाप मुनिः कोपमवाप्य कुरुनन्दन ॥८०॥

यस्माद् विकृतरूपं मां ज्ञात्वा हासावमानना ।

भवतीभिः कृता तस्मादेतं शापं ददामि वः ॥८१॥

मत्प्रसादेन भर्तारं लब्ध्वा तं पुरुषोत्तमम् ।

मच्छापोपहताः सर्वा दस्युहस्तं गमिष्यथ ॥८२॥

वेदव्यास उवाच

इत्युदीरितमाकर्ण्य मुनिस्ताभिः प्रसादितः ।

पुनः सुरेन्द्रलोकं वै प्राह भूयो गमिष्यथ ॥८३॥

एवं तस्य मुनेः शापादष्टवक्रस्य केशवम् ।

भर्तारं प्राप्य ता दस्युहस्तं याता वराङ्गना ॥८४॥

तत्त्वया नात्र कर्त्तव्यः शोकोऽल्पोऽपि हि पाण्डव ।

तेनैवाखिलनाथेन सर्वं तदुपसंहृतम् ॥८५॥

भवतां चोपसंहारमासन्नं तेन कुर्वता ।

बलं तेजस्तथा वीर्यं माहात्म्यं चोपसंहृतम् ॥८६॥

**भन्नुभयो**– त्यसपछि "तिमीहरूको मनोकामना पूर्ण हुनेछ" भन्दै यस प्रकारको वरदान दिएर अष्टावक्र मुनि पानीबाट बाहिर निस्किए। उनी बाहिर निस्कँदाका समयमा अप्सराहरूले ती मुनिलाई शरीरको आठ ठाउँमा टेडो-मेडो भएका कारणले अत्यन्त कुरुप शरीर भएको देखे ॥७९॥ हे कुरुवंशीय अर्जुन! उनको स्वरूपलाई अर्थात् शारीरिक बनावटलाई देखेर जुन अप्सराहरूले आफूमा उत्पन्न भएको हाँसोलाई लुकाउन असफल प्रयास गरेतापनि अन्ततः उनीहरूको हाँसो फुस्कियो; त्यसपछि अष्टावक्र मुनिले अत्यन्त क्रोधित भएर ती अप्सराहरूलाई सराप (श्राप) दिए ॥८०॥ मलाई विरूप देखेर अर्थात् मेरो शारीरिक बनावट बाङ्गो-टिङ्गो भएको देखेर तिमीहरूले हाँसेर मेरो अपमान अर्थात् अवहेलना गर्‍यौ । त्यसकारण म सराप दिन्छु, जसको प्रभावले गर्दा तिमीहरूले मबाट प्राप्त भएको वरदानबाट परमात्मा श्रीपुरुषोत्तमलाई पतिका रूपमा पाए तापनि मेरो सरापका (श्राप) का कारणले तिमीहरू डाँकाहरूका हातमा पर्नेछौ अर्थात् तिमीहरूलाई डाँकाहरूले अपहरण गरेर आफ्नो नियन्त्रणमा राख्नेछन् ॥८१-८२॥ **वेदव्यासले भन्नुभयो**– ती अष्टावक्र मुनिको यस प्रकारको वचन सुनिसकेपछि ती अप्सराहरूले फेरि मुनिश्रेष्ठलाई प्रसन्न गराए। त्यसपछि फेरि प्रसन्न भएका मुनिले उनीहरूसँग भने - "त्यसपछि तिमीहरू फेरि स्वर्गलोकमा जानेछौ॥८३॥ यस प्रकारले अष्टावक्र मुनिको सराप (श्राप) का कारणले गर्दा अर्थात् सरापका प्रभावले ती अत्यन्त सुन्दर आइमाईहरू परमात्मा श्रीकृष्णलाई पतिका रूपमा प्राप्त गरेर फेरि डाँकाहरूका हातमा परेका हुन्। यो तिनीहरूको कर्मको फल हो ॥८४॥ हे पाण्डवहरूमा सर्वश्रेष्ठ अर्जुन! यस कारणले गर्दा तिमी यस विषयमा अलिकति मात्र पनि चिन्ता अर्थात् शोक नगर। उहाँ परमात्मा श्रीकृष्ण स्वयंले नै आफ्नो कुलको पूर्ण रूपमा विनाश गरिदिनु भयो अर्थात् सबै यादवहरूको संहार गरिदिनुभयो ॥८५॥ यसरी नै तिमीहरूको अत्यन्त चाँडै विनाश अर्थात् संहार गरिदिनका लागि उहाँ परब्रह्म परमात्मा श्रीकृष्णले तिमीमा भएको बल, तेज, शक्ति र तिम्रो महिमाको अन्त गराइदिनु भएको हो अर्थात् तिमीलाई सबै किसिमका शक्तिहरूबाट अलग गरिदिनु भएको हो ॥८६॥

जातस्य नियतो मृत्युः पतनञ्च तथोन्नतेः।

विप्रयोगावसानस्तु संयोगः सञ्चयात् क्षयः ॥८७॥

विज्ञाय न बुधाः शोकं न हर्षमुपयान्ति ये।

तेषामेवेतरे चेष्टां शिक्षन्तः सन्ति तादृशाः ॥८८॥

तस्मात्त्वया नरश्रेष्ठ ज्ञात्वैतद् भ्रातृभिः सह।

परित्यज्याखिलं तन्त्रं गन्तव्यं तपसे वनम् ॥८९॥

तद् गच्छ धर्मराजाय निवद्यैतद्वचो मम।

परश्वो भ्रातृभिः सार्द्धं यथा यासि तथा कुरु ॥९०॥

पराशर उवाच

इत्युक्तोऽभ्येत्य पार्थाभ्यां यमाभ्याञ्च सहार्जुनः।

दृष्टं चैवानुभूतञ्च सर्वमाख्यातवांस्तथा ॥९१॥

व्यासवाक्यञ्च ते सर्वे श्रुत्वार्जुनसमीरितम्।

राज्ये परीक्षितं कृत्वा ययुः पाण्डुसुता वनम् ॥९२॥

इत्येतत् तव मैत्रेय विस्तरेण मयोदितम्।

जातस्य यद्यदोर्वंशे वासुदेवस्य चेष्टितम् ॥९३॥

यश्चैतच्चरितं तस्य कृष्णस्य शृणुयात्सदा।

सर्वपापविनिर्मुक्तो विष्णुलोकं स गच्छति ॥ ९४॥

यसकारण जन्म लिएका प्राणीको निश्चित रूपमा मृत्यु र उन्नतिको अवनति अर्थात् पतन हुन्छ। संयोगको अन्त वियोग मात्र हो र सञ्चय अर्थात् एकत्रित गरिएको धन निश्चित रूपमा व्यय (खर्च) हुन्छ। यी सबै अनिवार्य रूपमा हुने र भइरहने कुरा हुन् ॥८७॥ यसप्रकारको यथार्थलाई आत्मसात् गरेर जुन बुद्धिमान् पुरुषमा लाभ भएका अवस्थामा हर्ष र हानि भएका अवस्थामा शोक उत्पन्न हुँदैन, तिनै विद्वान् पुरुषहरूको आचरणको अनुसरण गर्दै अन्य साधारण मनुष्यहरूले पनि आफ्नो आचरण त्यस्तै किसिमको बनाउँछन् ॥८८॥ यसैले हे पुरुषश्रेष्ठ अर्जुन! तिमी पनि यस विषयलाई यथार्थ रूपमा बुझेर आफ्ना दाजुभाइहरू सहित सम्पूर्ण राज्यको पूर्ण रूपमा परित्याग गरेर तपस्या गर्नका लागि वनमा जाऊ ॥८९॥ अब तिमी यहाँबाट आफ्नो राज्य इन्द्रप्रस्थमा जाऊ र धर्मराज युधिष्ठिरलाई अहिलेसम्म मैले तिमीलाई बताएका सबै कुरा विस्तारपूर्वक सुनाइदेऊ। जसरी तिमीहरू सबै भाइको पर्सिसम्ममा वनमा जाने व्यवस्था हुन सक्दछ, त्यसै अनुसारको प्रयास गर्नू अर्थात् तिमीहरूले पर्सिसम्ममा तपस्या गर्नका लागि वनमा गइसक्नू ॥९०॥ **पराशरजीले भन्नुभयो**- वेदव्यासले यसरी बताइदिनुभएपछि अर्जुनले हस्तिनापुरमा आएर धर्मराज युधिष्ठिर, भीमसेन, नकुल र सहदेवलाई आफूले भोगका र वेदव्यासबाट सुनेका सबै कुरा जस्ताको तस्तै बताइदिए अर्थात् वर्तमान अवस्थाका बारेमा प्रष्ट्याइदिए ॥९१॥ त्यसपछि ती पाण्डुका पुत्रहरूले अर्जुनबाट वेदव्यासले पठाउनु भएको सन्देश सुनिसकेपछि हस्तिनापुरका राजाको पदमा परीक्षितको राज्याभिषेक गरिदिएर उनीहरू सबै तपस्या गर्नका लागि वनमा गए ॥९२॥ हे मैत्रेय! यस प्रकार यदुकुलमा पैदा भएका भगवान् श्रीकृष्णका लीलाहरूको विस्तृत विवरण मैले तिमीलाई बताइदिएको छु ॥९३॥ जुन पुरुषले अत्यन्त श्रद्धा र भक्तिपूर्वक भगवान् श्रीकृष्णको यो चरित्रका विषयमा सुन्दछ; त्यो सबै किसिमका पापहरूबाट पूर्ण रूपमा मुक्त भएर अन्तमा विष्णुलोकमा जान्छ ॥९४॥

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे अष्टात्रिंशोऽध्यायः।

इति श्रीविष्णुमहापुराणे पञ्चमांशे सम्पूर्णम्।



## षष्ठांशः

## प्रथमोऽध्यायः　　　　अध्याय– १

### "कलिधर्मनिरूपणम"

(कलिधर्मको परिभाषा)

मैत्रेय उवाच

व्याख्याता भवता सर्ग–वंश–मन्वन्तरस्थितिः ।

वंशानुचरितञ्चैव विस्तरेण महामुने ॥१॥

श्रोतुमिच्छाम्यहं त्वत्तो यथावदुपसंहृतिम् ।

महाप्रलयसंस्थानां कल्पान्ते च महामुने ॥२॥

पराशर उवाच

मैत्रेय श्रूयतां मत्तो यथावदुपसंहृतिः ।

कल्पान्ते प्राकृते चैव प्रलयो जायते यथा ॥३॥

अहोरात्रं पितॄणान्तु मासोऽब्दस्त्रिदिवौकसाम् ।

चतुर्युगसहस्रे तु ब्रह्मणो द्वे द्विजोत्तम ॥४॥

कृतं त्रेता द्वापरश्च कलिश्चैव चतुर्युगम् ।

दिव्यैर्वर्षसहस्रैस्तु तद् द्वादशाभिरुच्यते ॥५॥

चतुर्युगाण्यशेषाणि सदृशानि स्वरूपतः ।

आद्यं कृतयुगं मुक्त्वा मैत्रेयान्ते तथा कलिम् ॥६॥

आद्ये कृतयुगे सर्गो ब्रह्मणा क्रियते यतः ।

क्रियते चोपसंहारस्तथान्ते च कलौ युगे ॥७॥

मैत्रेय उवाच

कलेः स्वरूपं भगवन् विस्तराद् वक्तुमर्हसि ।

धर्मश्चतुष्पाद् भगवन् यस्मिन् विप्लवमृच्छति ॥८॥

**मैत्रेयले भने–** हे मुनीश्वर! मलाई तपाईंले सृष्टिको रचना, वंशको परम्परा, मन्वन्तरको अवस्थिति र वंशहरूको चरित्रका विषयमा अत्यन्त विस्तारपूर्वक बताइदिनु भयो ॥१॥ अब म प्रलयका समयमा प्राणीमात्रको जसरी संहार अर्थात् विनाश हुन्छ, त्यसका विषयमा र कल्पको अन्तमा हुने महाप्रलयको स्वरूपका सम्बन्धमा हजुरबाट अत्यन्त विस्तारपूर्वक सुन्न चाहन्छु ॥२॥ **पराशरजीले भन्नुभयो–** कल्पको अन्त अर्थात् महाप्रलयका समयमा एवं प्राकृतिक प्रलयका समयमा जसरी प्राणीमात्रको संहार अर्थात् विनाश हुन्छ। त्यसका विषयमा र कल्पको अन्तमा हुने महाप्रलयको स्वरूपका बारेमा सुन ॥३॥ हे ब्राह्मणश्रेष्ठ! मनुष्यहरूको एक महिना पितृहरूको एक दिनरात तथा मनुष्यहरूको एक वर्ष देवताहरूको एक दिनरात र तिनीहरूको दुई हजार चतुर्युग ब्रह्मजीको एक दिनरात हुन्छ ॥४॥ सत्ययुग, त्रेतायुग, द्वापरयुग र कलियुग यस प्रकारका चारोटा युग हुन्छन्। ती सबैको काल अर्थात् समयको समायोजन गर्दा बाह्र हजार दिव्यवर्ष हुन्छ अर्थात् यी चारोटैको समायोजित रूपलाई बाह्र हजार दिव्यवर्ष भनिन्छ ॥५॥ हे मैत्रेय! प्रत्येक मन्वन्तरको आदि सत्ययुग र अन्तिम कलियुगलाई छाडेर अन्य सबै चर्तुर्युगको स्वरूप एकै किसिमको हुन्छ, अर्थात् तिनीहरूको स्वरूपमा कुनै किसिमको भिन्नता रहेको हुँदैन ॥६॥ जसरी कल्पको आदि सत्ययुगमा ब्रह्माजीले सम्पूर्ण जगत् एवं त्यसमा निवास गर्ने प्राणीमात्रको रचना गर्नुहुन्छ, त्यसरी नै कल्पको अन्त अर्थात् कलियुगमा उहाँले नै सम्पूर्ण सृष्टिको विनाश गर्नुहुन्छ ॥७॥ मैत्रेयले भने – हे भगवन्! जसरी कल्पको अन्तको कलियुगमा चार पाउहरू भएको धर्मको विनाश हुन्छ। त्यसको स्वरूपका विषयमा मलाई अत्यन्त विस्तारपूर्वक बताइदिनुहोस् ॥८॥ **पराशरजीले भन्नुभयो–** हे मैत्रेय!

पराशर उवाच

कलेः स्वरूपं मैत्रेय यद् भवान् प्रष्टुमिच्छति।

तन्निबोध समासन्नं वर्तते यन्महामुने ॥९॥

वर्णाश्रमाचारवती प्रवृत्तिर्न कलौ नृणाम्।

न साम–ऋग्–यजुर्वेदविनिष्पादनहेतुका ॥१०॥

विवाहा न कलौ धर्म्या न शिष्यगुरुसंस्थितिः।

न दाम्पत्यक्रमो नैव वह्निदैवात्मकः क्रमः ॥११॥

यत्र तत्र कुले जातो बली सर्वेश्वरः कलौ।

सर्वेभ्य एव वर्णेभ्यो योग्यः कन्यावरोधने ॥१२॥

येन केनैव योगेन द्विजातिर्दीक्षितः कलौ।

यैव सैव च मैत्रेय प्रायश्चित्तक्रिया कलौ ॥१३॥

सर्वमेव कलौ शास्त्रं यस्य यद्वचनं द्विज।

देवताश्च कलौ सर्वाः सर्वः सर्वस्य चाश्रमः ॥१४॥

उपवासस्तथायासो वित्तोत्सर्गस्तथा कलौ।

धर्मो यथाभिरुचितैरनुष्ठानैरनुष्ठितः ॥१५॥

हे मुनिश्रेष्ठ! तिमीले जुन कलियुगको विषयमा सुन्ने इच्छा गरका छौ, त्यसका विषयमा संक्षेपमा सुन अर्थात् म त्यसका विषयमा तिमीलाई संक्षिप्त रूपमा बताइदिन्छु ॥९॥ कलियुगमा मनुष्यहरूको स्वभाव अर्थात् व्यवहार वा आचरण वर्ण र आश्रमका अनुकूल अर्थात् तिनीहरूका अनुसारको हुँदैन एवं यस किसिमको स्वभाव हुने भएकाले साम, ऋक् र यजुर्वेदहरूले निर्देशन गरेका कर्महरू पनि सम्पादन हुन सक्दैनन् अर्थात् व्यवहारमा लागू हुन सक्दैनन्॥१०॥ यो कलियुगमा धर्मअनुसारको विवाह हुनेछैन, गुरु र शिष्यको परम्परा अर्थात् गुरु र शिष्यको सम्बन्ध पूर्ण रूपमा समाप्त हुने छ, श्रीमान् र श्रीमतीका बीचमा सुमधुर सम्बन्ध रहन सक्दैन तथा यज्ञ–यज्ञादि अथवा हवन एवं देवताहरूको पूजा–पाठ पनि पूर्ण रूपमा बन्द हुने छ ॥११॥ यो कलियुगमा जुनसुकै कुलमा उत्पन्न भएपनि जो अत्यन्त बलवान् हुन्छ, त्यही पुरुष सबैको अधिपति अर्थात् स्वामी हुनेछ तथा त्यसले सबै वर्ण र आश्रममा उत्पन्न भएका कन्याहरूसँग विवाह गर्नेछ अर्थात् त्यो पुरुष सबै जातिका कन्याहरूसँग विवाह गर्न सक्षम हुनेछ ॥१२॥ हे मैत्रेय! कलियुगमा ब्राह्मणहरू जुनसुकै अत्यन्त निन्दित उपाय अवलम्बन गरेर भएपनि आफू अत्यन्त विद्वान् भएको भन्दै आफ्नै प्रचार प्रसार गर्नेछन्। यसरी नै अत्यन्त पापकर्म गर्ने मनुष्यहरूले अरुलाई देखाउन अर्थात् सन्तुष्ट गराउनका लागि मात्र जुनसुकै भावबाट भएपनि प्रायश्चितको अनुष्ठान गर्नेछन् ॥१३॥ हे ब्राह्मणश्रेष्ठ! कलियुगमा जसका मुखबाट जस्तो किसिमको वचन निस्कन्छ, ती सबैलाई उनीहरूले प्रामाणिक शास्त्र भनेर प्रकाशन एवम् त्यसको प्रचार–प्रसार गर्नेछन् तथा आफ्नो स्वेच्छाअनुसार सबैले सबै देवताहरूको उपासना वा आराधना गर्नेछन् र सबैले सबै किसिमका आश्रमहरूको समान रूपमा उपयोग गर्नेछन् ॥१४॥ कलियुगमा उपवास, तीर्थयात्रा जस्ता कार्यहरू आन्तरिक दुःख, पीडा वा वेदना निवारण गर्न सकिने किसिमका मात्र हुनेछन्। मनुष्यहरूले आफ्नो क्षमताका अनुसार धनदान, तपस्या आदि धार्मिक अनुष्ठान गर्नेछन्॥१५॥ कलियुगमा थोरै मात्रामा धनको

वित्तेन भविता पुंसां स्वल्पेनाढ्यमदः कलौ ।

स्त्रीणां रूपमदश्चैव केशैरेव भविष्यति ॥१६॥

सुवर्णमणिरत्नादौ वस्त्रे चापि क्षयं गते ।

कलौ स्त्रियो भविष्यन्ति तदा केशैरलङ्कृताः ॥१७॥

परित्यक्षन्ति भर्तारं वित्तहीनं तथा स्त्रियः ।

भर्ता भविष्यति कलौ वित्तवानेव योषिताम् ॥१८॥

यो यो ददाति बहुलं स स स्वामी तदा नृणाम् ।

स्वामित्वहेतुः सम्बन्धो भावी नाभिजनस्तदा ॥१९॥

गृहान्ता द्रव्यसङ्घाता द्रव्यान्ता च तथा मतिः ।

अर्थाश्चात्मोपभोगान्ता भविष्यन्ति कलौ युगे ॥२०॥

स्त्रियः कलौ भविष्यन्ति स्वैरिण्यो ललितस्पृहाः ।

अन्यायावाप्तवित्तेषु पुरुषाः स्पृहयालवः ॥२१॥

अभ्यर्थितोऽपि सुहृदा स्वार्थहानिं न मानवः ।

पणार्द्धार्द्धार्द्धमात्रेपि करिष्यति तदा द्विज ॥२२॥

प्राप्ति भएमा पनि मनुष्यहरूले आफू अत्यन्त धनी भएको घमण्ड गर्नेछन् । आइमाईहरूले आफ्नो कपालका आधारमा आफू अत्यन्त सुन्दरी भएको सम्झने छन् अर्थात् आफ्नो सुन्दरताको परिचय कपालले दिएको सम्झनेछन् ॥१६॥ त्यस समयमा अर्थात् कलियुगमा स्त्रीहरूले सुन, मणि, रत्न र कपडाहरू आदिको परित्याग गरेर अर्थात् अत्यन्त कम मात्रामा प्रयोग गरेर आफ्नो कपालको सजावटबाट मात्र आफूलाई सुशोभित गर्नेछन् ॥१७॥ कलियुगका आइमाईहरूले आफ्नो पतिसँग सधैं धनको अभाव भएमा त्यसलाई पूर्ण रूपमा परित्याग गरिदिनेछन् । यस्तो अवस्थामा धनबाट सम्पन्न भएको पुरुष मात्र आइमाईहरूको पति हुनेछ । यसैले आफ्नो दाम्पत्य जीवनलाई सुमधुर बनाइराख्नका लागि धनको मात्र महत्त्व हुनेछ ॥१८॥ कलियुगमा मनुष्यहरूमा पनि जसले जसलाई अत्यधिक मात्रामा धन दिन सक्दछ, त्यही मनुष्य उसको अधिपति अर्थात् स्वामी हुनेछ । त्यस्तो सम्बन्ध स्वामित्वका आधारमा नभएर धनका आधारमा स्थापित भएको हुन्छ र अत्यन्त उत्तम कुलमा जन्मिएको उत्तम आचरण भएको पुरुष पनि स्वामी हुन सक्दैन ॥१९॥ कलियुगमा मनुष्यहरूले आफूले आर्जन गरेको सबै धन दान पुण्यादिको कार्यमा नलगाएर घर बनाउने कार्यमा मात्र लगाउनेछन् । आफ्नो बुद्धिलाई आत्मज्ञानमा अर्थात् आत्माका विषयमा ज्ञान प्राप्त गर्ने कुरामा नल्याएर धन कमाउने र जम्मा गर्ने कार्यमा मात्र लगाउनेछन् । यसरी कमाएको सबै सम्पत्ति अतिथिको सत्कार एवं अन्य किसिमको सामाजिक कार्यमा नलगाएर आफ्नो सुख–सुविधाको उपभोगमा मात्र नाश गर्नेछन् अर्थात् समाप्त गर्नेछन् ॥२०॥ यो कलियुगमा सबै आइमाईहरू आफ्नो पतिका रूपमा अत्यन्त सुन्दर पुरुषलाई प्राप्त गर्ने कामना भएका र पूर्ण रूपमा स्वेच्छाधारी आचरण भएका हुनेछन् । यसरी नै कलियुगका पुरुषहरू अन्यायका माध्यमद्वारा प्राप्त हुने धन प्रति अत्यन्त आसक्त हुनेछन् ॥२१॥ हे ब्राह्मणश्रेष्ठ! यो कलियुगमा आफ्ना अनन्य मित्रहरूले विनम्रतापूर्वक अनुरोध गरे तापनि मनुष्यहरूले एक–एक पैसाका लागि पनि आफ्नो व्यक्तिगत स्वार्थको त्याग गर्दैनन् अर्थात् आफ्नो स्वार्थमा मात्र अत्यन्त एकाग्रतापूर्ण लागिरहेका हुन्छन् ॥२२॥ कलियुगमा

समानपौरुषञ्चेतो भावि विप्रेषु वै कलौ ।

क्षीरप्रदानसम्बन्धि भावि गोषु च गौरवम् ॥२३॥

अनावृष्टिभयप्रायाः प्रजाः क्षुद्भयकातराः

भविष्यन्ति तदा सर्वा गगनासक्तदृष्टयः ॥२४॥

कन्दपर्णफलाहारास्तापसा इव मानवाः ।

आत्मानं घातयिष्यन्ति ह्यनावृष्ट्यादिदुःखिताः ॥२५॥

दुर्भिक्षमेव सततं तदा क्लेशमनीश्वराः ।

प्राप्स्यन्ति व्याहतसुखप्रमोदा मानवाः कलौ ॥२६॥

अस्नानभोजिनो नाग्निदेवतातिथिपूजनम् ।

करिष्यन्ति कलौ प्राप्ते न च पिण्डोदकक्रियाम् ॥२७॥

लोलुपा ह्रस्वदेहाश्च वह्वन्नादनतत्पराः ।

बहुप्रजाल्पभाग्याश्च भविष्यन्ति कलौ स्त्रियः ॥२८॥

उभाभ्यामेव पाणिभ्यां शिरः कण्डूयनं स्त्रियः ।

कुर्वन्त्यो गुरुभर्तॄणामाज्ञां भेत्स्यन्त्यनादृताः ॥२९॥

स्वपोषणपराः क्षुद्रा देहसंस्कारवर्जिताः ।

परुषानृतभाषिण्यो भविष्यन्ति कलौ स्त्रियः ॥३०॥

शूद्रहरूले आफूहरू पनि ब्राह्मणहरू बराबरको भएको दाबी गर्नेछन् तथा दूध लिएका कारणले मात्र गाईंहरूको सम्मान रहनेईछ अर्थात् दूध प्राप्त गर्नका लागि मात्र गाईहरूको संरक्षण गरिने चलन स्थापित हुनेछ ॥२३॥ त्यस समयमा सबै मानिसहरू भोकका कारणले गर्दा अत्यन्त व्याकुल भएर अनावृष्टि हुने डरबाट भयभीत हुँदै प्रायः आकाशतिर मात्र हेरिरहेका हुन्छन् अर्थात् वर्षादको प्रतिक्षा गरिरहेका हुन्छन् ॥२४॥ कलियुगमा अन्नको अत्यन्त अभाव हुने भएकाले मनुष्यहरूले पनि तपस्वीहरूले जसरी नै कन्दमूल अर्थात् गिट्ठा, आलु, तरुल, सुठुनी, फल आदिको भोजन गरेर जीवननिर्वाह गर्नेछन् तथा अनावृष्टिबाट अत्यन्त पीडित भएका कारणले कसै–कसैले आत्महत्या पनि गर्नेछन् ॥२५॥ त्यस समयमा असमर्थ भएका मनुष्यहरूले सुख र आनन्द प्राप्त गर्न असम्भव भएका कारणले गर्दा सधैँ अनिकाल, क्लेश अर्थात् कुनै आघात परेर वा चिन्ताका कारणले मानिस व्याकुल तथा सन्तप्त रहने कष्टपूर्ण मानसिक स्थितिको मात्र भोग गर्नेछन् ॥२६॥ कलियुगमा मनुष्यहरूले न नुहाई भोजन गर्नेछन् अर्थात् खानेकुरा खानेछन् । अग्नि, देवता एवं अतिथिको पूजा पनि गर्नेछैनन् तथा आफ्ना पितृहरूका लागि श्राद्ध–तर्पण पनि गर्नेछैनन् अर्थात् कलियुगमा मनुष्यहरूले आफ्नो परम्परादेखि चलिआएको संस्कारको पूर्ण रूपमा परित्याग गर्नेछन् ॥२७॥ कलियुगमा स्त्रीहरू ज्ञानेन्द्रियले ग्रहण गर्ने पदार्थ अथवा रूप, रस, गन्ध, स्पर्श र शब्दका लालची अर्थात् अत्यन्त कामुक स्वभाव भएका हुनेछन् । सबैको शरीर होचो हुनेछ तर तिनीहरूले खानेकुरा धेरै खानेछन् र धेरै सन्तान जन्माउने अर्थात् उत्पन्न गर्ने एवम् भाग्यविहीन हुनेछन् ॥२८॥ ती कलियुगका आइमाईहरूले आफ्ना दुवै हातहरूले टाउको कन्याउँदै गुरुहरू र आफ्ना पतिहरूको आज्ञालाई यथार्थ रूपमा अपहेलना गर्दै अत्यन्त अनादरपूर्वक खण्डन गर्नेछन् अर्थात् उनीहरूको आज्ञा अनुसारको नभएर आफ्नो स्वेच्छाअनुसारको व्यवहार गर्नेछन् ॥२९॥ कलियुगमा आइमाईहरू आफ्नो पेट पाल्ने कार्यमा अत्यन्त तत्परतापूर्वक लागेका, अत्यन्त क्षुद्र अर्थात् नीच स्वभाव भएका र शारीरिक संस्कारबाट यथार्थ रूपमा विहीन भएका कारणले गर्दा अत्यन्त कठोर र असत्य वचन बोल्न थाल्नेछन् ॥३०॥ त्यस समयमा

दुःशीला दुष्ट शीलेषु कुर्वन्त्यः सततं स्पृहाम्।
असद्वृत्ता भविष्यन्ति पुरुषेषु कुलाङ्गना ॥३१॥

कुलको अत्यन्त महत्त्वपूर्ण अङ्गका रूपमा रहेका आइमाईहरू खराब स्वभाव भएका र सधैं खराब स्वभाव अर्थात् चरित्र भएका पुरुषहरूलाई प्राप्त गर्ने अभिलाषा लिएका हुनेछन् एवम् निरन्तर रूपमा निन्दा गर्न योग्य आचरणमा मात्र लागिरहनेछन् अर्थात् ती आइमाईहरूले असत्य व्यवहार मात्र गर्नेछन् ॥३१॥

वेददानं करिष्यन्ति वटवश्चाकृतव्रताः।
गृहस्थाश्च न होष्यन्ति न दास्यन्त्युचितान्यपि ॥३२॥

ब्राह्मण बालकहरूले आफूहरू यथार्थ रूपमा आचरण र संस्कार–विहीन भए तापनि ब्रह्मचारीको जस्तै स्वरूप धारण गरेर वेदको अध्ययन र अध्यापन गर्नेछन्। गृहस्थहरूले यज्ञ–यज्ञादि अर्थात् हवन गर्ने कार्यको पूर्ण रूपमा परित्याग गर्दै उचित अर्थात् सत्पात्रलाई दान दिन छाडिदिने छन् अर्थात् दान दिने छैनन् ॥३२॥

वानप्रस्था भविष्यन्ति ग्राम्याहारपरिग्रहाः।
भिक्षवश्चापि मित्रादिस्नेहसम्बन्धयन्त्रिता ॥३३॥

वानप्रस्थानमा रहेका सन्यासीहरूले आफ्नो स्वाभाविक आहार अर्थात् खानेकुरा वनमा पाइने कन्दमूल खान छोडेर गृहास्थाश्रमका निर्धारण गरिएको भोजनलाई स्वीकार गर्न थाल्नेछन् तथा सन्यासीहरू आफ्ना आफन्तहरू र परिवारको सम्बन्धमा आसक्त हुनेछन् अर्थात् पारिवारिक बन्धनमा परिरहनेछन्॥३३॥

अरक्षितारो हर्तारः शुल्कव्याजेन पार्थिवाः।
हारिणो जनवित्तानां सम्प्राप्ते तु कलौ युगे ॥३४॥

कलियुग आरम्भ भएपछि राजाहरूले न्यायोचित किसिमबाट आफ्ना प्रजाहरूको पालन–पोषण एवम् संरक्षण गर्ने छैनन्। ती राजाहरूले कर लिने योजना बनाएर जबरजस्ती आफ्ना प्रजाहरूको धन–सम्पत्ति लिनेछन् अर्थात् प्रजाहरूलाई धन दिन बाध्य पार्नेछन्॥३४॥

यो योऽश्वरथनागाढ्यः स स राजा भविष्यति।
यश्च यश्चाबलः सर्वः स स भृत्यः कलौ युगे॥३५॥

त्यस समयमा अर्थात् कलियुगमा जो–जससँग अत्यन्त धेरै मात्रामा घोडा, हात्ती र रथहरू हुनेछन्, तिनीहरू मात्र राजा हुनेछन्। त्यस युगमा बलविहीन अर्थात् केही गर्ने सामर्थ्य नभएकाहरू जति सबै ती राजाहरूका सेवक हुनेछन् अर्थात् ती बलवान् राजाहरूले सामर्थ्य नभएका जतिलाई आफ्नो दास बनाउने छन् ॥३५॥

वैश्याः कृषिवाणिज्यादि सन्त्यज्य निजकर्म यत्।
शूद्रवृत्त्या प्रवत्स्यन्ति कारुकर्मोमजीविनः ॥३६॥

कलियुगमा वैश्यहरूले आफ्नो स्वाभाविक कर्म अन्तर्गत पर्ने खेतीपाती एवम् व्यापार–व्यवसायलाई पूर्ण रूपमा परित्याग गरिदिएर शूद्रको स्वाभाविक कर्म र कारिगरीका माध्यमद्वारा जीवन निर्वाह गर्न थाल्नेछन् अर्थात् पूर्ण रूपमा शूद्रवृत्तिमा आश्रित रहने छन्॥३६॥

भैक्ष्यव्रतास्तथा शूद्रा प्रव्रज्यालिङ्गिनोऽधभाः।
पाषण्डसंश्रयां वृत्तिमाश्रायिष्यन्त्यसंस्कृताः ॥३७॥

आश्रमादिको चिन्हबाट पूर्ण रूपमा रहित भएका अधम शूद्रहरूले सन्यासाश्रमको चिन्ह धारण गरेर अत्यन्त तत्परतापूर्वक भिक्षावृत्तिमा लाग्नेछन्। द्विजाति अर्थात् ब्राह्मणहरू आफ्नो संस्कारबाट पूर्ण रूपमा रहित भएर पाखण्डवृत्तिको अवलम्बन गर्ने छन् अथवा समाजबाट सम्मानित भएर शूद्रहरूले पाखण्डवृत्तिको अवलम्बन गर्ने छन् ॥३७॥

दुर्भिक्षकरपीडाभिरतीवोपहता जनाः ।

गवेधुककदन्नाढ्यान् देशान् यास्यन्ति दुःखिताः ॥३८॥

वेदमार्गे प्रलीने च पाषण्डाढ्ये ततो जने ।

अधर्मवृद्धया लोकानां स्वल्पमायुर्भविष्यति ॥३९॥

अशास्त्रविहितं घोरं तप्यमानेषु वै तपः ।

नरेषु नृपदोषेण बालमृत्युर्भविष्यति ॥४०॥

भवित्री योषितां सूतिः पञ्चषट्सप्तवार्षिकी ।

नवाष्टदशवर्षाणां मनुष्याणां तथा कलौ ॥४१॥

पालितोद्भवश्च भविता तदा द्वादशवार्षिकः ।

नातिजीवति वै कश्चित् कलौ वर्षाणि विंशतिः ॥४२॥

अल्पप्रज्ञा वृथालिङ्गा दुष्यन्तःकरणाः कलौ ।

यतस्ततो विनङ्क्ष्यन्ति कालेनाल्पेन मानवाः ॥४३॥

यदा यदा च पाषण्डवृद्धिर्मैत्रेय लक्ष्यते ।

तदा तदा कलेर्वृद्धिरनुमेया विचक्षणैः ॥४४॥

यदा यदा सतां हानिर्वेदमार्गानुसारिणाम् ।

प्रारम्भाश्चावसीदन्ति यदा धर्मभृतां नृणाम् ।

तदानुमेयं प्राधान्यं कलेर्मैत्रेय पण्डितैः ॥४५॥

त्यस समयमा मनुष्यहरू अनिकाल, राजाले लगाएको कर एवम् शारीरिक रोगबाट अत्यन्त पीडित भएका कारणले गर्दा गवेधुक अर्थात् गडगडे र कोदोबाट सम्पन्न भएका देशहरूमा आश्रय लिन जानेछन्। कोही जौ र गहुँ अत्यधिकमात्रामा उत्पन्न हुने देशहरूमा जानेछन् ॥३८॥ त्यसपछि वेदले निर्देशन गरेको मार्ग लोप हुनेछ र मनुष्यहरूमा अत्यधिक पाखण्डको अभिवृद्धि हुनेछ एवं अधर्मको बढोत्तरीले अन्तिम सीमा नाघ्नेछ। त्यस समयमा मानिसहरूको आयु अत्यन्त छोटो हुनेछ ॥३९॥ मनुष्यहरूले शास्त्रीय विधिका विरुद्ध अत्यन्त भयानक तपस्या गर्नाले एवं राजाको कार्यबाट उत्पन्न भएको दोषका प्रभावले मानिसहरूको अत्यन्त अल्पायु अर्थात् बाल्यावस्थामा मृत्यु हुन थाल्नेछ अर्थात् उनीहरू मर्नेछन् ॥४०॥ कलियुगमा आठ, नौ वा दश वर्ष पुगेको पुरुषसँग सहवास अर्थात् सम्भोग गरेका कारणले पाँच, छ वा सात वर्षका बालिकाहरूले पनि सन्तान उत्पन्न गराउनेछन् अर्थात् जन्माउनेछन् ॥४१॥ कलियुगमा बाह्र वर्षको उमेरमा नै मनुष्यहरूको कपाल फुल्न थाल्दछ र बीस वर्षको उमेरभन्दा धेरै कुनै पनि मनुष्य जीवित रहन सक्दैन अर्थात् रहँदैन ॥४२॥ कलियुगमा मनुष्यहरू अत्यन्त मन्द बुद्धि भएका, अनावश्यक चिन्ह धारण गर्ने र अत्यन्त क्रोधित एवम् दुष्ट अन्तरात्मा भएका हुनेछन्। त्यसकारण तिनीहरू अत्यन्त थोरै समयमा पूर्ण रूपमा नष्ट हुनेछन् अर्थात् तिनीहरूको अत्यन्त चाँडै विनाश हुनेछ ॥४३॥ हे मैत्रेय! जुन समयमा पाखण्डी स्वभाव भएका मनुष्यहरूको अत्यधिक मात्रामा वृद्धि भएको देखिन्छ। त्यस समयमा बुद्धिमान् मनुष्यहरूले कलियुगको वृद्धि भइरहेको अनुमान गर्नुपर्दछ अर्थात् कलियुग तीव्र गतिमा बढिरहेको सम्झनु पर्दछ ॥४४॥ हे मैत्रेय! जब संसारमा वैदिक मार्गको अनुसरण गर्ने महापुरुषहरूको पूर्ण रूपमा अभाव हुन्छ र अधर्म अत्यधिक रूपमा बढ्दछ तथा यथार्थरूपमा धर्मका आश्रयमा रहेका पुरुषहरूद्वारा आरम्भ गरिएका कार्यहरू असफल हुन थाल्दछन्। त्यस समयमा विद्वानहरूले कलियुगको बाहुल्य स्थापित भएको सम्झनु पर्दछ ॥४५॥ जुन समयमा मनुष्यहरूले सबै

यदा यदा न यज्ञानामीश्वरः पुरुषोत्तमः ।

इज्यते पुरुषैर्यज्ञैस्तदा ज्ञेयं कलेर्बलम् ॥४६॥

न प्रीतिर्वेदवादेषु पाषण्डेषु यदा रतिः ।

कलेर्वृद्धिस्तदा प्राज्ञैरनुमेया विचक्षणैः ॥४७॥

कलौ जगत्पतिं विष्णुं सर्वस्रष्टारमीश्वरम् ।

नार्चयिष्यन्ति मैत्रेय पाषण्डोपहता नराः ॥४८॥

स्वल्पाम्बुवृष्टिः पर्जन्यः सस्यं स्वल्पफलं तथा ।

फलं तथाल्पसारञ्च विप्र प्राप्ते कलौ युगे ॥५०॥

शाणीप्रायाणि वस्त्राणि शमीप्राया महीरुहाः ।

शूद्रप्रायास्तथा वर्णा भविष्यन्ति कलौ युगे ॥५१॥

अणुप्रायाणि धान्यानि अजाप्रायं तथा पयः ।

भविष्यन्ति कलौ प्राप्ते ह्यौषीरञ्चानुलेपनम् ॥५२॥

श्वश्रूश्वशुरभूयिष्ठा गुरवश्च नृणां कलौ ।

श्यालाद्या हारिभार्याश्च सुहृदो मुनिसत्तम ॥५३॥

कस्य माता पिता कस्य यदा कर्मानुगः पुमान् ।

इति चोदाहरिष्यन्ति श्वशुरानुगता नराः ॥५४॥

वाङ्मनः कायिकैर्दोषैरभिभूताः पुनः पुनः ।

नराः पापान्यनुदिनं करिष्यन्त्यल्पमेधसः ॥५५॥

यज्ञहरूका अधिपति परब्रह्म परमात्मा श्रीपुरुषोत्तमको यज्ञ–यज्ञादिका माध्यमद्वारा उपासना गर्न छाड्दछन्, त्यस समयमा कलियुग अत्यन्त बलवान् भएको सम्झनुपर्दछ ॥४६॥ जुन समयमा मुनष्यहरूले वेदको अत्यन्त निन्दा गर्दछन् अर्थात् वेदप्रति सद्भाव राख्दैनन् तथा पाखण्डवृत्तिमा अत्यन्त आसक्त हुन्छन्, त्यस समयमा विद्वानहरूले कलियुगको अत्यन्त तीव्र गतिमा वद्धि भइरहेको बुझ्नुपर्दछ ॥४७॥ हे मैत्रेय! कलियुगमा मनुष्यहरूले पाखण्डका नियन्त्रणमा रहने अर्थात् दुष्कर्म एवम् दुराचारमा अत्यन्त आसक्त हुने भएकाले सम्पूर्ण प्राणीमात्रका रचयिता एवम् सम्पूर्ण जगत्का परमपिता परब्रह्म परमात्मा श्रीविष्णुको उपासना गर्दैनन् ॥४८॥ हे ब्राह्मणदेव! कलियुग प्रारम्भ भएपछि अर्थात् आएपछि मेघ अर्थात् बादलले अत्यन्त कम मात्रामा पानी वर्षाउँछन्, खेतीपातीबाट अत्यन्त थोरै मात्र अन्न उत्पन्न हुन्छ र त्यसरी उत्पन्न भएको फल आदिमा अत्यन्त थोरै सार अर्थात् शक्ति रहेको हुन्छ ॥५०॥ कलियुगमा प्रायः सबै सनपाट अर्थात् जुटबाट उत्पादन गरिएका कपडा हुन्छन् र धेरै मात्रामा शमीका मात्र रुख हुन्छन् एवं चारोटै वर्णका मनुष्यहरू प्रायः शूद्र बराबरका हुन्छन् अर्थात् त्यस समयमा वर्ण व्यवस्था अत्यन्त कमजोर हुने भएकाले सबैमा शूद्रको प्रभाव परेको हुन्छ ॥५१॥ कलियुग आरम्भ भएपछि धान अत्यन्त सानो अर्थात् मसिनो हुन्छ, धेरैजसो बाख्राको दूध मात्र पाइन्छ र अनुलेपन अर्थात् शरीरमा घस्ने बुकुवा एक मात्र खसको जराको मात्र उपलब्ध हुन्छ ॥५२॥ हे मुनिश्रेष्ठ ! कलियुगमा सासू र ससुरो मात्र मनुष्यहरूको मुख्य गुरु हुनेछन् र अत्यन्त मनमोहक स्वरूप भएकी पत्नी र सालो मात्र सुहृदयी अर्थात् अनन्य मित्र हुनेछन् अर्थात् मुख्य बन्धु–बान्धव हुनेछन् ॥५३॥ मनुष्यहरूले ससुराको अनुयायी भएर "को कसकी आमा र को कसको पिता सबैले आ–आफ्नो कर्मानुसार जन्म लिएको हुन्छ तथा जन्मिएपछि आफ्नो कर्म अनुसारको मरण पनि हुन्छ। त्यसकारण यो नाता–पाता अनावश्यक हो" भन्दछन् ॥५४॥ त्यस समयमा अर्थात् कलियुगमा अत्यन्त अल्पबुद्धि भएका मनुष्यहरूले वचन, मन र शरीर आदिका दोषहरूका नियन्त्रणमा परेर अर्थात् तिनीहरूको प्रभावमा अत्यन्त आसक्त भएर प्रत्येक दिन पापकर्म मात्र गरिरहेका हुन्छन् ॥५५॥ शक्तिविहीन अर्थात् निर्बल,

निः सत्त्वानामशौचानां निःश्रीकाणां तथा नृणाम्।

यद्यद् दुःखाय तत् सर्वं कलिकाले भविष्यति ॥५६॥

निःस्वाध्यायवषट्कारे स्वधास्वाहाविवर्जिते।

तदा प्रविरलो धर्मः क्वचिल्लोके निवत्स्यति ॥५७॥

तत्राल्पेनैव यत्नेन पुण्यस्कन्धमनुत्तमम्।

करोति यं कृतयुगे क्रियते तपसा हि सः ॥५८॥

अपवित्र र यथार्थ रूपमा श्रीविहीन भएको पुरुषलाई जस्तो–जस्तो दुःख हुन सक्दछ, ती सबै दुःख उसलाई कलियुगमा उपलब्ध हुनेछन् अर्थात् उसको अनिवार्य रूपमा ती सबै दुःखहरूको भोग गर्नुपर्दछ ॥५६॥ हे ब्राह्मण देवता! स्वाध्याय अर्थात् नियमपूर्वक गरिने वेदको अध्ययन र वषट्कार अर्थात् देवताहरूको उद्देश्यले आहुति दिइएको यज्ञबाट विहीन र स्वाहा अर्थात् सम्पूर्ण देवताको उद्देश्यले दिइने नैवेद्य एवं स्वधा अर्थात् पितृसम्बन्धी अन्नबाट पूर्ण रूपमा रहित भएको कलियुगमा कतै कतै केही अत्यन्त थोरै मात्रामा धर्म रहन्छ॥५७॥ तर कलियुगमा यी सबै किसिमका दोषहरू रहेका भए तापनि एउटा मुख्य गुण पनि रहेको छ। सत्ययुगमा अत्यन्त कठोर तपस्या गर्दा जुन धर्म प्राप्त हुन्छ, त्यही धर्म कलियुगमा अत्यन्त थोरै परिश्रम गर्ने मनुष्यले प्राप्त गर्न सक्दछ अर्थात् त्यस्तो मनुष्यलाई प्राप्त हुन्छ ॥५८॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे प्रथमोऽध्यायः।

ॐ

द्वितीयोऽध्यायः

अध्याय – २

## "वेदव्यासेन कलियुगस्य, शूद्राणाम्, स्त्रियाञ्च महत्वस्य वर्णनम्"

(महर्षि वेदव्यासद्वारा कलियुग, शूद्र र स्त्रीहरूको महत्त्वका विषयमा वर्णन)

पराशर उवाच

व्यासश्चाह महाबुद्धिर्यदत्रैव हि वस्तुना।

तच्छ्रूयतां महाभाग गदतो मम तत्त्वतः ॥१॥

कस्मिन् कालेऽल्पको धर्मो ददाति सुमहत् फलम्।

मुनीनामित्यभूद् वादः कैश्चासौ क्रियते सुखम् ॥२॥

सन्देहनिर्णयार्थाय वेदव्यासं महामुनिम्।

ययुस्ते संशयं प्रष्टुं मैत्रेय मुनिपुङ्गवाः ॥३॥

ददृशुस्ते मुनिं तत्र जाह्नवीसलिले द्विजा।

वेदव्यासं महाभागमर्द्धस्नातं महामतिम् ॥४॥

स्नानावसानं तत्तस्य प्रतीक्षन्तो महर्षयः।

तस्थुस्तटे महानद्यास्तरुषण्डमुपाश्रिताः ॥५॥

मग्नोऽथ जाह्नवीतोयादुत्थायाह सुतो मम।

कलिः साधुः कलिः साधुरित्येवं शृण्वतां वचः ॥६॥

तेषां मुनीनां भूयश्च ममज्ज स नदीजले।

साधु चोत्थाय साध्विति शूद्र धन्योऽसि चाब्रवीत् ॥७॥

**पराशरजीले भन्नुभयो–** हे मैत्रेय! अत्यन्त बुद्धिमान् महर्षि वेदव्यासले जुन सम्पूर्ण तत्त्वका विषयमा अर्थात् कलियुगका विषयमा जुन तात्त्विक रूपमा बताउनु भएको थियो, त्यसका सम्बन्धमा म जस्ताको त्यस्तै बताइदिन्छु, तिमी ध्यानपूर्वक सुन ॥१॥ कुनै एक समयमा मुनिहरूका बीचमा "कुन समयमा गरिएको थोरै मात्र धर्मले अत्यन्त ठूलो फल प्रदान गर्दछ" भन्ने विषयमा कुराकानी भयो। यस विषयमा कुराकानी गर्ने सिलसिलामा उनीहरूका बीचमा एउटा विवाद उत्पन्न भयो ॥२॥ हे मुनिश्रेष्ठ मैत्रेय! ती सबै उत्तम मुनिहरू आफूहरूका बीचमा उत्पन्न भएको सन्देहको निर्णय गर्नका लागि सर्वोत्कृष्ट महर्षि वेदव्यासका सामीप्यमा अर्थात् आश्रममा गए ॥३॥ हे ब्राह्मणश्रेष्ठ! त्यहाँ पुगसिकेपछि ती मुनिहरूले मेरा पुत्र वेदव्यासलाई गङ्गाजीमा आधा स्नान गरिरहेको अवस्थामा अर्थात् पूर्ण रूपमा नुहाई नसकेको अवस्थामा देखे ॥४॥ त्यसकारण ती सम्पूर्ण मुनिहरूले वेदव्यासको नुहाउने कार्य समाप्त नभएसम्म उहाँको प्रतीक्षा गर्नका लागि त्यही अत्यन्त उत्तम नदीका किनारमा रहेको एउटा रूखको फेदमा विश्राम गरे अर्थात् वेदव्यासको प्रतीक्षा गर्नका लागि त्यही अत्यन्त उत्तम नदीका किनारमा रहेको एउटा रूखको फेदमा विश्राम गरे अर्थात् वेदव्यासको प्रतीक्षा गरेर बसे ॥५॥ मेरा पुत्र वेदव्यासले नुहाउँदा–नुहाउँदै बीचमा गङ्गाजीको पानीमा डुबुल्की मारेर पानी बाहिर निस्कँदै ती आफ्नो प्रतीक्षा गरेर बसिरहेका मुनिहरूलाई सुनाउँदै "कलियुग मात्र सबैभन्दा उत्तम छ, भने ॥६॥ त्यसपछि फेरि गङ्गाजीको पानीमा डुबुल्की लगाएर पानीबाट बाहिर निस्कँदै वेदव्यासले अझै आफ्नो प्रतीक्षा गरेर बसिरहेका मुनिहरूलाई सुनाउँदै भने– "हे शूद्र ! तिमीहरू धन्य छौ, तिमीहरू नै सर्वोत्कृष्ट छौ "॥७॥ त्यसपछि एकपल्ट

स निमग्नः समुत्थाय पुनः प्राह महामुनिः ।

योषितः साधु धन्यास्तास्ताभ्यो धन्यतरोऽस्ति कः ॥८॥

ततः स्नात्वा यथान्यायमायान्तं कृतसत्क्रियम् ।

उपतस्थुर्महाभागं मुनयस्ते सुतं मम ॥९॥

कृतसंवन्दनांश्चाह कृतासनपरिग्रहान् ।

किमर्थमागता यूयमिति सत्यवतीसुतः ॥१०॥

तमूचुः संशयं प्रष्टुं भवन्तं वयमागताः ।

अलं तेनास्तु तावन्नः कथ्यतामपरं त्वया ॥११॥

कलिः सध्विति यत् प्रोक्तं शूद्रः सध्विति योषितः ।

यदाह भगवान् साधु धन्याश्चेति पुनः पुनः ॥१२॥

तत् सर्वं श्रोतुमिच्छामो न चेद् गुह्यं महामुने ।

तत् कथ्यतां ततो हृत्स्थं प्रक्ष्यामस्त्वां प्रयोजनम् ॥१३॥

इत्युक्तो मुनिभिर्व्यासः प्रहस्येदमथाब्रवीत् ।

यतां भो मुनिश्रेष्ठा यदुक्तं साधु साध्विति ॥१४॥

फेरि पानीमा डुबुल्की मारेर पानीबाट बाहिर निस्कँदै वेदव्यासले अहिलेसम्म पनि आफ्नो प्रतीक्षा गरेर नदीको तीरमा भएको एउटा रूखमुनि अर्थात् रूखको छायामा बसिरहेका मुनिहरूलाई सुनाउँदै भने– "हे स्त्रीहरू! तिमीहरू अत्यन्त श्रेष्ठ छौ, तिमीहरू धन्य छौ, तिमीहरूभन्दा अत्यधिक धन्य यस जगत्मा अन्य को छ?" ॥८॥ त्यसपछि विधिपूर्वक नुहाइसकेर आफ्नो नित्यक्रिया समाप्त गरेर अत्यन्त बुद्धिमान् मेरा पुत्र वेदव्यास आफ्नो आश्रममा आइसकेपछि धेरै पहिलादेखि उनको प्रतीक्षा गरेर बसिरहेका ती मुनीहरू पनि उनको सामीप्यमा अर्थात् नजिकमा आए ॥९॥ त्यसपछि यथायोग्य अभिवादन आदान–प्रदान गरिसकेपछि तथा यथायोग्य आसनहरूमा बसिसकेपछि सत्यवतीका पुत्ररत्न वेदव्यासले ती धेरै समय पहिलेदेखि आफ्नो प्रतीक्षा गरेर बसेका मुनिहरूसँग सोधे– "तपाईंहरू के समस्या परेर यहाँ अर्थात् मेरो आश्रममा आउनुभएको हो?" ॥१०॥ त्यसपछि ती मुनिहरूले भने– हे धर्मात्मा! हामीहरूका बीचमा कुनै एउटा विषयको निर्णय गर्ने सिलसिलामा सन्देह उत्पन्न भयो अर्थात् हामीहरूले द्विविधामा परेका कारणले त्यस विषयमा निर्णय गर्न सकेनौं । त्यसैको निर्णयका लागि हजुरको सामीप्यमा आएका थियौं । तर यस समयमा त्यो विषयलाई थाती राख्दै, हजुरले हामीलाई अर्कै विषयमा बताइदिनुहोस् ॥११॥ हे भगवन्! तपाईंले गङ्गाजीमा नुहाउँदाका अवस्थामा कयौं पटक कलियुग अत्यन्त सर्वोत्कृष्ट छ, कलियुगका शूद्र श्रेष्ठ छन् र कलियुगका आइमाई उत्तम छन्। धन्य छन् भन्नुभएको थियो । हामीलाई यसको वास्तविक अर्थको ज्ञान हुन सकेन ॥१२॥ यो सबै विषयमा हामी स्पष्ट शब्दमा अत्यन्त विस्तारपूवर्क सुन्न चाहन्छौं । हे मुनीश्वर! यदि यो विषय अत्यन्त गोपनीय रहेको छैन भने हामीलाई यसको भावार्थ बुझाइदिनुहोस् । हामीले जुन विषय निर्णायर्थ हजुर समक्ष लिएर आएका छौं ॥१३॥ ती आफ्नो आश्रममा आएका उत्तम मुनिहरूले यस किसिमको प्रश्न गरेपछि महर्षि वेदव्यासले मुसुमुसु हाँस्दै तिनीहरूसँग भन्नुभयो– मैले जुन यिनीहरूलाई पटक पटक धन्य धन्य बताएको थिएँ, त्यसको कारणका विषयमा ध्यानपूर्वक सुन्नुहोस् ॥१४॥ हे

यत्कृते दशभिर्वर्षैस्त्रेतायां हायनेन तत्।

द्वापरे तच्च मासेन ह्यहोरात्रेण तत् कलौ ॥१५॥

तपसो ब्रह्मचर्यस्य जपादेश्च फलं द्विजा।

प्राप्नोति पुरुषस्तेन कलिः साध्विति भाषितम् ॥१६॥

ध्यायन् कृते यजन् यज्ञैस्त्रेतायां द्वापरेऽर्चयन्।

यदाप्नोति तदाप्नोति कलौ सङ्कीर्त्य केशवम् ॥१७॥

धर्मोत्कर्षमतीवात्र प्राप्नोति पुरुषः कलौ।

अल्पायासेन धर्मज्ञास्तेन तुष्टोऽस्म्यहं कलेः ॥१८॥

व्रतचर्यापरैर्ग्राह्या वेदाः पूर्वं द्विजातिभिः।

ततः स्वधर्मसम्प्राप्तैर्यष्टव्यं विधिनाध्वरैः ॥१९॥

वृथा कथा वृथा भोज्यं वृथेज्या च द्विजन्मनाम्।

पतनाय ततो भाव्यं तैस्तु संयमिभिः सदा ॥२०॥

असम्यक्करणे दोषस्तेषां सर्वेषु कर्मसु।

भोज्यपेयादिकञ्चैषां नेच्छाप्राप्तिकरं द्विजाः ॥२१॥

ब्राह्मणहरू! मनुष्यलाई सत्ययुगमा दशवर्षसम्म तपस्या, ब्रह्मचर्यको पालना एवम् जप आदि गर्नाले जुन फल प्राप्त हुन्छ, त्यसै अनुसारको फल मनुष्यलाई त्रेतायुगमा एक वर्षमा, द्वापरयुगमा एक महिनामा र कलियुगमा एक दिनमा अर्थात् चौबीस घण्टाको परिश्रमबाट प्राप्त हुन सक्दछ। यस कारणले गर्दा मैले कलियुगलाई अत्यन्त सर्वोत्कृष्ट बताएको हुँ ॥१५-१६॥ सत्ययुगमा अत्यन्त कष्टपूर्वक ध्यान, योग गरेर, त्रेतायुगमा अनेकौं किसिमका यज्ञ-यज्ञादिहरूको अनुष्ठान गरेर एवं द्वापरयुगमा अर्चन अर्थात् पूजा-आजा गरेर फल प्राप्त गर्न सकिन्छ। त्यसै अनुसारको अर्थात् त्यही फल कलियुगमा केवल परमात्मा श्रीकेशवको कीर्तानबाट प्राप्त गर्न सकिन्छ अर्थात् परमात्मा श्रीकेशवको भक्तलाई त्यो फल अत्यन्त सहज रूपमा प्राप्त हुन्छ ॥१७॥ हे धर्मात्मा पुरुषहरू! कलियुगमा अत्यन्त थोरै मात्रामा साधना-उपासना गरे तापनि मनुष्यले अत्यन्त उत्तम फल प्राप्त गर्न सक्दछ। त्यसकारण म कलियुगबाट अत्यन्त प्रसन्न अर्थात् यथार्थतामा पूर्ण सन्तुष्ट भएको छु ॥१८॥ अब शूद्रहरूलाई सर्वोत्कृष्ट बताउनाको अभिप्राय स्पष्ट पार्नुछ। द्विजातिहरूले सबैभन्दा पहिले पूर्ण रूपमा ब्रह्मचर्यव्रतको नियमानुसार अर्थात् ब्रह्मचर्यमा रहेर वेदहरूको अध्ययन गर्नुपर्दछ। त्यसपछि फेरि धर्मअनुसारको आचरणका आधारमा उपार्जन गरिएको अर्थात् प्राप्त भएको धनबाट विधिपूर्वक यज्ञहरूको अनुष्ठान गर्नुपर्दछ अर्थात् यज्ञ गर्नुपर्दछ ॥१९॥ त्यसमा पनि द्विजातिहरूका लागि अनावश्यक कुराकानी, अनावश्यक खानेकुरा अर्थात् भोज्य पदार्थहरू, अविधिपूर्वक गरिएको यज्ञ आफ्नो पतन गराउने कारक तत्व हुन सक्दछ। त्यसकारण उनीहरूले सदैव अर्थात् निरन्तर रूपमा वा नियमित रूपमा संयमित रहनु पर्दछ ॥२०॥ हे ब्राह्मणहरू! जुनसुकै किसिमको आफ्नो कर्तव्यकर्म गर्दाका अवस्थामा कुनै अंशमा अर्थात् अलिकति मात्र पनि त्रुटि भयो भने द्विजातिहरू पापको भागी हुन्छन् अर्थात् उनीहरूलाई पाप लाग्दछ। उनीहरूले आफ्नो स्वेच्छाअनुसारको खानपिन अर्थात् भोजन एवं पेय पदार्थ पनि ग्रहण गर्न सक्दैनन् अर्थात् आफ्नो चाहनाअनुसार कुनै पनि वस्तु वा पदार्थको उपभोग गर्न सक्दैनन् ॥२१॥

पारतन्त्र्यं समस्तेषु तेषां कार्येषु वै यतः ।

जयन्ति ते शुभान् लोकान् क्लेशेन महता द्विजाः ॥२२॥

द्विजशुश्रूषयैवैष पाकयज्ञाधिकारवान् ।

शुभान् जयति वै लोकाञ्छूद्रो धन्यतरस्ततः ॥२३॥

भक्ष्याभक्ष्येषु नास्यास्ति पेयापेयेषु वै यतः ।

नियमो मुनिशार्दूलास्तेनासौ साध्वितीरितः ॥२४॥

स्वधर्मस्याविरोधेन नरैर्लब्धं धनं सदा ।

प्रतिपादनीयं पात्रेषु यष्टव्यञ्च यथाविधि ॥२५॥

तस्यार्जने महाक्लेशः पालने च द्विजोत्तमाः ।

तथा सद्विनियोगाय विज्ञेयं गहनं नृणाम् ॥२६॥

एभिरन्यैस्तथा क्लेशैः पुरुषा द्विजसत्तमा ।

शुभान् जयन्ति वै लोकन्प्राजापत्यादिकान् क्रमात् ॥२७॥

योषिच्छुश्रूषणं भर्तुः कर्मणा मनसा गिरा ।

कुर्वती समवाप्नोति तत्सालोक्यं यतो द्विजाः ॥२८॥

किनकि उनीहरू सबै किसिमका कर्महरूमा अर्काको नियन्त्रणमा रहेका हुन्छन् । हे ब्राह्मण देवताहरू! यस प्रकारका अनेकौं बाधा–व्यवधानका बीचमा जीवित रहँदै उनीहरूले पुण्यलोकहरू प्राप्त गर्नका लागि अत्यन्त दुःखदायी परिस्थितिको सामना गर्नुपर्दछ॥२२॥ तर जसलाई केवल मन्त्रविहीन यज्ञ अर्थात् पाकयज्ञ अथवा पञ्चमहायज्ञमध्ये ब्रह्मयज्ञबाहेकका चार यज्ञ मात्र गर्ने अधिकार रहेको त्यो शूद्रले द्विजातिहरूको सेवा मात्र गरेर सद्गति प्राप्त गर्न सक्दछ अर्थात् आफ्नो कल्याण गर्न सक्दछ। त्यसकारण मैले शूद्रलाई धन्य अर्थात् सर्वोत्तम बताएको हुँ ॥२३॥ हे मुनिश्रेष्ठहरू! शूद्रहरूलाई खान हुने वा नहुने, पिउन हुने वा नहुने यस प्रकारको कुनै नियम लागू हुँदैन अर्थात् उनीहरूले आफ्नो स्वेच्छाअनुसार जस्तोसुकै खाने–पिउने पदार्थ स्वतन्त्रतपूर्वक उपभोग गर्न सक्दछन्। त्यसकारण मैले उनीहरूलाई सर्वोत्कृष्ट बताएको हुँ ॥२४॥ अब कलियुगमा आइमाईहरू कसरी सर्वोत्कृष्ठ हुन्छन्, त्यसका विषयमा बताउँछु। पुरुषहरूले सधैं आफ्नो धर्मअनुसारको आचरण गरेर उपार्जन गरेको अर्थात् कमाएको धनबाट मात्र सत्पात्रलाई दान दिनुपर्दछ र वैदिक विधिअनुसार यज्ञ–यज्ञादि कर्म गर्नुपर्दछ॥२५॥ हे सर्वोत्कृष्ट ब्राह्मणहरू! यस प्रकारको धन उपार्जन र त्यसको संरक्षण गर्नका लागि पुरुषहरूले अत्यन्त दुःखदायक परिस्थितिको सामना गनुपर्दछ अर्थात् धेरै कष्ट सहनु पर्दछ र यसरी उपार्जन गरिएको धन सत्पात्रलाई दान दिने कार्य पनि अत्यन्त कठिन हुन्छ ॥२६॥ यसरी हे ब्राह्मणश्रेष्ठहरू! यी सबै र यस्तै किसिमका अनेकौं कष्टहरूको सामना आफ्नो धर्मको रक्षा गर्ने कार्य सम्पन्न गरिसकेपछि पुरुषहरूले क्रमबद्ध रूपमा प्राजापत्यादि अर्थात् प्रजपतिहरूका शुभ अथवा कल्याणदायक लोकहरूमा जाने अवसर पाउन सक्छन् ॥२७॥ तर कलियुगका आइमाईहरूले त केवल मन, वचन र कर्मका माध्यमद्वारा आफ्ना पतिको सेवा गरेर तथा अत्यन्त आत्मीय मित्र एवम् शुभचिन्तक मात्र बनेर पतिका बराबर शुभ लोकहरूमा जाने अवसर प्राप्त गर्नेछन्; जुन लोकहरूलाई पुरुषहरूले अत्यन्त

नातिक्लेशेन महता तानेव पुरुषो यथा।

तृतीयं व्याहृतं तेन मया साध्विति योषितः ॥२९॥

एतद्वः कथितं विप्रा यन्निमित्तमिहागताः।

तत् पृच्छध्वं यथाकामं सर्वं वक्ष्यामि वः स्फुटम् ॥३०॥

पराशर उवाच

ततस्ते मुनयः प्रोचुर्यत् प्रष्टव्यं महामुने।

अस्मिन्नेव तु तत् प्रश्ने यथावत् कथितं त्वया ॥३१॥

ततः प्रहस्य तान् प्राह कृष्णद्वैपायनो मुनिः।

विस्मयोत्फुल्लनयनांस्तापसांस्तानुपागतान् ॥३२॥

मयैष भवतां प्रश्नो ज्ञातो दिव्येन चक्षुषा।

ततो हि वः प्रसङ्गेन साधु साध्विति भाषितम् ॥३३॥

स्वल्पेनैव प्रयत्नेन धर्मः सिध्यति वै कलौ।

नैरात्मगुणाम्भोभिः क्षालिताखिलकिल्विषैः ॥३४॥

शूद्रैश्च द्विजशुश्रूषातत्परैर्मुनिसत्तमाः।

तथा स्त्रीभिरनायासं पतिशुश्रूषयैव हि ॥३५॥

ततस्त्रितमयप्येतन्मम धन्यतमं मतम्।

धर्मसंसाधने क्लेशो द्विजातीनां कृतादिषु ॥३६॥

मेहनतपूर्वक परिश्रम गरेपछि मात्र प्राप्त गर्न सक्दछन्। त्यसकारण मैले तेस्रो पटक आइमाईहरूलाई धन्य अर्थात् सर्वोत्कृष्ट बताएको थिएँ। यसकारण कलियुगका आइमाईहरू यथार्थमा सर्वोत्कृष्ट हुन्छन्, यसमा कुनै किसिमको द्विविधा छैन ॥२८-२९॥ हे उत्तम ब्राह्मणहरू! मैले तपाईंहरुसँग सबै कुरा स्पष्ट शब्दमा बताइसकें अब तपाईंहरू जुन विषयको निर्णयमा विवाद उत्पन्न भएर अर्थात् द्विविधा भएका कारणले यहाँ आउनुभएको हो, त्यो सोध्नुहोस्। त्यसका विषयमा पनि म स्पष्ट शब्दमा बताइदिनेछु ॥३०॥ **पराशरजीले भन्नुभयो–** त्यसपछि महर्षिहरूले भने– हे मुनिश्वर! हामीहरू आपसमा निर्णय गर्न नसकेर जुन कुरा सोध्नका हजुरको सामीप्यमा आएका थियौं, हजुरले त्यसको स्पष्ट जवाफ यसै प्रसङ्गमा दिइसक्नु भएको छ। यसैले अब हामीहरूले सोधिरहनु पर्ने कुनै कुरा छैन, त्यसकारण हामीहरू अत्यन्त सन्तुष्ट भयौं ॥३१॥ त्यसपछि महर्षि कृष्णद्वैपायन अर्थात् वेदव्यासले अत्यन्त आश्चर्यचकित आँखा पारिरहेका ती आफ्नो आश्रममा आएका उत्तम मुनिहरूसँग मुसुमुसु हाँस्दै भन्नुभयो ॥३२॥ मैले आफ्नो दिव्यदृष्टिका माध्यमद्वारा तपाईंहरूको प्रश्नका विषयमा पहिले नै जानिसकको थिएँ। त्यसकारण तपाईंहरूको जिज्ञासाको जवाफ दिने प्रसङ्गमा "धन्य-धन्य" भनेको थिएँ ॥३३॥ कलियुगका समयमा जुन मनुष्यले आफूमा भएका सद्गुणरूपी पानीबाट सबै पापहरूलाई यथार्थ रूपमा पखाल्न सक्दछ, उसले अत्यन्त थोरै परिश्रम गरेर धर्म कमाउन सक्दछ अर्थात् आफ्नो कल्याण गरेर मनुष्य जीवनलाई सफल बनाउन सक्दछ ॥३४॥ हे मुनिश्रेष्ठहरू! कलियुगमा शूद्रहरूले द्विजातिहरूको सेवाको प्रभावले र आइमाईहरूले पतिको सेवाका प्रभावले कुनै किसिमको परिश्रम नगरी अर्थात् अत्यन्त सहज रूपमा धर्ममय सिद्धि प्राप्त गर्दछन् अर्थात् आफ्नो मनुष्य जन्मलाई यथार्थ रूपमा सफल बनाउनेछन् ॥३५॥ त्यसकारण मेरो मान्यता अनुसार यी तीनोटै अत्यन्त धन्य अर्थात् सर्वोत्कृष्ट रहेका छन्। किनकि सत्ययुग, त्रेतायुग र द्वापरयुगमा द्विजातिहरूले धर्ममय आचरणमा रहन अत्यन्त कष्ट गर्नुपर्दछ ॥३६॥ हे धर्मात्मा

भवद्भिर्यदभिप्रेतं तदेतत् कथितं मया ।

अपृष्टेनापि धर्मज्ञाः किमन्यत् कथ्यतां द्विजाः ॥३७॥

ततः सम्पूज्य ते व्यासं प्रशंस्य च पुनः पुनः ।

यथागतं द्विजा जग्मुर्व्यासोक्तिक्षतसंशयाः ॥३८॥

भवतोऽपि महाभाग! रहस्यं कथितं मया ॥३९॥

अत्यन्तदुष्टस्य कलेरयमेको महान् गुणः ।

कीर्तनादेव कृष्णस्य मुक्तबन्धः परं व्रजेत् ॥४०॥

यच्चाहं भवता पृष्टो जगतामुपसंहृतिम् ।

प्राकृतामान्तरालाञ्च तामप्येष वदामि ते ॥४१॥

ब्राह्मणहरू! तपाईंहरूले कुनै पश्न नगर्नु भएको भएपनि तपाईंहरूले जुन विषयमा यथार्थ रूपमा जान्न चाहनुभएको थियो, त्यो सबै बताइदिएँ, अब कुन विषयमा बताइदिउँ? ॥३७॥ त्यसपछि ती महर्षिहरूले महर्षि वेदव्यासको पूजा गरेर पटक–पटक प्रशंसा गरे एवं वेदव्यासले बताइदिनुभए अनुसारको निश्चय गरेर जहाँबाट आएका थिए, त्यतै गए ॥३८॥ हे धर्मात्मा मैत्रेय! तिमीलाई पनि मैले कलियुगको रहस्यका विषयमा विस्तारपूर्वक बताइदिएँ । अत्यन्त दुष्ट कलियुगमा यो एउटा ठूलो गुण रहेको छ। कलियुगमा मनुष्यहरूले केवल परमात्मा श्रीकृष्णका नाम कीर्तन मात्र गर्नाले सम्पूर्ण बन्धनहरूबाट यथार्थ रूपमा मुक्त भएर परमपद प्राप्त गर्न सक्दछन् अर्थात् सांसारिक चक्रबाट पूर्ण रूपमा मुक्त हुन सक्दछन् ॥३९–४०॥ अब तिमीले मसँग जुन जगत्‌को महाप्रलय अर्थात् उपसंहार र प्राकृति प्रलय एवम् अवान्तर अर्थात् मध्यवर्ती प्रलयका विषयमा सोधेका थियौ, त्यसका विषयमा बताइदिन्छु सुन ॥४१॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे द्वितीयोऽध्यायः ।



## तृतीयोऽध्यायः

## अध्याय – ३

### निमेषादिकालमानस्य नैमित्तिकप्रलस्य च वर्णनम्

(निमेषादिकालको मान र नैमित्तिक अर्थात् कुनै कारणबाट हुने प्रलयको वर्णन)

पराशर उवाच

सर्वेषामेव भूतानां त्रिविधः प्रतिसञ्चरः ।

नैमित्तिकः प्राकृतिकस्तथैवात्यन्तिको मतः ॥१॥

ब्राह्मो नैमित्तिकस्तेषां कल्पान्ते प्रतिसञ्चरः ।

आत्यन्तिकश्च मोक्षाख्यः प्राकृतो द्विपरार्द्धकः ॥२॥

मैत्रेय उवाच

परार्द्धसंख्यां भगवन्! ममाचक्ष्व यया तु सः ।

द्विगुणीकृतया ज्ञेयः प्राकृतः प्रतिसञ्चरः ॥३॥

पराशर उवाच

स्थानात् स्थानं दशगुणमेकस्माद् गण्यते द्विज ।

ततोऽष्यदशमे स्थाने परार्द्धमभिधीयते ॥४॥

परार्द्धद्विगुणं यत्तु प्राकृतः प्रलयो द्विजा

तदाव्यक्तेऽखिलं व्यक्तं स्वहेतौ लयमेति वै ॥५॥

निमेषो मानुषो योऽयं मात्रा मात्रप्रमाणतः ।

तैः पञ्चदशभिः काष्ठा त्रिंशत् काष्ठास्तथा कला: ॥६॥

**पराशरजीले भन्नुभयो**– हे मैत्रेय! सबै प्राणीमात्रको प्रलय नैमित्तिक अर्थात् जुनसुकै कारणबाट, आत्यन्तिक अर्थात् लगातार भइरहने र प्राकृतिक अर्थात् स्वाभाविक यसरी तीन किसिमका हुन्छन् ॥१॥ कल्पको अन्तमा जुन ब्राह्म नाम भएको प्रलय हुन्छ, त्यसलाई नैमित्तिक अर्थात् जुनसुकै कारणबाट हुने प्रलय भनिन्छ। जुन मोक्षरूप प्रलय छ, त्यसलाई आत्यन्तिक अर्थात् लगातार भइरहने प्रलय तथा जुन दुई परार्द्ध अर्थात् ब्रह्माजीको आयुको आधाकालको अन्तमा हुन्छ, त्यसलाई प्राकृतिक प्रलय भनिन्छ ॥२॥ **मैत्रेयले भने**– हे भगवन्! हजुरले जुन दुई गुणाको अवधि भएको प्राकृतिक प्रलयका विषयमा बताउनुभएको छ, त्यो परार्द्धको संख्याको विषयमा मलाई स्पष्ट रूपमा बताइदिनुहोस् अर्थात् म संख्याका विषयमा यथार्थ रूपमा जान्न चाहन्छु ॥३॥ **पराशर जीले भन्नुभयो**– हे ब्राह्मण! एक देखि आरम्भ गरेर क्रमबद्ध रूपमा दसगुना गन्दा गन्दा जुन अठार पटक गणना गरिन्छ, त्यो संख्यालाई परार्द्ध भनिन्छ। वराह पुराणमा यी अठार संख्याका नामको सम्बन्धमा अर्थात् गणना गर्ने विधिका विषयमा प्रष्ट्याउँदै भनिएको छ– एक, दस, सय, हजार, अयुत, नियुत, प्रयुत, अर्बुद, न्युबुर्द, वृन्द, खर्व, निखर्व, शंख, पद्म, समुद्र, मध्य, अन्त र परार्द्ध ॥४॥ हे ब्राह्मणश्रेष्ठ! कोटि–कोटि सहस्र कल्पस्वरूप परार्द्धलाई दुईगुना गर्दा त्यसको परिमाणमा जति समय आउँछ, त्यति नै समयमा प्राकृतिक अर्थात् स्वाभाविक प्रलय हुन्छ। यस्तो प्रलय भएका अवस्थामा सबै पदार्थहरू आफ्नो अव्यक्त कारणमा विलीन हुन्छन् ॥५॥ मात्रा बराबर परिमाण भएको अर्थात् एक मात्रा भएको सानो अक्षरको उच्चारण गर्न जति समय लाग्दछ, त्यस बराबरको समयलाई मनुष्यको जुन निमेष हुन्छ अर्थात् निमेष भनिन्छ, त्यस्तो पन्ध्र निमेषको एक काष्ठा हुन्छ एवम् तीस काष्ठाको एक कला हुन्छ अर्थात् तीस काष्ठा बराबरको समयलाई एक कला भनिन्छ ॥६॥

नाडिका तु प्रमाणेन कला दश च पञ्च च।
उन्मानेनाम्भसः सा तु पलान्यर्द्धत्रयोदश ॥७॥
हेममाषैः कृतच्छिद्रश्चतुर्भिश्चतुरङ्गुलैः।
मागधेन प्रमाणेन जलप्रस्थस्तु स स्मृतः ॥८॥
नाडिकाभ्यामथ द्वाभ्यां मुहूर्तो द्विजसत्तम।
अहोरात्रं मुहूर्तास्तु त्रिंसन्मासो दिनैस्तथा ॥९॥
मासैर्द्वादशभिर्वर्षमहोरात्रन्तु तद्दिवि।
त्रिभिर्वर्षशतैर्वर्षं षष्ट्या चैवासुरद्विषाम् ॥१०॥
तैस्तु द्वादशसाहस्रैश्चतुर्युगमुदाहृतम्।
चतुर्युगसहस्रन्तु कथ्यते ब्रह्मणो दिनम् ॥११॥
स कल्पोऽप्यत्र मनवश्चतुर्दश महामुने।
तदन्ते चैव मैत्रेय! ब्राह्मो नैमित्तिको लयः ॥१२॥
तस्य स्वरूपमत्युग्रं मैत्रेय गदतो मम।
शृणुष्व प्राकृतं भूयस्तव वक्ष्याम्यहं लयम् ॥१३॥
चतुर्युगसहस्रान्ते क्षीणप्राये महीतले।
अनावृष्टिरतीवेग्रा जायते शतवार्षिकी ॥१४॥

एक नाडीको परिमाणमा पन्ध्र कलाको समय रहेको हुन्छ अर्थात् पन्ध्र कला बराबर एक नाडी हुन्छ। यो नाडीको समयको ज्ञान साढे बाह्र पल अर्थात् चौसट्ठी मासा बराबरको तौल भएको तामाबाट बनेको पानी राखिने पात्रबाट हुन सक्दछ ॥७॥ मगध देशको नापबाट यो पात्र जलप्रस्थ अर्थात् पानीमा राखिने बताइएको छ। त्यसमा चार अङ्गुल लामो र चार मासा सुनबाट बनेको छेस्कोले प्वाल पारिएको हुन्छ। त्यसमा अर्थात् त्यो जलपात्रमा पारिएको प्वाललाई माथितिर पारेर पानीमा डुबाइदिएपछि जति समयमा त्यो पात्र भरिन्छ, त्यति समयलाई एक नाडीको समयावधि भएको जान्नुपर्दछ ॥८॥ हे ब्राम्हणश्रेष्ठ! यस प्रकारका दुई नाडीहरूको समयावधिलाई एक मुहूर्त भनिन्छ र तीस मुहूर्तको एक दिन र रात अर्थात् चौबीस घण्टाको समय हुन्छ एवं तीस दिन र रातको एक महिना हुन्छ ॥९॥ बाह्र महिनाको एक वर्ष हुन्छ। मनुष्यको यही एक वर्ष देवताहरूको एक दिन र रात अर्थात चौबीस घण्टाको समय हुन्छ। यस किसिमको तीन सय साठी मानवीय वर्षहरूको देवताहरूको एक वर्ष अर्थात् बाह्र महिनाको समयावधि हुन्छ ॥१०॥ यस प्रकारका बाह्र हजार दिव्य वर्षहरूको एक चतुर्युग हुन्छ तथा एक हजार चतुर्युगको समयावधिलाई ब्रह्माजीको एक दिन हुने बताइएको छ ॥११॥ हे मुनिश्रेष्ठ! ब्रह्माजीको एक दिनलाई एक कल्प भनिन्छ तथा एक कल्पमा चौध मनु हुन्छन्। हे मैत्रेय! यसैको अर्थात् यही कल्पको अन्तमा ब्रम्हाजीको नैमित्तिक अर्थात् जुनसुकै कारणबाट हुने प्रलय हुन्छ ॥१२॥ हे मैत्रेय! यो नैमित्तिक अर्थात् जुनकुनै कारणबाट हुने प्रलयको स्वरूप अत्यन्त भयानक हुन्छ। अब म तिमीलाई त्यो भयानक स्वरूपका विषयमा बताउनेछु, ध्यानपूर्वक सुन। प्राकृतिक अर्थात् स्वाभाविक प्रलयका विषयमा तिमीलाई पछि बताउनेछु ॥१३॥ एक हजार चतुर्युग बितिसकेपछि जब पृथ्वी क्षीणप्राय अर्थात् लगभग खिइसकेको हुन्छ, त्यसपछि सय वर्षहरूसम्म अत्यन्त भयानक किसिमको अनावृष्टि हुनेछ अर्थात् पृथ्वीमा आवश्यकता अनुसार पानी पर्नेछैन ॥१४॥ हे सर्वोत्कृष्ट मुनि! त्यस समयमा जुन अल्पशक्ति अर्थात्

ततो यान्यल्पसाराणि तानि सत्त्वान्यशेषतः ।

क्षयं यान्ति मुनिश्रेष्ठ! पार्थिवान्यत्र पीडनात् ॥१५॥

ततः स भगवान् विष्णू रुद्ररूपधरोऽव्ययः ।

क्षयाय यतते कर्तुमात्मस्थाः सकलाः प्रजाः ॥१६॥

ततः स भगवान् विष्णुर्भानोः सप्तसु रश्मिषु ।

स्थितः पिबत्यशेषाणि जलानि मुनिसत्तम ॥१७॥

पीत्वाम्भांसि समस्तानि प्राणिभूमिगतानि वै ।

शोषं नयति मैत्रेय! समस्तं पृथिवीतलम् ॥१८॥

सरित्–समुद्र–शैलेषु शैल–प्रस्रवणेषु च ।

पातालेषु च यत्तोयं सर्वं नयति तत् क्षयम् ॥१९॥

ततस्तस्यानुभावेन तोयाहारोपबृंहिताः ।

त एव रश्मयः सप्त जायन्ते सप्त भास्कराः ॥२०॥

अधश्चोर्ध्वञ्च ते दीप्तास्ततः सप्त दिवाकराः ।

दहन्त्यशेषं त्रैलोक्यं सपातालतलं द्विज ॥२१॥

दह्यमानन्तु तैर्दीप्तैस्त्रैलोक्यं द्विज! भास्करैः ।

साद्रिनद्यर्णवाभोगं निःस्नेहमभिजायते ॥२२॥

अत्यन्त थोरै मात्रामा शक्ति भएका पार्थिव जीव अर्थात् राजाहरू हुनेछन्, ती सबै अनावृष्टि अर्थात् आकाशबाट झर्ने पानी पृथ्वीमा झर्ने काममा अवरोध भएका कारणले यथार्थ रूपमा विनष्ट हुन्छन्। किनकि, उनीहरूमा अनावृष्टिबाट उत्पन्न भएको भयानक पीडा सहने सामर्थ्य रहेको हुँदैन ॥१५॥ त्यसपछि रूद्रस्वरूप धारण गर्नुभएका परब्रह्म परमात्मा श्रीविष्णुले सम्पूर्ण संसारको यथार्थ रूपमा सर्वनाश गर्नका लागि पृथ्वीमा भएका सबै जीवमात्रलाई आफूमा विलीन गराउने प्रयास गर्नुहुनेछ ॥१६॥ हे मुनिश्रेष्ठ! त्यस सम्बन्धमा रुद्रस्वरूप धारण गर्नुभएका परब्रह्म परमात्मा श्रीविष्णुले सूर्यका सातओटै किरणहरूमा अवस्थित भएर पृथ्वीमा भएको सबै पानी पिउनु हुन्छ अर्थात् आफूभित्र समाहित गराइदिनुहुन्छ ॥१७॥ हे मैत्रेय! यस किसिमबाट परब्रह्म परमात्मा श्रीविष्णुले प्राणीहरूमा तथा पृथ्वीमा अवस्थित भएको सबै पानी शोषण गरेर अर्थात् पिउनु भएर सम्पूर्ण पृथ्वीमण्डललाई पूर्ण रूपमा सुख्खा पार्नुहुन्छ; एक थोपा पानी पनि रहँदैन ॥१८॥ यसरी परमात्मा श्रीविष्णुले समुद्र, नदीहरूमा, पर्वतीय नदीहरूमा, झरनाहरूमा तथा विभिन्न पातालहरूमा अर्थात् खाडल वा जमीनको प्वालहरूमा जनि पानी रहेको छ, त्यो सबैलाई पूर्ण रूपमा सुकाइदिनुहुन्छ अर्थात् पिइदिनुहुन्छ ॥१९॥ त्यसपछि परब्रह्म परमात्मा श्रीविष्णुको प्रभावबाट यथार्थ रूपमा प्रभावित भएर तथा सम्पूर्ण पानी पिएका कारणले पुष्ट भएर ती सूर्यका सातओटै किरणहरू सात सूर्यमा परिणत हुन्छन् अर्थात् सातोटा सूर्य बन्दछन् ॥२०॥ हे ब्राह्मणश्रेष्ठ! ती अत्यन्त प्रज्वलन–शक्ति भएका सातओटै सूर्यहरूले तल माथि सबैतिर तथा पातालसम्मका सम्पूर्ण लोकहरूलाई अर्थात् सम्पूर्ण ब्रह्माण्डमा रहेका तीनोटै लोकहरूलाई जलाएर पूर्ण रूपमा भस्म गरिदिन्छन् ॥२१॥ हे सर्वोत्कृष्ट ब्राह्मणदेवता! यसरी ती अत्यन्त प्रज्वलन–शक्ति भएका सूर्यहरूबाट यथार्थ रूपमा भस्म भएका तीनोटै लोकहरूका पर्वत, नदीहरू र समुद्रसहित सबै किसिमका पानीका स्रोतहरू पूर्ण रूपमा रस अर्थात् पानीविहीन हुन्छन् ॥२२॥ त्यसपछि सम्पूर्ण त्रिलोक

ततो निर्दग्धवृक्षाम्बु त्रैलोक्यमखिलं द्विज।

भवत्येषा च वसुधा कूर्मपृष्ठोपमाकृतिः ॥२३॥

ततः कालाग्निरुद्रोऽसौ भूत्वा सर्वहरो हरिः।

शेषनिःश्वाससम्भूतः पातालानि दहत्यधः ॥२४॥

पातालानि समस्तानि स दग्ध्वा ज्वलनो महान्।

भूमिमभ्येत्य सकलं बभस्ति वसुधातलम् ॥२५॥

भुवर्लोकं ततः सर्वं स्वर्लोकञ्च सुदारुणः।

ज्वालामालामहावर्तस्वत्रैव परिवर्तते ॥२६॥

अम्बरीषमिवाभाति त्रैलोक्यमखिलं तदा।

ज्वालावर्तपरीवारमुपक्षीणचराचरम् ॥२७॥

ततस्तापपरीतास्तु लोकद्वयनिवासिनः।

कृताधिकारा गच्छन्ति महर्लोकं महामुने ॥२८॥

तस्मादपि महातापतप्ता लोकास्ततः परम्।

गच्छन्ति जनलोकं ते दशावृत्त्या परैषिणः ॥२९॥

ततो दग्ध्वा जगत् सर्वं रुद्ररूपी जनार्दनः।

मुखनिः श्वासजान् मेघान् करोति मुनिसत्तम ॥३०॥

ततो गजकुलप्रख्यास्तडित्वन्तोऽतिनादिनः।

उत्तिष्ठन्ति तदा व्योम्नि घोराः संवर्तका घनाः ॥३१॥

अर्थात् ब्रह्माण्डमा अवस्थित तीनोटै लोकहरूका रुख विरुवा एवं पानी आदि यथार्थ रूपमा विनष्ट भएकाले यो सम्पूर्ण पृथ्वी कछुवाको पिठ्यूँ अर्थात् ढाड जस्तै अत्यन्त साह्रो अर्थात् कडा हुन्छ ॥२३॥ त्यसपछि सम्पूर्ण संसारको पूर्ण रूपमा विनष्ट गराउने कार्यमा अत्यन्त उत्साहित भएर लाग्नुभएका अनन्त परमात्मा श्रीहरिले शेषनागको मुखबाट निस्कने श्वास-प्रश्वासबाट उत्पन्न हुने कालाग्नि रूद्रस्वरूप धारण गर्नुभएर सम्पूर्ण पाताललोकलाई भस्म गराइदिनुहुन्छ अर्थात् पाताल लोकलाई पूर्ण रूपमा डढाइदिनुहुन्छ ॥२४॥ त्यसरी निस्किएको त्यो अत्यन्त प्रज्वलित कालस्वरूप आगोको ज्वालाले सम्पूर्ण पाताल खण्ड अर्थात् पाताललोकलाई पूर्ण रूपमा भस्म गराइसकेपछि पृथ्वीमा आएर पृथ्वीलोकलाई पनि यथार्थ रूपमा भस्म गराइदिन्छ अर्थात् डढाएर सर्वनाश गरिदिन्छ ॥२५॥ त्यसपछि त्यो अत्यन्त प्रज्वलित भएको आगोका लप्काले भूर्लोक समूहलाई जलाएर पूर्ण रूपमा नष्ट पारिदिएर पछि स्वर्गलोकलाई जलाएर भस्म पारिदिन्छ। त्यसपछि त्यो आगोको ज्वालारूपी मालाको अत्यन्त ठूलो भुमरी त्यहीँ घुमिरहन थाल्दछ ॥२६॥ यसरी अत्यन्त प्रज्वलित आगोका भुमरीहरूबाट ढाकिएर सम्पूर्ण चराचर जगत् पूर्ण रूपमा नष्ट भइसकेपछि समस्त त्रिलोक अत्यधिक रूपमा तातो कराहीका जसरी नै अत्यन्त रातो देखिन थाल्दछ अर्थात् आगोमा धेरै समयसम्म पोलेको फलाम जस्तै रातो हुन्छ ॥२७॥ हे मुनिश्रेष्ठ! त्यस समयमा भुवर्लोक र स्वर्गलोकमा निवास गर्ने मनु आदि महात्माहरू अत्यन्त प्रज्वलित भएको आगोका तापबाट अत्यधिक मात्रामा पीडित भएर महर्लोकमा गएर बस्न थाल्दछन् ॥२८॥ तर महर्लोकमा पनि त्यो अत्यधिक रूपमा अर्थात् उग्र रूपमा प्रज्वलित भएको आगोको तापबाट अत्यन्त पीडित भएर उनीहरू जीवित रहने आशा राख्दै जनलोक अर्थात् माथिका सात लोकमध्येको महर्लोकमाथिको लोकमा जान्छन्। त्यसपछि विजुली र वज्रको जस्तो अत्यन्त भयानक शब्दबाट सम्पन्न संवर्तक नाम भएको अत्यन्त भयङ्कर बादलको समूह हात्तीको आकार जस्तो रूपमा आकाशमा पूर्ण रूपमा फैलन्छ ॥२९-३१॥ त्यस समयमा कुनै बादल नीलो

केचिन्नीलोत्पलश्यामाः केचित् कुमुदसन्निभाः ।
धूम्रवर्णा घनाः केचित् केचित् पीताः पयोधराः ॥३२॥
केचिद्रासभवर्णाभा लाक्षारसनिभास्तथा ।
केचिद्वैडूर्यसङ्काशा इन्द्रनीलनिभाः परे ॥३३॥
शङ्खकुन्दनिभाश्चान्ये जात्यञ्जननिभास्तथा ।
इन्द्रगोपनिभाः केचिन्मनः शिलनिभास्तथा ॥३४॥
चाषपत्रनिभाः केचिदुत्तिष्ठन्ति घना घनाः
केचित् पुरवराकराः केचित् पर्वतसन्निभाः ॥३५॥
कूटागारनिभाश्चान्ये केचित् स्थलनिभा घनाः ।
महारावा महाकायाः पूरयन्ति नभस्तलम् ॥३६॥
वर्षन्तस्ते महासारैस्तमग्निमतिभैरवम् ।
शमयन्त्यखिलं विप्र त्रैलोक्यान्तरविस्तृतम् ॥३७॥
नष्टे चाग्नौ शतं तेऽपि वर्षाणामनिवारिताः ।
प्लावयन्तो जगत् सर्वं प्लावयन्ति दिवं द्विज ॥३८॥
अन्धकारीकृते लोके नष्टे स्थावरजङ्गमे ।
वर्षन्ति ते महामेघा वर्षाणामधिकं शतम् ॥३९॥

कमल जस्तै श्यामवर्ण भएको, कुनै चन्द्रकमल जस्तै सेतो वर्ण भएको, कुनै ध्वाँसेवर्ण भएको एवं कुनै पहेँलो वर्ण भएका हुन्छन् ॥३२॥ त्यसैगरी कुनै कुनै गधाको जस्तो वर्ण भएको, कुनै लाहाको जस्तो रङ्ग भएको, कुनै लहसुनी रत्नजस्तो अत्यन्त देदीप्यमान र कुनै इन्द्र नीलमणिका समान हुनेछन् ॥३३॥ कुनै शङ्ख तथा कुन्द अर्थात् करबीरको फूल जस्तै, कुनै चमेलीको फूल जस्तै उज्ज्वल वर्ण भएको, कुनै कालो वर्ण भएको, कुनै इन्द्रगोप अर्थात् वीरबहुटी कीराजस्तै रातो वर्ण भएको कुनै मैनशिला जस्तै गेरुवर्ण भएको हुनेछन् ॥३४॥ कुनै मयूरको प्वाँखको जस्तो रङ्ग भएका, कुनै बाक्लो, कुनै अत्यन्त ठूलो आकार भएको कुनै पर्वतको जस्तो आकार भएको तथा कुनै नगरको जस्तो आकार भएको हुनेछन् ॥३५॥ कुनै घर विशेषका बराबर अत्यन्त बृहदाकार, कुनै पृथ्वी जस्तै पूर्ण रूपमा फैलिएको, यी सबै बादलहरूले अत्यन्त भयानक शब्द निकाल्दै सम्पूर्ण आकाशलाई पूर्ण रूपमा ढाकिदिन्छन् ॥३६॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि त्यो बादल–समूहले अत्यन्त घनघोर अर्थात् मुसलधारे पानीको वर्षा गराएर तीनोटै लोकहरूमा पूर्ण रूपमा फैलिएको त्यो अत्यन्त भयानक आगोलाई शान्त गराइदिन्छन् अर्थात् निभाइदिन्छन् ॥३७॥ हे ब्राह्मणश्रेष्ठ! त्यो बादल समूहले आफ्नो अविरल धाराका माध्यमद्वारा भूर्लोकलाई अर्थात् पृथ्वीलोकलाई पूर्ण रूपमा पानीमा डुबाइसकेपछि भुवर्लोक र त्यसभन्दा माथिका लोकहरूलाई पनि पूर्ण रूपले पानीमा डुबाइदिन्छन् ॥३८॥ यसरी सम्पूर्ण संसारलाई चारैतिर अँध्यारो बनाएर तथा सम्पूर्ण स्थावर एवम् जीवहरू पूर्ण रूपमा नष्ट भए तापनि ती अत्यन्त भयानक बादल समूहले सय वर्षहरू भन्दा धेरै समयसम्म पानी वर्षाइरहन्छन् अर्थात् पानी पारिरहन्छन् ॥३९॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे तृतीयोऽध्यायः ।

ॐ

## चतुर्थोऽध्यायः　　अध्याय– ४

### प्राकृतप्रलयवर्णनम्

(प्राकृतिक अर्थात् स्वाभाविक प्रलयको वर्णन)

पराशर उवाच

सप्तर्षिस्थानमाक्रम्य स्थितेऽम्भसि महामुने।

एकार्णवं भवत्येव त्रैलोक्यमखिलं ततः ॥१॥

मुखनिःश्वासजो विष्णोर्वायुस्तान् जलदांस्ततः।

नाशयित्वा तु मैत्रेय! वर्षाणामधिकं शतम् ॥२॥

सर्वभूतमयोऽचिन्त्यो भगवान् भूतभावनः।

अनादिरादिर्विश्वस्य पीत्वा वायुमशेषतः ॥३॥

एकार्णवे ततस्तस्मिन् शेषशय्यास्थितः प्रभुः।

ब्रह्मरूपधरः शेते भगवानादिकृद्धरिः ॥४॥

जनलोकगतैः सिद्धैः सनकाद्यैरभिष्टुतः।

ब्रह्मलोकगतैश्चैव चिन्त्यमानो मुमुक्षुभिः ॥५॥

आत्ममायामयीं दिव्यां योगनिद्रां समास्थितः।

आत्मानं वासुदेवाख्यं चिन्तयन् परमेश्वरः ॥६॥

एष नैमित्तिको नाम मैत्रेय! प्रतिसञ्जरः।

निमित्तं तत्र यच्छेते ब्रह्मरूपधरो हरिः ॥७॥

**पराशरजीले भन्नुभयो–** हे सर्वोत्कृष्ट मुनि! जब सप्तर्षिहरूको निवास-स्थानसम्म जलमग्न हुन्छ, त्यसपश्चात् यी तीनोटै लोकहरू एउटा महासमुद्र अर्थात् महासागर जस्तै हुन्छन् ॥१॥ हे मैत्रेय! त्यसपछि परमात्मा श्रीविष्णुका मुखबाट निस्किएको श्वासवायुले त्यो अत्यन्त भयानक बादलको समूहलाई पूर्ण रूपले विनष्ट गरिदिएर फेरि सय वर्षहरूसम्म यो वायु निरन्तर रूपमा बहिरहन्छ अर्थात् चलिरहन्छ ॥२॥ त्यसपछि सम्पूर्ण विश्वका आदिपुरुष, आदि र अन्त नहुनुभएका, सबै प्राणीमात्रमा समान रूपमा विराजमान हुनुभएका, चिन्तन गर्न नसकिने र भूतभावन, परब्रह्मस्वरूप आदि कर्ता परमात्मा श्रीविष्णु त्यो सम्पूर्ण वायुलाई पूर्णरूले पिइदिनुभएर एक रूप भएको त्यो समुद्रमा अवस्थित रहेको शेषनारायणको शय्या अर्थात् बिछ्यौनामा अत्यन्त आनन्दपूर्वक सुत्नुहुन्छ ॥३–४॥ त्यस समयमा जनलोकमा निवास गर्ने सनकादि सिद्धहरूले उहाँ परब्रह्म परमात्मा श्रीविष्णुको स्तुति गर्दछन् र ब्रह्मलोकमा अवस्थित रहेका मुमुक्षुहरूले उहाँ परमात्मा श्रीविष्णुको अत्यन्त श्रद्धा र भक्तिपूर्वक ध्यान वा उपासना गर्दछन् ॥५॥ त्यस समयमा परमेश्वर परमात्मा श्रीविष्णु सम्पूर्ण सांसारिक कार्यबाट यथार्थ रूपमा अलग हुनुभएर आफ्नो वासुदेवात्मक स्वरूपको चिन्तन गर्दै दिव्य योगमायाको आश्रयमा रहँदै आनन्दपूर्वक योगनिद्रा धारण गर्नुहुन्छ ॥६॥ हे मैत्रेय! यस प्रलयमा ब्रह्मास्वरूप धारण गर्नुभएका परमात्मा श्रीहरिको शयन नै निमित्त अर्थात् कारण हो। त्यसकारण यसलाई नैमित्तिक अर्थात् जुनकुनै कारणबाट हुने प्रलय भनिन्छ ॥७॥ जुन समयमा सम्पूर्ण विश्वका परम आत्मा परमात्मा श्रीविष्णु जाग्रतावस्थामा रहनु हुन्छ, त्यस समयमा संसारका सबै किसिमका चेष्टाहरू

यदा जागर्ति विश्वात्मा स तदा चेष्टते जगत्।

निमीलत्येतदखिलं योगशय्याशयेऽच्युते ॥८॥

पद्मयोनेर्दिनं यत्तु चतुर्युगसहस्रवत्।

एकार्णवाप्लुते लोके तावती रात्रिरिष्यते ॥९॥

ततः प्रबुद्धो रात्र्यन्ते पुनः सृष्टिं करोत्यजः।

ब्रह्मस्वरूपधृग् विष्णुर्यथा ते कथितं पुरा ॥१०॥

इत्येष कल्पसंहारश्चान्तरः प्रलयो द्विज।

नैमित्तिकस्ते कथितः प्राकृतं शृण्वतः परम् ॥११॥

अनावृष्ट्याग्निसम्पर्कात् कृते संक्षालने मुने।

समस्तेष्वेव लोकेषु पातालेष्वखिलेषु च ॥१२॥

महदादेर्विकारस्य विशेषान्तस्य संक्षये।

कृष्णेच्छाकारिते तस्मित् प्रवृत्ते प्रतिसञ्चरे ॥१३॥

आपो ग्रसन्ति वै पूर्वं भूमेर्गन्धात्मकं गुणम्।

आत्तगन्धा ततो भूमिः प्रलयत्वाय कल्पते ॥१४॥

प्रणष्टे गन्धतन्मात्रे भवत्युर्वी जलात्मिका।

रसाज्जलं समुद्भूतं तस्माज्जातं रसात्मकम् ॥१५॥

आपस्तदा प्रवृद्धास्तु वेगवत्यो महास्वनाः।

सर्वमापूरयन्तीदं तिष्ठन्ति विचरन्ति च।

सलिलेनैवोर्मिमता लोका व्याप्ताः समन्ततः ॥१६॥

भइरहेका हुन्छन्। जुन समयमा उहाँले आफ्नो अत्यन्त प्रिय शेषनागद्वारा आफैंमा बनाइएको शय्यामा सुत्नुहुन्छ, त्यस समयमा सम्पूर्ण संसार विलीन हुन्छ अर्थात् पूर्ण रूपमा निस्क्रिय हुन्छ ॥८॥ जस्ता प्रकारले एक हजार चर्तुर्युग ब्रह्माजीको एक दिन हुन्छ। त्यसरी नै संसार एकै किसिमको अर्थात् एकनास भएपछि त्यति नै लामो समयको उहाँको एक रात्रि पनि हुन्छ ॥९॥त्यसपछि त्यो रात्रिको अन्त भइसकेपछि ब्रह्माको स्वरूप धारण गर्नुभएका अजन्मा एवम् अविनाशी परब्रह्म परमात्मा श्रीविष्णु जाग्रतावस्थामा फर्किनुहुन्छ र फेरि ब्रह्माको रूपमा अवस्थित हुनुभएर मैले यसभन्दा पहिले जसरी बताएको थिएँ, त्यसै किसिमबाट सृष्टि गर्नुहुन्छ ॥१०॥ हे ब्राह्मणश्रेष्ठ! यस किसिमबाट नैमित्तिक अर्थात् जुनकुनै कारणबाट हुने प्रलय र त्यसपछि फेरि सृष्टिको रचना हुन्छ। यसरी मैले तिमीलाई नैमित्तिक र कल्पको अन्तमा हुने प्रलयका विषयमा बताइदिएँ। अब प्राकृतिक अर्थात् स्वाभाविक प्रलयका विषयमा सुन ॥११॥ हे सर्वोत्कृष्ट मुनि! यसभन्दा पहिले बताइए अनुसारको अनावृष्टि र आगोको संयोगबाट तीनोटै लोकहरू र पातालहरू पूर्ण रूपमा विनष्ट भइसकेपछि महत्तत्त्वदेखि पृथ्वीसम्ममा उत्पन्न भएका सबै किसिमका विकारहरूलाई ध्वस्त पार्नका लागि परमात्मा श्रीकृष्णको स्वेच्छाअनुसार अर्थात् उहाँको इच्छाअनुसार प्रलयको समय आउँछ अर्थात् प्रलय हुन्छ ॥१२-१३॥ त्यस समयमा पानीको समूहले सबैभन्दा पहिले पृथ्वीको गुण गन्धलाई आफूमा विलीन गराउँदछ। जब पृथ्वीको गुण गन्ध समाप्त हुन्छ, त्यसपश्चात् पृथ्वीको प्रलय हुने समय आउँदछ अर्थात् पृथ्वीको प्रलय हुन्छ ॥१४॥ गन्धतन्मात्रा स्वरूप गुण नष्ट भइसकेपछि पृथ्वी समुद्रको पानीमा विलीन हुन्छ। रसबाट पानी उत्पन्न हुन्छ, त्यसकारण पानीलाई रसात्मक भएको सम्झनु पर्दछ ॥१५॥ त्यस समयमा अत्यधिक रूपमा बढेको त्यो पानीले अत्यन्त तीव्र गतिमा बगेका कारणले भयानक शब्द निकाल्दै सम्पूर्ण पृथ्वीलाई अर्थात् यो जगत्लाई पूर्ण रूपमा ढाकिदिन्छ अर्थात् आफैंमा समाहित गराइदिन्छ। यो पानी कहिले स्थिर अवस्थामा रहन्छ र कहिले बग्न थाल्दछ। त्यसपश्चात् तरङ्ग अर्थात् छालहरूबाट परिपूर्ण भएको पानी चारोटै दिशाहरूमा फैलिन्छ अर्थात् सबैतिरबाट बग्दछ ॥१६॥ त्यसपछि पानीको गुणका रूपमा रहेको

अपामपि गुणो यस्तु ज्योतिषा पीयते तु सः ।

नश्यन्त्यापस्ततस्ताश्च रसतन्मात्रसंक्षयात् ॥१७॥

ततश्चापो हृतरसा ज्योतिषं प्राप्नुवन्ति वै ।

अग्न्यवस्थे तु सलिले तेजसा सर्वतो वृते ॥१८॥

स चाग्निः सर्वतो व्याप्त आदत्ते तज्जलं तदा ।

सर्वमापूर्य तेजोभिस्तदा जगदिदं शनैः ॥१९॥

अर्चिर्भिः संवृते तस्मिन् तिर्यगूर्ध्वमधस्तथा ।

ज्योतिषोऽपि परं रूपं वायुरत्ति प्रभाकरम् ॥२०॥

प्रलीने च ततस्तस्मिन् वायुभूतेऽखिलात्मनि ।

प्रनष्टे रूपतन्मात्रे हृतरूपो विभावसुः ॥२१॥

प्रशाम्यति तदा ज्योतिर्वायुर्दोधूयते महान् ।

निरालोके तदा लोके वाय्ववस्थे च तेजसि ॥२२॥

ततस्तु मूलमासाद्य वायुः सम्भवमात्मनः ।

ऊर्ध्वञ्चाधश्च तिर्यक् च दोधवीति दिशो दश ॥२३॥

वायोरपि गुणं स्पर्शमाकाशो ग्रसते पुनः ।

प्रशाम्यति ततो वायुः खन्तु तिष्ठत्यनावृतम् ॥२४॥

रसलाई (अग्नि) आगोले शोषण गर्दछ अर्थात् पिउँदछ। यसरी आगोबाट शोषित भएर रस–तन्मात्रा पूर्ण रूपमा नष्ट भएपछि पानीको समूह विलीन हुन्छ अर्थात् पानी पनि पूर्ण रूपमा नष्ट हुन्छ ॥१७॥ त्यसपछि त्यो पूर्ण रूपमा रसविहीन भएको पानीको समूहले तेजमा अर्थात् आगोमा प्रवेश गर्दछ। यसपछि क्रमबद्ध रूपमा तेज अत्यन्त प्रबल स्वरूप धारण गरेर सम्पूर्ण भुवन अर्थात् लोकहरूमा व्याप्त हुन्छ अर्थात् त्यो तेजले सबै लोकहरूलाई आफ्नो नियन्त्रणमा लिन्छ ॥१८॥ त्यो अत्यन्त प्रज्वलित भएको अग्निले अर्थात् आगोले सबैतिर फैलिएर पानीको समूहलाई आफूमा विलीन गराउँदछ र क्रमिक रूपमा आफ्नो तेज अर्थात् लप्काले यो सम्पूर्ण जगत्लाई पूर्ण रूपमा व्याप्त गर्दछ अर्थात् ढाक्दछ ॥१९॥ त्यस समयमा अग्नि अर्थात् त्यो अत्यन्त प्रज्वलित भएको आगोद्वारा तल माथि तथा सबै लोकको संहार हुन्छ। त्यसपश्चात् वायुको समूहले तेजहरूका परम आधार प्रभाकर अर्थात् सूर्यलाई आफूमा विलीन गराउँदछ ॥२०॥ तेजको समूह विनष्ट भएपछि सम्पूर्ण भुवन अर्थात् संसार वायुमय हुन्छ र सबै तेज आफ्नो स्वरूपको विनाश भएका कारणले अत्यन्त शान्त स्वभाव भएको हुन्छ अर्थात् पूर्ण रूपमा शक्ति विहीन भएकाले तेज अर्थात् आगोको कुनै अस्तित्व रहँदैन ॥२१॥ त्यस समयमा चारैतिर वायुमात्र प्रवाहित हुन्छ अर्थात् बगिरहेको हुन्छ तथा त्यो तेजको समूह पूर्ण रूपमा वायुमा विलीन भइसकेपछि सम्पूर्ण संसार यथार्थ रूपमा अन्धकारमय हुन्छ अर्थात् संसारमा ज्योति वा प्रकाशको आभा अलिकतिमात्र पनि रहँदैन अथवा संसार औंसीको रातजस्तो अत्यन्त अँध्यारो हुन्छ ॥२२॥ त्यसपश्चात् फेरि अत्यन्त तीव्र गतिमा चलिरहेको वायुले आफ्नो उत्पत्तिको मुख्य आधार आकाशको अवलम्बन गरेर तल, माथि र कोणहरू अर्थात् दसै दिशाहरूलाई अत्यन्त कम्पित गराउँछ अर्थात् पूर्ण रूपमा हल्लाउँदछ ॥२३॥ त्यसपछि वायुको गुणस्वरूप स्पर्शलाई आकाशले आफूमा विलीन गराउँदछ। त्यस समयमा त्यो अत्यन्त तीव्र गतिमा चलिरहेको वायु यथार्थ रूपमा शान्त हुन्छ र आकाश पूर्णरूपमा विकारहरूबाट रहित अर्थात् अत्यन्त निर्मल एवम् स्वच्छ हुन्छ ॥२४॥ त्यस समयमा

अरूपमरसस्पर्शमगन्धं न च मूर्तिमत्।

सर्वमापूरयच्चैतत् सुमहत् सम्प्रकाशते ॥२५॥

परिमण्डलं तच्छुषिरमाकाशं शब्दलक्षणम्।

शब्दमात्रं तदाकाशं सर्वमावृत्य तिष्ठति ॥२६॥

ततः शब्दं गुणं तस्य भूतादिर्ग्रसते पुनः।

भूतेन्द्रियेषु युगपद् भूतादौ संस्थितेषु वै ॥२७॥

अभिमानात्मको ह्येष भूतादिस्तामसः स्मृतः।

भूतादिं ग्रसते चापि महान् वै बुद्धिलक्षणः ॥२८॥

उर्वी महांश्च जगतः प्रान्तेऽन्तर्बाह्यतस्तथा ॥२९॥

एवं सप्त महाबुद्धे क्रमात् प्रकृतयस्तु वै।

प्रत्याहारे तु ताः सर्वा प्रविशन्ति परस्परम् ॥३०॥

येनेदमावृतं सर्वमण्डमप्सु प्रलीयते।

सप्तद्वीपसमुद्रान्तं सप्तलोकं सपर्वतम् ॥३१॥

उदकावरणं यत्तु ज्योतिषा पीयते तु तत्।

ज्योतिर्वायौ लयं याति यात्याकाशे समीरणः ॥३२॥

रूप, रस, स्पर्श र आकारबाट पूर्ण रूपमा विहीन भए
आकाश सबै लोकहरूमा यथार्थ रूपमा व्याप्त भ
अत्यन्त प्रकाशमय अर्थात् अत्यन्त उज्यालो भएर रह
अर्थात् आकाशको अस्तित्व रहेको देखिन्छ ॥२५॥ त
समयमा चारैतिरबाट गोलाकार एवं प्वालबाट सम
शब्दलक्षण आकाश मात्र बच्दछ अर्थात् बाँकी रह
तथा यो शब्दमय अर्थात् शब्दलक्षण सम
आकाशलाई पूर्ण रूपमा ढाकेर अवस्थित भएको
अर्थात् बसेको हुन्छ ॥२६॥ त्यसपछि आकाश
गुणस्वरूप शब्दलाई भूतादिले आफूमा विल
गराउँदछ। यस भूतादिमा एकै पटक पञ्चभूत (पृ
पानी, आकाश, तेज, वायु) र इन्द्रियहरूको समूह
विलीन हुनछन् अर्थात् त्यसमा पूर्ण रूपले समा
हुन्छन् ॥२७॥ त्यसपछि अहङ्कारमात्र रहने भएव
त्यसलाई तामस अर्थात् तामसको बाहुल्य रहेको सम
पर्दछ। त्यसपछि फेरि भूतादिहरूलाई पनि (सत्त्वगु
बाहुल्य रहने भएकाले) बुद्धिस्वरूप महत्तत्त्वले आ
विलीन गराउँदछ अर्थात् आफ्नो नियन्त्रणमा लिन्छ॥
जसरी पृथ्वी, महत्तत्त्व ब्रह्माण्ड र आन्तरिक जग
आदि एवं अन्तिमका सीमाहरू हुन्, त्यसरी नै बा
जगत्को पनि आदि र अन्तिम सीमाहरू हुन् ॥२९
अत्यन्त बुद्धिमान् मैत्रेय! यस प्रकार पृथ्वी आ
क्रमअनुसार जुन सातोटा आवरणका सम्बन्
बताइएको छ, यी सातोटै आवराणहरू प्रलयका सम
पहिलेकै जसरी अर्थात् पृथ्वी आदिको क्रमानुसार पर
आ–आफ्नो कारक तत्त्वमा अर्थात् कारणमा वि
हुन्छन् ॥३०॥ जसबाट यी सम्पूर्ण लोकहरू पूर्ण रू
ढाकिएका हुन्छन्, त्यो सम्पूर्ण पृथ्वीमण्डल अर्थात्
अथवा सातोटै द्वीपहरू, सातोटै समुद्रहरू र
किसिमका पर्वतहरूसँगै पानीमा विलीन हुन्छन् अ
जलमग्न हुन्छन् ॥३१॥ त्यसपछि जुन पानीको आ
रहेको हुन्छ, त्यसलाई आगोले शोषण गर्दछ अ
आफैँमा समाहित गराइदिन्छ तथा त्यो सबैको वि
गराउने क्षमता भएको आगो वायुमा एवम् वायु अ
कारक तत्व आकाशमा विलीन हुन्छ अर्थात् पूर्ण रू
समाहित हुन्छ ॥३२॥ हे ब्राह्मणश्रेष्ठ! यसरी आकाश

आकाशञ्चैव भूतादिर्ग्रसते तं तदा महान्।
महान्तमेभिः सहितं प्रकृतिर्ग्रसते द्विज ॥३३॥
गुणसाम्यमनुद्रिक्तमन्यूनञ्च महामुने।
प्रोच्यते प्रकृतिर्हेतुः प्रधानं कारणं परम् ॥३४॥
इत्येषा प्रकृतिः सर्वा व्यक्ताव्यक्तस्वरूपिणी।
व्यक्तस्वरूपमव्यक्ते स्मान्मैत्रेय लीयते ॥३५॥
एकः शुद्धोऽक्षरो नित्यः सर्वव्यापी तथा पुमान्।
सोऽप्यंशः सर्वभूतस्य मैत्रेय परमात्मनः ॥३६॥
न सन्ति यत्र सर्वेशे नामजात्यादिकल्पनाः।
सत्तामात्रात्मके ज्ञेये ज्ञानात्मन्यात्मनः परे ॥३७॥
तत् ब्रह्म परं धाम परमात्मा स चेश्वरः।
स विष्णुः सर्वमेवेदं यतो नावर्तते यतिः ॥३८॥
प्रकृतिर्या मयाऽऽख्याता व्यक्ताव्यक्तस्वरूपिणी।
पुरुषश्चाप्युभावेतौ लीयेते परमात्मनि ॥३९॥
परमात्मा च सर्वेषामाधारः परमेश्वरः।
विष्णुर्नाम्ना स वेदेषु वेदान्तेषु च गीयते ॥४०॥
प्रवृतञ्च निवृतञ्च द्विविधं कर्म वैदिकम्।
ताभ्यामुभाभ्यां पुरुषैः सर्वमूर्तिः स इज्यते ॥४१॥

भूतादि तामस अहङ्कारले, भूतादि अर्थात् तामस अहङ्कारलाई महतत्त्व अर्थात् साङ्ख्यदर्शन अनुसार प्रकृतिको पहिलो विकार वा बुद्धि-तत्त्वले र यिनीहरूसँगै महत्तत्त्वलाई मूल प्रकृतिले आफूमा विलीन गराउँदछ ॥३३॥ हे सर्वोत्कृष्ट मुनि! कमबेसीबाट पूर्ण रूपमा अलग भएका जुन सत्त्व आदि तीनवटै गुणहरूको साम्यावस्था अर्थात् शान्त अवस्था छ, त्यसैलाई प्रकृति भनिन्छ र यसैलाई मूल पनि भनिन्छ अर्थात् यही मूल प्रकृति हो। यो मूल नै सम्पूर्ण जगत्को परम कारण हो ॥३४॥ हे मैत्रेय! यो प्रकति व्यक्त र अव्यक्त रूपबाट पूर्ण रूपमा सर्वव्यापक भएर रहेको छ। जुन अव्यक्त स्वरूप प्रकृति छ, त्यो अव्यक्तमा विलीन हुन्छ ॥३५॥ यसभन्दा अलग जो नित्य, शुद्धस्वरूप, सर्वव्यापी, एक अक्षर पुरुष हुनुहुन्छ, उहाँ पनि सबै जीवमात्रमा पूर्ण रूपमा व्यापक भएर विराजमान हुनुभएका परमात्माकै अंश हुनुहुन्छ अर्थात् उहाँकै स्वरूप हुनुहुन्छ ॥३६॥ जुन अस्तित्वमात्र स्वरूप हुनुभएका र आत्माबाट पूर्ण रूपमा अलग रहनुहुने अनात्मा एवम् ज्ञातव्य परब्रह्म परमात्मामा नाम र जात आदिको कल्पना हुँदैन, उहाँ नै सबैको अधिपति ईश्वर अर्थात् सर्वेश्वर हुनुहुन्छ ॥३७॥ उहाँ परमधाम स्वरूप परब्रह्म परमात्मा श्रीविष्णु नै यो सम्पूर्ण जगत्मा विश्वरूप धारण गरेर अवस्थित हुनुभएको छ अर्थात् विराजमान हुनुहुन्छ। उहाँलाई प्राप्त गरिसकेका सिद्ध योगीहरू फेरि फर्किएर यो संसाररूपी चक्रमा आउँदैनन् ॥३८॥ मैले जुन व्यक्त एवं अव्यक्त स्वरूप भएको प्रकृतिका विषयमा तपाईंलाई बताएको थिएँ, त्यो प्रकृति र पुरुष पनि उहाँ परब्रह्म परमात्मा श्रीविष्णुमा विलीन अर्थात् पूर्ण रूपमा समाहित हुन्छन् ॥३९॥ उहाँ परब्रह्म परमात्मा सबै प्राणीमात्रका परम आधार अथवा आश्रय र परमेश्वर हुनुहुन्छ तथा वेद एवं वेदान्तहरूमा परमात्मा श्रीविष्णुको नाम र स्वरूपबाट उहाँका विषयमा यथार्थ रूपमा वर्णन गरिएको छ ॥४०॥ प्रवृत्तिस्वरूप अर्थात् कर्मयोग र निवृत्ति स्वरूप अर्थात् सांख्ययोग यी दुई किसिमका वैदिक कर्महरू हुन् अर्थात् वेदहरूमा बताइएका कर्महरूलाई यसरी दुई भागमा विभाजन गरिएको छ। यी दुई किसिमका कर्महरूका माध्यमद्वारा उहाँ सर्वस्वरूप परमात्मा श्रीपुरुषोत्तमको मात्र पूजा अर्थात् उपासना गरिन्छ ॥४१॥ मनुष्यहरूद्वारा

ऋग्-यजुः-सामभिमार्गैः प्रवृत्तैरिज्यते ह्यसौ ।

यज्ञेश्वरो यज्ञपुमान् पुरुषैः पुरुषोत्तमः ॥४२॥

ज्ञानात्मा ज्ञानयोगेन ज्ञानमूर्तिः स चेज्यते ।

निवृत्ते योगिभिर्मार्गे विष्णुर्मुक्तिफलप्रदः ॥४३॥

ह्रस्व-दीर्घप्लुतैर्यत्तु किञ्चिद्वस्त्वभिधीयते ।

यच्च वाचामविषये तत्सर्वं विष्णुरव्ययः ॥४४॥

व्यक्तं स एव चाव्यक्तं स एव पुरुषोऽव्ययः ।

परमात्मा स विश्वात्मा विश्वरूपधरो हरिः ॥४५॥

व्यक्ताव्यक्तात्मिका तस्मिन् प्रकृतिः सम्प्रलीयते ।

पुरुषश्चापि मैत्रेय व्यापिन्यव्यहतात्मनि ॥४६॥

द्विपरार्द्धात्मकः कालः कथितो यो मया तव ।

तदहस्तस्य मैत्रेय विष्णोरीशस्य कथ्यते ॥४७॥

व्यक्ते च प्रकृतौ लीने प्रकृत्यां पुरुषे तथा ।

तत्र स्थिते निशा चान्या तत्प्रमाणा महामुने ॥४८॥

नैवाहस्तस्य न निशा नित्यस्य परमात्मनः ।

उपचारस्तथाप्येष तस्येशस्य द्विजोच्यते ॥४९॥

इत्येष तव मैत्रेय कथितः प्राकृतो लयः ।

आत्यन्तिकमितो ब्रह्मन्निबोध प्रतिसञ्चरम् ॥५०॥

ऋग्वेद, यजुर्वेद र सामवेदमा बताइएको प्रवृत्तिमार्ग अर्थात् कर्मयोगबाट उहाँ सबै यज्ञहरूका अधिपति यज्ञपुरुष श्री पुरुषोत्तमको मात्र पूजा अर्थात् उपासना गरिन्छ ॥४२॥ निवृत्तिमार्गमा अर्थात् ज्ञानमार्गमा अवस्थित भएका योगीहरूले पनि उहाँ अनात्मा अर्थात् आत्मादेखि फरक, ज्ञानस्वरूप र मुक्ति प्रदान गर्नुहुने परमात्मा श्रीविष्णुकै ज्ञानयोगको माध्यमद्वारा उपासना गर्दछन् ॥४३॥ ह्रस्व, दीर्घ र प्लुत यी तीन प्रकारका स्वरहरूबाट जे-जति बताइन्छ र जसका विषयमा वचनद्वारा स्पष्ट गर्न सकिँदैन, ती सबै पनि परब्रह्म श्रीविष्णुकै स्वरूप हुन् ॥४४॥ उहाँ विश्वस्वरूप धारण गर्नुभएका विश्वस्वरूप परमात्मा श्रीहरि नै व्यक्त, अव्यक्त एवं अविनाशी पुरुष हुनुहुन्छ अर्थात् यो सम्पूर्ण चराचर जगत् उहाँको कुनै अङ्गको अत्यन्त सानो अंशमा अवस्थित रहेको छ ॥४५॥ हे मैत्रेय! सर्वत्र पूर्ण रूपमा व्यापक भएर रहनुभएका एवं कुनै किसिमको विकृति नहुनुभएका उहाँ परमात्मा श्रीविष्णुमा नै व्यक्त र अव्यक्त स्वरूप भएका प्रकृति एवं पुरुष दुवै विलीन हुन्छन् ॥४६॥ हे मैत्रेय! मैले तपाईंलाई यसभन्दा पहिले जुन ब्रह्माजीको आयुको आधाकाल अर्थात् समयका विषयमा बताएको थिएँ, त्यो समय परब्रह्म परमात्मा श्रीविष्णुको एकदिन मात्र हो ॥४७॥ हे सर्वोत्कृष्ट मुनि! यो व्यक्त जगत् अव्यक्त प्रकृतिमा तथा अव्यक्त प्रकृति पुरुषमा विलीन अर्थात् समाहित भएपछि त्यति नै समयको परब्रह्म परमात्मा श्रीविष्णुको रात्रि पनि हुन्छ ॥४८॥ यथार्थमा, हे ब्राह्मणश्रेष्ठ! नित्य परब्रह्म परमात्माको न त कुनै दिन हुन्छ र न रात नै हुन्छ, तर व्यवहारिक रूपमा मात्र यसरी बताइने गरिन्छ ॥४९॥ हे मैत्रेय ! यस प्रकार मैले तिमीलाई प्राकृतिक अर्थात् स्वाभाविक प्रलयका विषयमा यथार्थ रूपमा बताइदिएँ । अब आत्यन्तिक अर्थात् लगातार भइरहने प्रलयका विषयमा बताउनेछु, सुन ॥५०॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे चतुर्थोऽध्यायः ।

ॐ

## पञ्चमोऽध्यायः　　अध्याय- ५

## आध्यात्मिकादित्रिविधतापवर्णनम्, भगवान् वासुदेवश्चेति शब्दद्वयस्य व्याख्या, भगवतः पारमार्थिकस्वरूपवर्णनञ्च

(आध्यात्मिक आदि तीन किसिमका दुःखहरूको वर्णन, भगवान् तथा वासुदेव शब्दको व्याख्या एवं भगवान्को पारमार्थिक स्वरूपको वर्णन)

पराशर उवाच

आध्यात्मिकादि मैत्रेय! ज्ञात्वा तापत्रयं बुधः।

उत्पन्नज्ञानवैराग्यः प्राप्नोत्यात्यन्तिकं लयम्॥१॥

आध्यात्मिको वै द्विविधः शारीरो मानसस्तथा।

शारीरो बहुभिर्भेदैर्भिद्यते श्रूयताञ्च सः॥२॥

शिरोरोग- प्रतिश्याय- ज्वरशूल-भगन्दरैः।

गुल्मार्शः-श्वयथु- श्वास-च्छर्द्यादिभिरनेकधा॥३॥

तथाक्षिरोगातीसार-कुष्ठाङ्गामयसंज्ञकैः।

भिद्यते देहजस्तापो मानसं श्रोतुमर्हसि॥४॥

काम-क्रोध-भय-द्वेष-लोभ-मोह-विषादजः।

शोका-सूया-वमाने-र्ष्या-मात्सर्य्यादिभवस्तथा॥५॥

मानसोऽपि द्विजश्रेष्ठ! तापो भवति नैकधा।

इत्येवमादिभिर्भेदैस्तापो ह्याध्यात्मिकः स्मृतः॥६॥

मृग-पक्षि-मनुष्याद्यैः पिशाचोरग-राक्षसैः।

सरीसृपाद्यैश्च नृणां जन्यते चाधिभौतिकः॥७॥

**पराशरजीले भन्नुभयो-** हे मैत्रेय! ज्ञानीहरूले आध्यात्मिक, आधिदैविक र आधिभौतिक यी तीनोटै दुःखहरूको स्वरूपका विषयमा ज्ञान हासिल गरेर ज्ञान एवं वैराग्य उत्पन्न हुने भएकाले आत्यन्तिक अर्थात् सरासर हुने प्रलयलाई प्राप्त गर्दछन्॥१॥ आध्यात्मिक दुःख शारीरिक र मानसिक भेदका कारणले गर्दा दुई किसिमका हुन्छन्। तिनीहरूमध्ये शारीरिक दुःख अनेकौं किसिमका हुन्छन्। अब तपाईं तिनीहरूका सम्बन्धमा सुन्नुहोस्॥२॥ टाउकाको रोग, पिनास, ज्वरो, शूल अर्थात् पेटको रोगविशेष, भगन्दर अर्थात् गुदद्वार र अण्डकोषको बीचमा फाट्ने रोग विशेष, गुल्म (कोखामा, मुटुमा, नाभिस्थानमा, वस्तिस्थानमा, पेटमा जमेको गोलालाई गुल्म भनिन्छ) रोग विशेष, अर्श अर्थात् हर्सा, श्वास अर्थात् दमको रोग, शोथ अर्थात् सूज (सुन्निने) रोग विशेष, छर्दिरोग अर्थात् छाद आइरहने रोग, आँखाको रोग, अतिसार, कुष्ठ, जलोदर अर्थात् पेटमा पानी भरिने रोगविशेष आदि भेदहरूका कारण शारीरिक दुःख अनेकौं किसिमका हुन्छन्। अब मानसिक दुःखहरूका विषयमा सुन्नुहोस्॥३-४॥ हे ब्राह्मणश्रेष्ठ! काम, क्रोध, भय, द्वेष, लोभ, मोह अर्थात् ममता, विषाद अर्थात् चिन्ता, शोक, असूया अर्थात् डाह, अपमान अर्थात् अवहेलना, ईर्ष्या र मात्सर्य (डाह) आदिबाट उत्पन्न हुने मानसिक दुःखहरू अनेकौं किसिमका हुन्छन्। यस प्रकारका अनेकौं भेदहरूबाट सम्पन्न भएको दुःखहरूको समूहलाई आध्यात्मिक दुःख भनिन्छ॥५-६॥ मृग, पक्षी, मनुष्य, पिशाच, सर्प र राक्षस एवम् सरीसृप अर्थात् बिच्छी आदिका कारणले मनुष्यहरूमा जुन किसिमको दुःख उत्पन्न हुन्छ, त्यसलाई आधिभौतिक दुःख भनिन्छ॥७॥ हे सर्वोत्कृष्ट ब्राह्मणदेवता! जाडो, गर्मी, वायु (बतास), वर्षा, पानी

शीतोष्णवातवर्षाम्बु–वैद्युतादिसमुद्भवः ।
तापो द्विजवरश्रेष्ठ! कथ्यते चाधिदैविकः ॥८॥
गर्भ–जन्म–जराज्ञान–मृत्यु–नारकजं तथा।
दुःखं सहस्रशो भेदैर्भिद्यते मुनिसत्तम ॥९॥
सुकुमारतनुर्गर्भे जन्तुर्बहुमलावृते।
उल्वसंवेष्टितो भुग्नपृष्ठग्रीवास्थिसंहतिः ॥१०॥
अत्यन्तकटु–तीक्ष्णोष्ण–लवणैर्मातृभोजनैः ।
अत्यन्ततापैरत्यर्थं वर्द्धमानातिवेदनः ॥११॥
प्रसारणाकुञ्चनादेर्नाङ्गानां प्रभुरात्मनः ।
शकृन्मूत्रमहापङ्कशायी सर्वत्र पीडितः ॥१२॥
निरुच्छ्वासः सचैतन्यः स्मरन् जन्मशतान्यथ।
आस्ते गर्भेऽतिदुःखेन निजकर्मनिबन्धनः ॥१३॥
जायमानः पुरीषासृङ्मूत्रशुक्राविलाननः ।
प्राजापत्येन वातेन पीड्यमानास्थिबन्धनः ॥१४॥
अधोमुखो वै क्रियते प्रबलैः सूतिमारुतैः ।
क्लेशान्निष्क्रान्तिमाप्नोति जठरान्मातुरातुरः ॥१५॥
मूर्च्छामवाप्य महतीं संस्पृष्टो बाह्यवायुना।
विज्ञानभ्रंशमाप्नोति जातश्च मुनिसत्तम ॥१६॥
कण्टकैरिव तुन्नाङ्गः क्रकचैरिव दारितः ।
पूतिव्रणान्निपतितो धरण्यां कृमिको यथा ॥१७॥
कण्डूयने चाप्यशक्तः परिवर्त्तेऽप्यनीश्वरः ।
स्तन्यपानादिकाहारमवाप्नोति परेच्छया ॥१८॥

र बिजुली जस्ताबाट जुन किसिमको दुःख उत्पन्न हुन्छ, त्यसलाई आधिदैविक दुःख भनिन्छ ॥८॥ हे सर्वश्रेष्ठ मुनि! यिनीहरू सबै बाहेक गर्भमा निवास, जन्म, वृद्धावस्था, अज्ञान, मृत्यु र नरकबाट उत्पन्न हुने दुःखहरूका पनि अनेकौं भेद रहेका छन् अर्थात् यस किसिमका दुःखहरू अनेकौं किसिमका हुन्छन् ॥९॥ अत्यधिक मात्रामा गर्भाशयमा शालले बेह्रिएर रहेको यो अत्यन्त सुकुमार शरीर भएको जीव, जसको पिठ्यूँ र गला वा गर्दनका हड्डीहरू गोलाकारमा मुडिएर रहेका हुन्छन्, त्यहाँ महाकुण्डमा निवास गरेका कारणले सबै अङ्गहरूमा अत्यधिक मात्रामा पीडा भए तापनि आफ्ना अङ्गहरू फैलाउन वा खुम्च्याउन सक्षम हुँदैन र चेतनाबाट पूर्ण रूपमा सम्पन्न भए तापनि श्वास लिन सक्दैन, आफ्ना सैकडौं यसभन्दा पहिलेका जन्महरूको स्मरण अर्थात् सम्झना गरेर कर्महरूको बन्धनमा राम्ररी बाँधिएको त्यो जीवले अत्यन्त दुःखदायी अवस्थामा गर्भमा निवास गरिरहन बाध्य हुनुपर्दछ ॥१०–१३॥ त्यसपछि जन्मदाका समयमा त्यस जीवको मुख मलमूत्र, रगत एवम् शुक्रबाट पूर्ण रूपमा पोतिएको हुन्छ तथा उसको शरीरका सबै जोर्नीहरूलाई प्राजापत्य नाम भएको वायुले अत्यन्त पीडा दिइरहेको हुन्छ ॥१४॥ अत्यन्त बलियो प्रसूतिवायुले उसको मुखलाई तलतिर फर्काइदिन्छ । त्यो जीव अत्यन्त पीडापूर्वक आफ्नी आमाको गर्भबाट बाहिर निस्कन्छ अर्थात् अत्यन्त दुःखदायी अवस्थामा त्यसको जन्म हुन्छ ॥१५॥ हे सर्वोत्तम मुनि! आमाको गर्भाशयबाट बाहिर निस्किएपछि बाहिरी वायुको स्पर्श भएका कारणले गर्दा त्यो जीव पूर्ण रूपमा मूर्च्छित अवस्थामा रहने भएकाले ज्ञानबाट शून्य हुन्छ अर्थात् त्यसलाई केही कुराको ज्ञान हुँदैन ॥१६॥त्यस समयमा त्यो जीव अत्यन्त दुर्गन्धित फाहोर र काँडाले घोचिएको जसरी अथवा आराले (करौतीले) चिरेको काठको फल्ल्याटो पल्टिए जसरी नै पृथ्वीमा झर्दछ ॥१७॥त्यस जीवमा स्वयंले आफ्नो शरीरको कुनै अङ्ग कन्याउने वा ओल्टे–कोल्टे फर्किने शक्ति अर्थात् सामर्थ्य पनि रहेको हुँदैन। उसले नुहाउन र दूध पिउने आदि आहार पनि अर्कोको इच्छा अनुसार मात्र प्राप्त गर्दछ अर्थात् ऊ स्वयंले केही पनि गर्न सक्दैन ॥१८॥ त्यो जीव अत्यन्त अपवित्र

अशुचिः प्रस्तरे सुप्तः कीटदंशादिभिस्तथा।

भक्ष्यमाणोऽपि नैवैषां समर्थो विनिवारणे ॥१९॥

जन्मदुःखान्यनेकान्नि जन्मनोऽन्नतराणि वै।

बालभावे यदाप्नोति ह्याधिभौतादिकानि च ॥२०॥

अज्ञानतमसाच्छन्नो मूढान्तःकरणो नरः।

न जानाति कुतः कोऽहं क्वाहं गन्ता किमात्मकः ॥२१॥

केन बन्धेन बद्धोऽहं कारणं किमकारणम्।

किं कार्यं किमकार्यं वा किं वाच्यं किन्न वोच्यते ॥२२॥

कोऽधर्म्मः कश्च वै धर्मः कस्मिन् वर्त्तेत वा कथम्।

किं कर्तव्यमर्तव्यं किं वा किं गुणदोषवत् ॥२३॥

एवं पशुसमैमूढैरज्ञानप्रभवं महत्।

अवाप्यते नरैर्दुःखं शिश्नोदरपरायणैः ॥२४॥

अज्ञानं तमसो भावः कार्यारम्भाः प्रवृत्तयः।

अज्ञानिनां प्रवर्तन्ते कर्मलोपास्ततो द्विज ॥२५॥

नरकं कर्मणां लोपात् फलमाहुर्महर्षयः।

तस्मादज्ञानिनां दुःखमिह चामुत्र चोत्तमम् ॥२६॥

जराजर्जरदेहश्च शिथिलावयवः क्रमात्।

विगलच्छीर्णदशनो बलीस्नायुशिरावृतः ॥२७॥

बिछ्यौनामा लडिरहेको हुन्छ। त्यस समयमा कीरा एवं लामखुट्टेले उसलाई टोकिरहेका हुन्छन्, तर तिनीहरूलाई आफ्नो शरीरबाट हटाउने सामर्थ्य पनि उसमा रहेको हुँदैन ॥१९॥ यसप्रकार जन्मदाका अवस्थामा र त्यसपछिको बाल्यावस्थामा पनि जीवले अनेकौं किसिमका आधिभौतिक कष्ट अर्थात् दुःखहरूको भोग गरिरहेको हुन्छ ॥२०॥ अज्ञानरूपी अन्धकारबाट पूर्ण रूपमा ढाकिएर रहेको एवम् अविवेकी अन्तरात्मा भएको मूर्ख पुरुषलाई म कहाँबाट आएको हुँ? म को हुँ? पछि कहाँ जान्छु ? र मेरो वास्तविक स्वरूप के हो ? यी सबै विषयहरूको ज्ञान रहँदैन अर्थात् ऊ यी सबै कुराका बारेमा ऊ अनभिज्ञ रहन्छ ॥२१॥ म कुन किसिमको बन्धनमा बाँधिएको छु, यो बन्धनको कारण के हो ? अथवा यो कुनै कारण नभइकन अर्थात् अकारणमा नै प्राप्त भएको हो? मैले अब के गर्नुपर्दछ र के गर्नु हुँदैन भन्ने कुराका विषयमा पनि उसलाई ज्ञान रहँदैन ॥२२॥ धर्म के हो ? अधर्म के हो ? मैले कुन अवस्थामा कस्तो किसिमको आचरण गर्नुपर्दछ? कर्तव्य के हो ? अकर्तव्य के हो ? अथवा के गुण-सम्पन्न छ र के दोषबाट सम्पन्न भएको छ? ॥२३॥ यसरी अनेकौं भावनाहरूबाट पूर्ण रूपमा सम्पन्न भएको एवं पुरुषेन्द्रिय (लिङ्ग) परायण मनुष्यले पशुले जसरी नै विवेकबाट पूर्णरूपमा शून्य भएर विभिन्न किसिमका दुःखहरूको भोग गर्दछ॥२४॥ हे ब्राह्मणश्रेष्ठ! अज्ञान तामसी भाव हो अर्थात् विकार हो। त्यसकारण अज्ञानी मनुष्य अत्यन्त उत्साहपूर्वक तामसी कर्महरूमा लाग्दछ। यसको प्रभावका असरले गर्दा वैदिक कर्महरूमा ह्रास आउँछ अर्थात् वैदिक कर्महरू लोप हुन्छन् ॥२५॥ ज्ञानीहरूले कर्म लोप गराउनाको फल नरकको प्राप्ति हुने बताएका छन्। त्यसकारण अज्ञानी अर्थात् अविवेकी मनुष्यहरूले यस लोक र परलोक अर्थात् दुवै लोकहरूमा दुःखै-दुःखको मात्र भोग गर्नुपर्दछ अर्थात् तिनीहरूलाई कुनै पनि अवस्थामा सुख प्राप्त हुन सक्दैन ॥२६॥ शरीर क्रमिक रूपमा वृद्धावस्थामा गएर अत्यन्त कमजोर हुन्छ। अङ्ग-प्रत्यङ्ग शिथिल अर्थात् कमजोर हुन थाल्दछ र यसरी मासु सुकेपछि शरीरमा केवल नसाहरू र चाउरी परेको छालामात्र रहन्छ॥२७॥ वृद्धावस्थामा प्रवेश गरेको पुरुषको आँखाले टाढाका विषयवस्तुहरूलाई देख्न सक्दैनन्। आँखाको पुतलीले

दूरप्रणष्टनयनो व्योमान्तर्गततारकः ।

नासाविवरनिर्यात- लोमपुञ्जश्चलद्वपुः ॥२८॥

प्रकटीकृतसर्वास्थिर्नतपृष्ठास्थिसंहतिः ।

उत्सन्नजठराग्नित्वादल्पाहारोऽल्पचेष्टितः ॥२९॥

कृच्छ्रचङ्क्रमणोत्थानशयनासनचेष्टितः ।

मन्दीभवच्छ्रोत्रनेत्रः स्रवल्लालाविलाननः ॥३०॥

अनायत्तैः समस्तैश्च करणैर्मरणोन्मुखः ।

तत्क्षणे ऽप्यनुभूतानामस्मर्त्ताखिलवस्तुनाम् ॥३१॥

सकृदुच्चारिते वाक्ये समुद्भूतमहाश्रमः ।

श्वासकाससमुद्भूतमहायासप्रजागरः ॥३२॥

अन्येनोत्थाप्यतेऽन्येन तथा संवेश्यते जरी ।

भृत्यात्मपुत्रदाराणामवमानास्पदीकृतः ॥३३॥

प्रक्षीणाखिलशौचश्च विहाराहारसस्पृहः ।

हास्यः परिजनस्यापि निर्व्विण्णाशेषबान्धवः ॥३४॥

अनुभूतमिवान्यस्मिन् जन्मन्यात्मविचेष्टितम् ।

संस्मरन् यौवने दीर्घं निःश्वसित्यभितापितः ॥३५॥

गोलोकमा प्रवेश गर्दछ, नाकभित्रका रौँहरू बाहिर निस्कन थाल्दछन्, शरीरमा शक्तिको अभाव भएका कारणले शरीर काँप्न थाल्दछ ॥२८॥ शरीरका सबै हड्डीहरू स्पष्टरूपमा देखिन थाल्दछन्, मेरुदण्ड निहुरिन थाल्दछ अर्थात् झुक्दछ, पाचन-शक्ति अल्प हुने भएकाले वृद्ध पुरुषको दैनिकको खाना र पुरुषार्थ पनि थोरै मात्र हुने गर्दछ ॥२९॥ त्यस समयमा आँखा अत्यन्त कमजोर भएको त्यो जीव अत्यन्त कष्टपूर्वक हिँड्छ, डुल्छ, उठ्दछ र बस्दछ तथा उसको शयन अर्थात् सुत्ने आदि सबै क्रियाहरू अत्यन्त कठिनतापूर्वक सम्पन्न हुन्छन्। उसका आँखा तथा कानको शक्ति कम भएको हुन्छ तथा सधैँ राल चुहुने भएकाले अनुहार अत्यन्त मलिन हुन्छ ॥३०॥ यस किसिमको अवस्था भएपछि सबै इन्द्रियहरू उसको नियन्त्रणभन्दा बाहिर गएका हुन्छन् र त्यस अवस्थामा सबै किसिमबाट ऊ यमराजको लोकमा जानका लागि पूर्ण रूपमा तयार भएको हुन्छ र उसलाई सधैँ आफूले प्रयोगमा ल्याइरहेका पदार्थहरूको सम्झना रहँदैन अर्थात् ऊ यथार्थ रूपमा बेहोसीपनको आश्रयमा परिसकेको हुन्छ ॥३१॥ त्यस समयमा उसले एउटा कुरा बताउन पनि अत्यन्त धेरै परिश्रम गर्नुपर्दछ अर्थात् परिश्रम गर्दछ र श्वास-प्रश्वास एवं खोकीका कारणले अत्यधिक कष्ट सहँदै ऊ दिनरात अर्थात् सधैँ जाग्रतावस्थामा रहन्छ ॥३२॥ त्यो अत्यन्त वृद्ध भएको पुरुष अर्काको सहयोगमा मात्र उठ्ने-बस्ने गर्दछ अर्थात् ऊ स्वयं यी कार्यहरू गर्नका लागि असमर्थ भइसकेको हुन्छ। त्यसकारण उसका सेवक, छोरा, श्रीमती सबैले अत्यन्त अपहेलना अर्थात् अनादर गर्दछन् ॥३३॥ त्यस समयमा ऊ आफ्ना सबै किसिमका शौचादि क्रियाबाट पूर्ण रूपमा रहित हुन्छ, तर भोग एवम् भोजनको चाहना अत्यधिक रूपमा बढिरहेको हुन्छ। आफ्ना स्वास्नी छोरा आदि परिवारहरू पनि उसलाई देखेर हाँस्न थाल्दछन् र उसका सबै बन्धु-बान्धवहरू ऊबाट विरक्त रहन्छन् ॥३४॥ आफ्नो युवावस्थामा अर्थात् जवानीमा गरिएका सबै कार्यहरूका सम्बन्धमा ती कार्य आफूले अनेकौं जन्महरूमा गरिएको जसरी नै स्मरण गर्दै ऊ अत्यन्त दुःखी हुन्छ र लामो-लामो श्वास छोड्दछ अर्थात् फेर्दछ अर्थात् ऊ आफ्नो विगतलाई सम्झँदै अत्यन्त चिन्तित हुन्छ ॥३५॥

एवमादीनि दुःखानि जरायामनुभूय वै।

मरणे यानि दुःखानि प्राप्नोति शृणु तान्यपि ॥३६॥

श्लथग्रीवाङ्घ्रिहस्तोऽथ व्याप्तो वेपथुना भृशम्।

मुहुर्ग्लानिपरवशो मुहुर्ज्ञानलवान्वितः ॥३७॥

हिरण्य–धान्य–तनय–भार्या–भृत्य–गृहादिषु।

एते कथं भविष्यन्ति ममेति ममताकुलः ॥३८॥

मर्मभिद्भिर्महारोगैः क्रकचैरिव दारुणैः।

शरैरिवान्तकस्योग्रैश्छिद्यमानास्थिबन्धनः ॥३९॥

विवर्तमानताराक्षो हस्तपादं मुहुः क्षिपन्।

संशुष्यमाणताल्वोष्ठकण्ठो घुरघुरायते ॥४०॥

निरुद्धकण्ठो दोषौघैरुदानश्वासपीडितः।

तापेन महता व्याप्तस्तृषा चार्तस्तथा क्षुधा ॥४१॥

क्लेशादुत्क्रान्तिमाप्नोति याम्यकिङ्करपीडितः।

ततश्च यातनादेहं क्लेशेन प्रतिपद्यते ॥४२॥

एतान्यन्यानि चोग्राणि दुःखानि मरणे नृणाम्।

शृणुष्व नरके यानि प्राप्यन्ते पुरुषैर्मृतैः ॥४३॥

वृद्धावस्थामा यस किसिमका अनेकौं दुःखहरूको अनुभव गरिसकेपछि उसले मृत्युका समयमा जुन दुःख वा कष्ट भोग्नु पर्दछ, अब म त्यसका विषयमा पनि बताइदिन्छु, सुन्नुहोस् ॥३६॥ त्यस समयमा उसको घाँटी, हात, खुट्टा पूर्ण रूपमा शिथिल अर्थात् लल्याकलुलुक हुन्छन्, शरीर अत्यधिक रूपमा काँप्न थाल्दछ। उसको अन्तरात्मामा पटक–पटक मानसिक खेद उत्पन्न हुन्छ र कुनै–कुनै समयमा केही मात्रामा ज्ञान पनि हुन्छ अर्थात् चेतना पनि आउँदछ ॥३७॥ त्यस समयमा ऊ "अब मेरो सुवर्ण (सुन), धन–धान्य, छोरा–छोरी, पत्नी, सेवक, घर आदि म नभएपछि अर्थात् मेरो मृत्यु भएपछि कसरी रहन्छन् अथवा यिनीहरूको अवस्था कस्तो होला" यस प्रकारले तिनीहरूको ममतामा अत्यन्त आसक्त भएकाले ज्यादै चिन्तित हुन्छ ॥३८॥ त्यस समयमा अत्यन्त पीडादायक आरा (करौंती) तथा यमराजका अत्यधिक तीखा वाणहरूले छेदन गरे जसरी नै अति भयानक रोगहरूले उसको प्राणको बन्धनलाई शीघ्रतापूर्वक काट्न थाल्दछन् ॥३९॥ त्यस समयमा उसको आँखाको नानी यता उता घुम्न थाल्दछ र उसले हात खुट्टा बजार्न अर्थात् फ्याँक्न थाल्दछ, उसको तालु, घाँटी र मुख अत्यधिक रूपमा सुक्न थाल्दछ अर्थात् ऊ अत्यन्त पीडित भएको हुन्छ ॥४०॥ त्यसपछि उसमा उत्पन्न भएको दोषका प्रभावले उसको घाँटी बन्द हुन्छ। त्यसकारण उसले घर्घर शब्द निकाल्न थाल्दछ र माथिको श्वासबाट पीडित तथा अत्यन्त दुःखबाट व्याप्त भएर भोक–तिर्खाबाट अत्यधिक दुःख पाउन थाल्दछ ॥४१॥ यस किसिमको अवस्थामा उसले यमराजका दूतहरूबाट अत्यन्त पीडित हुँदै अत्यधिक कष्टपूर्ण तरिकाले आफ्नो शरीर त्याग गर्दछ र धेरै दुःखपूर्वक आफूद्वारा गरिएका कर्महरूको फल भोग गर्नका लागि यातनाशरीर प्राप्त गर्दछ ॥४२॥ मनुष्यले मृत्युका समयमा यस किसिमका सबै एवम् यस्तै किसिमका अन्य अनेकौं किसिमका धेरै दुःखहरू भोग्नुपर्दछ। अब मृत्यु भइसकेपछि मनुष्यहरूले नरकमा गएर जुन किसिमका यातनाहरू भोग्नुपर्दछ, त्यसका विषयमा पनि सुन्नुहोस् ॥४३॥ ती मृत्यु भएका मनुष्यहरूलाई

याम्यकिङ्करपाशादिग्रहणं दण्डताडनम्।

यमस्य दर्शनञ्चोग्रमुग्रमार्गविलोकनम् ॥४४॥

करम्भबालुका–वह्नि–यन्त्र–शस्त्रादिभीषणे।

प्रत्येकं नरके याश्च यातना द्विज! दुःसहा ॥४५॥

क्रकचैः पीड्यमानानांमूषायाञ्चापि धम्यताम्।

कुठारैः कृत्यमनानां भूमौ चापि निखन्यताम् ॥४६॥

शूलेष्वारोप्यमाणानां व्याघ्रवक्त्रे प्रवेश्यताम्।

गृध्रसम्भक्ष्यमाणानां द्वीपिभिश्चोपभुज्यताम् ॥४७॥

क्वाथ्यतां तैलमध्ये च क्लिश्यतां क्षारकर्दमैः।

उच्चान्निपात्यमानानां क्षिप्यतां क्षेपयन्त्रकैः ॥४८॥

नरके यानि दुःखानि पापहेतूद्भवानि वै।

प्राप्यन्ते नारकैर्विप्र! तेषां संख्या न विद्यते ॥४९॥

न केवलं द्विजश्रेष्ठ नरके दुःखपद्धतिः।

स्वर्गेऽपि पातभीतस्य क्षयिष्णोर्नास्ति निर्वृतिः ॥५०॥

सबैभन्दा पहिले यमराजका दूतहरूले आफ्ना पाशोहरूमा बाँधेर प्रेतात्मालाई लौराले हिर्काउँछन्। त्यसपश्चात् यमराजको सभामा उपस्थित गराउँछन् अर्थात् यमराजको दर्शन हुन्छ। त्यहाँसम्म पुग्नका लागि अर्थात् पुग्दासम्म अनेकौं किसिमका भयानक मार्गहरू देख्नु पर्दछ ॥४४॥ हे ब्राह्मणश्रेष्ठ! त्यसपछि अत्यन्त तातो बालुवा, अत्यन्त प्रज्ज्वलित भएको आगो र अनेकौं शस्त्रादिबाट पूर्ण रूपमा सम्पन्न भएका अत्यन्त भयानक नरकहरूमा गएर विभिन्न किसिमका दुःखहरूको भोग गर्नुपर्दछ तथा त्यो पीडा अत्यन्त असह्य किसिमको हुन्छ ॥४५॥ नरकहरूमा कसैलाई काठ चिर्ने आराले चिरिदिन्छन्, कसैलाई मूषा अर्थात् सुन चाँदी धातु गाल्ने घलुवामा सेकिन्छ, कसैलाई बन्चरोले काटिन्छ र कसैलाई जमीनमा गाडिदिन्छन् अर्थात् जमीनमा खाल्डो खनेर पुरिदिन्छन् ॥४६॥ यसरी नै कसैलाई शूलीमा चढाइदिन्छन्, कसैलाई सिंह एवं बाघजस्ता अत्यन्त हिंस्रक जनावरका मुखमा हालिदिन्छन् कसैलाई गिद्धद्वारा ठूँगाउँछन् र कसैलाई हात्तीद्वारा कुल्चन लगाउँछन् एवं कसै–कसैलाई अत्यन्त भयानक कष्ट दिन्छन् ॥४७॥ यसैगरी कसैलाई अत्यन्त उग्र रूपमा तातिरहेको तेलमा हालिदिन्छन्, कसैलाई दबदबे हिलोमा फ्याँकिदिन्छन्, कसैलाई अग्लो ठाउँबाट जमीनमा अर्थात् तल फ्याँकिदिन्छन् र कसैलाई फ्याँक्ने यन्त्रद्वारा फ्याँकिदिन्छन्। नरकहरूमा यस किसिमका अनेकौं दुःखहरूको भोग गर्नुपर्दछ ॥४८॥ मनुष्यहरूले आ–आफूद्वारा गरिएका पापबाट सम्पन्न भएका कर्महरूको प्रभावका कारणले नरकहरूमा धेरै दुःख पाउँदछन्। नरकमा परेकाहरूले जुन धेरै किसिमका दुःखहरू पाउँछन्, त्यसको गणना गर्न सम्भव छैन अर्थात् तिनीहरूको संख्याका विषयमा निश्चित रूपमा बताउन सकिँदैन ॥४९॥ हे ब्राह्मणश्रेष्ठ! केवल नरकमा गएकाहरूले मात्र यस किसिमको दुःखको भोग गर्नुपर्छ भन्ने छैन। किनकि, स्वर्गबाट पतन हुने डरबाट भयभीत स्वर्गमा निवास गर्नेहरू पनि विनाश हुने आशंकाका कारणले कहिल्यै शान्ति प्राप्त गर्न सक्दैनन्। यसकारण उनीहरूले पनि दुःखकै भोग गरिरहेका हुन्छन् ॥५०॥

पुनश्च गर्भे भवति जायते च पुनः पुनः ।

गर्भे विलीयते भूयो जायमानोऽस्तमेति च ॥५१॥

म्रियते जातमात्रश्च बालभावेऽथ यौवने ।

मध्यमं वा वयः प्राप्यवृद्धके वा ध्रुवा मृतिः ॥५२॥

यावज्जीवति तावच्च दुःखैर्नानाविधैः प्लुतः ।

तन्तुकारणपक्ष्मौघैरास्ते कार्पासबीजवत् ॥५३॥

द्रव्यनाशे तथोत्पत्तौ पालने च तथा नृणाम् ।

भवन्त्यनेकदुःखानि तथैवेष्टविपत्तिषु ॥५४॥

यद्यत् प्रीतिकरं पुंसां वस्तु मैत्रेय! जायते ।

तदेव दुःखवृक्षस्य बीजत्वमुपगच्छति ॥५५॥

कलत्र–पुत्र–भृत्यादि–गृह–क्षेत्र–धनादिकैः ।

क्रियते न तथा भूरि सुखं पुंसां यथाऽसुखम् ॥५६॥

इति संसारदुःखार्कतापतापितचेतसाम् ।

विमुक्तिपादपच्छयामृते कुत्र सुखं नृणाम् ॥५७॥

स्वर्ग अथवा नरकका भोगहरूको आफ्नो कर्मफलका अनुसार उपभोग गरिसकेपछि जीवले फेरि त्यहाँबाट फर्किएर एवं गर्भमा प्रवेश गरेर अनिवार्य रूपमा जन्म लिनु पर्दछ । कसैको गर्भभित्रै मृत्यु हुन्छ तथा यस किसिमले फेरि मृत्युको अर्थात् यमराजको सिकार बन्नुपर्दछ अर्थात् जन्मिएपछि अनिवार्य रूपमा मर्नुपर्दछ ॥५१॥ यसपछि कसैको जन्मदाकै समयमा मृत्यु हुन्छ, कसैको बाल्यावस्थामा मृत्यु हुन्छ, कसैको यौवनावस्थामा मृत्यु हुन्छ, कसैको प्रौढावस्थामा मृत्यु हुन्छ र कसैको वृद्धावस्थामा मृत्यु हुन्छ, यसरी जन्मिएका जतिको निश्चित रूपमा मृत्यु हुन्छ ॥५२॥ जसरी कपास अर्थात् रूवाको बीज रूवाले नै घेरिएर रहेको हुन्छ, त्यसरी नै जीव पनि जुन समयसम्म जीवितावस्थामा रहन्छ, त्यस समयसम्म अनेकौं किसिमका दुःखहरूबाट पूर्ण रूपमा घेरिएर रहेको हुन्छ अर्थात् ऊ दुःखहरूबाट मुक्त हुन सक्दैन ॥५३॥ किनकि, धन–सम्पत्तिको उपार्जन गर्दा अर्थात् धन कमाउँदाका अवस्थामा र त्यसको संरक्षण गर्दाका अवस्थामा एवं धन विनाश हुँदाका अवस्थमा तथा आफ्ना इष्टमित्रहरूसँग वियोग हुँदाका अवस्थामा मनुष्यलाई अनेकौं किसिमका दुःखहरू हुन्छन् ॥५४॥ हे मैत्रेय! जुन–जुन वस्तु वा पदार्थहरू मनुष्यलाई अत्यन्त प्रिय लागिरहेको हुन्छन्, अन्त अवस्थामा ती सबै अत्यन्त दुःखदायक रूखको बीज स्वरूप हुन्छन् अर्थात् यथार्थमा जीवले तिनीहरूबाट दुःखमात्र पाइरहेको हुन्छ ॥५५॥ मनुष्यहरूले पत्नी, छोरा–छोरी, सेवक, घर, जमीन र धन–सम्पत्ति आदिबाट जस्तो किसिमको दुःख पाइरहेको हुन्छ, त्यसको तुलनामा सुखको भाग अत्यन्त अल्प अर्थात् थोरै मात्र हुन्छ अर्थात् उसले अनुभव गरेको सुख नाममात्रको सुख हुन्छ ॥५६॥ यसरी यो सम्पूर्ण संसारमा दुःखरूपी सूर्यको अत्यन्त तेजिलो राप अर्थात् तापबाट अत्यन्त चिन्तित भएर भौंतारिइरहेका अथवा रन्थनिएका मनुष्यहरूका लागि मोक्षरूपी रूखको छायाँबाहेक अन्यत्र कहीँ पनि सुखको अनुभव हुन सक्तैन अर्थात सुख हुन सक्दैन, यसैले मनुष्यहरूले सांसारिक विषयवस्तुहरूको पूर्ण रूपमा परित्याग गर्न सक्नुपर्दछ ॥५७॥ त्यसकारण मेरो मान्यता अनुसार गर्भावस्था, जन्मँदाका अवस्था र वृद्धावस्था आदि

तदस्य त्रिविधस्यापि दुःखजातस्य पण्डितैः ।

गर्भजन्मजराद्येषु स्थानेषु प्रभविष्यतः ॥५८॥

निरस्यातिशयाह्लादसुखभावैकलक्षणा ।

भेषजं भगवत्प्राप्तिरेकान्तात्यन्तिकी मता ॥५९॥

तस्मात् तत्प्राप्तये यत्नः कर्तव्यः पण्डितैर्नरैः ।

तत्प्राप्तिहेतुर्ज्ञानञ्च कर्म चोक्तं महामुने ॥६०॥

आगमोत्थं विवेकोत्थं द्विधा ज्ञानं तथोच्यते ।

शब्दब्रह्मागममयं परं ब्रह्म विवेकजम् ॥६१॥

अन्धं तम इवाज्ञानं दीपवच्चेन्द्रियोद्भवम् ।

यथा सूर्यस्तथा ज्ञानं यद् विप्रर्षे! विवेकजम् ॥६२॥

मनुरप्याह वेदार्थं स्मृत्वा यन्मुनिसत्तम ।

तदेतच्छ्रूयतामत्र सम्बन्धे गदतो मम ॥६३॥

द्वे ब्रह्मणी वेदितव्ये शब्दब्रह्म परञ्च यत् ।

शब्दब्रह्मणि निष्णातः परं ब्रह्माधिगच्छति ॥६४॥

समयमा हुने आध्यात्मिक, आधिदैविक र आधिभौतिक यी तीन किसिमका दुःखहरूबाट यथार्थ रूपमा मुक्त हुने अचुक एकमात्र सनातन औषधि परब्रह्म परमात्माको प्राप्ति मात्र हो, जसलाई प्राप्त गरिसकेपछि मनुष्यहरूलाई अत्यन्त आनन्दमय सुख प्राप्त हुन्छ ॥५८–५९॥ हे सर्वश्रेष्ठ मुनि! त्यसकारण विद्वान्हरूले अत्यन्त तत्परतापूर्वक सधैँ परब्रह्म परमात्मालाई प्राप्त गर्ने प्रयासमा मात्र लागिरहनु पर्दछ। उहाँलाई प्राप्त गर्ने साधनका रूपमा कर्म र ज्ञान अर्थात् कर्मयोग र ज्ञानयोग यी दुवै कारणका रूपमा विद्यमान रहेका छन् अर्थात् यी दुवै मार्गका माध्यमद्वारा उहाँलाई सहज रूपमा प्राप्त गर्न सकिन्छ ॥६०॥ ज्ञान दुई किसिमका हुन्छन्, तिनीहरूमध्ये पहिलो, आगम अर्थात् शास्त्रहरूको अध्ययनबाट प्राप्त हुने ज्ञान तथा दोस्रो विवेकबाट उत्पन्न हुने ज्ञान। शास्त्रहरूको अध्ययनको माध्यमबाट प्राप्त भएको ज्ञानद्वारा शब्दब्रह्मका विषयमा र विवेकद्वारा उत्पन्न भएको ज्ञानका माध्यमद्वारा परब्रह्म परमात्माका विषयमा ज्ञान हासिल हुन्छ ॥६१॥ हे सर्वोत्कृष्ट ब्राह्मण! अज्ञान अत्यन्त भयानक अन्धकार जस्तै हुन्छ। त्यसको विनाश गर्नका लागि इन्द्रियहरूबाट उत्पन्न भएको ज्ञान दीपकका समान हुन्छ र विवेकबाट उत्पन्न भएको ज्ञान सूर्यका समान हुनछ अर्थात् जसरी बत्तीको उज्यालोले अन्धकारको विनाश गर्दछ, त्यसरी नै शास्त्रीय ज्ञानद्वारा शब्दब्रह्मका विषयमा ज्ञान हासिल गरेपछि केही मात्रामा अज्ञान नष्ट हुन्छ। विवेकद्वारा परमात्माका विषयमा ज्ञान हासिल गरिसकेपछि सबै अज्ञान पूर्ण रूपमा विनष्ट हुन्छ। जसरी सूर्य उदय भएपछि सम्पूर्ण अन्धकार पूर्ण रूपमा हट्दछ ॥६२॥ हे मुनिश्रेष्ठ! यस विषयमा वेदहरूको स्मरण गर्दै मनुले जे कुरा बताउनुभएको थियो, त्यो सबै म तिमीलाई बताउँछु, ध्यानपूर्वक सुन ॥६३॥ शब्दब्रह्म र परब्रह्मको भेद अनुसार ब्रह्म दुई किसिमको हुनुहुन्छ। उहाँहरू मध्ये सबैभन्दा पहिले शब्दब्रह्मका विषयमा ज्ञान हासिल गरिसकेपछि जिज्ञासुले विवेकबाट उत्पन्न भएको ज्ञानका माध्यमद्वारा परब्रह्म परमात्माका विषयमा जान्न सक्दछ ॥६४॥ यसरी कर्म र ज्ञानको भेद अनुसार विद्या

द्वे विद्ये वेदितव्ये वै इति चाथर्वणी श्रुतिः ।

परया त्वक्षरप्राप्तिर्ऋग्वेदादिमयापरा ॥६५॥

यत्तदव्यक्तमजरचिन्त्यमजमव्ययम् ।

अनिर्देश्यमरूपञ्च पाणिपादाद्यसंयुतम् ॥६६॥

विभुं सर्वगतं नित्यं भूतयोनिमकारणम् ।

व्याप्यव्याप्तं यतः सर्वं तद् वै पश्यन्ति सूरयः ॥६७॥

तद् ब्रह्म परमं धाम तद् ध्येयं मोक्षकाङ्क्षिभिः ।

श्रुतिवाक्योदितं सूक्ष्मं तद्विष्णोः परमं पदम् ॥६८॥

तदेव भगवद्वाच्यं स्वरूपं परमात्मनः ।

वाचको भगवच्छब्दस्तस्याद्यस्याक्षयात्मनः ॥६९॥

एवं निगदितार्थस्य तत्तत्त्वं तस्य तत्त्वतः ।

ज्ञायते येन तज्ज्ञानं परमन्यत् त्रयीमयम् ॥७०॥

अशब्दगोचस्यापि तस्य वै ब्रह्मणो द्विज ।

पूजायां भगवच्छब्दः क्रियते ह्यौपचारिकः ॥७१॥

शुद्धे महाविभूत्याख्ये परे ब्रह्मणि वर्तते ।

मैत्रेय! भगवच्छब्दः सर्वकारणकारणे ॥७२॥

पनि दुई किसिमका हुन्छन् अर्थात् कर्मविद्या र ज्ञानरूपविद्या । यस विषयमा अथर्ववेदमा स्पष्ट पारिएको छ र ऋग्वेदमा बताइए अनुसार पराविद्याका माध्यमद्वारा अक्षरब्रह्मलाई प्राप्त गर्न सकिन्छ ॥६५॥ जो अव्यक्त छ अर्थात् जसका विषयमा शब्दद्वारा बताउन सकिँदैन, अजर अर्थात् अविनाशी, इन्द्रियहरूद्वारा चिन्तन गर्न नसकिने, सनातन, अव्यय अर्थात् विकार नभएको, अदृश्य अर्थात् साधारण आँखाले देख्न नसकिने, अरूप अर्थात् कुनै निश्चित रूप नभएको, हात–खुट्टा नभएको हुनुहुन्छ॥६६॥ यसरी नै विभु अर्थात् सधैं रहिरहने र प्राणीमात्रका आदि कारण, व्याप्त अर्थात् व्याप्त गर्न योग्य, व्यापक अर्थात् चारैतिर फैलिएर रहनुभएको आदि अनेकौं रूपहरूबाट विराजमान हुनुहुन्छ । सिद्ध महात्माहरूले ज्ञानचक्षु अर्थात् ज्ञानका आँखाद्वारा उहाँकै दर्शन गर्दछन् ॥६७॥ उहाँ नै परब्रह्म परमात्मा हुनुहुन्छ, उहाँ नै परमधाम हुनुहुन्छ तथा मोक्ष अर्थात् मुक्ति प्राप्त गर्ने अभिलाषा राख्ने सिद्ध पुरुषहरूले उहाँकै ध्यान अर्थात् उपासना गर्दछन्। उहाँ नै परमात्मा श्रीविष्णुको वेदहरूमा बताइए अनुसारको अत्यन्त सूक्ष्म परमपद हुनुहुन्छ ॥६८॥ परमात्माको यस प्रकारको स्वरूप नै "भगवत्" शब्दद्वारा वर्णन गर्न योग्य छ र भगवत् शब्द नै उहाँ अनादि अर्थात् सनातन एवम् अविनाशी परमात्माको वाचक हो ॥६९॥ यस प्रकारको स्वरूपबाट सम्पन्न हुनुहुने परमात्माको तत्त्वका विषयमा जुन विद्याका माध्यमद्वारा यथार्थ ज्ञान प्राप्त हुन सक्दछ, त्यही परमज्ञान अर्थात् पराविद्या हो । वेदत्रयीमा बताइएको ज्ञान अर्थात् कर्मकाण्ड यसभन्दा अलग रहेको छ अर्थात् त्यो अपरा विद्या अन्तर्गत पर्दछ ॥७०॥ हे ब्राह्मणश्रेष्ठ! यद्यपि उहाँ परब्रह्म परमात्मा शब्दबाट अगोचर अर्थात् अनुभव गर्न नसकिने हुनुहुन्छ, तथापि पूजा एवम् उपासनाका लागि उहाँको भगवत् शब्दबाट भजन–कीर्तन गर्ने गरिन्छ ॥७१॥ हे मैत्रेय! यथार्थमा विशुद्ध एवम् सबै कारणहरूको आदि कारण, महाविभूतिशाली उहाँ परब्रह्म परमात्माका लागि मात्र भगवत् शब्दको प्रयोग भएको छ एवम् गर्न पनि सकिन्छ, अन्यका लागि होइन ॥७२॥ हे सर्वोत्कृष्ट मुनि! भगवत् शब्दमा

सम्भर्तेति तथा भर्ता भकारोऽर्थद्वयान्वितः ।

नेता गमयिता स्रष्ट्य गकारार्थस्तथा मुने ॥७३॥

ऐश्वर्यस्य समग्रस्य धर्मस्य यशसः श्रियः ।

ज्ञान–वैराग्ययोश्चैव षण्णां भग इतीरणा ॥७४॥

वसन्ति यत्र भूतानि भूतात्मन्यखिलात्मनि ।

स चभूतेष्वशेषेषु वकारार्थस्ततोऽव्ययः ॥७५॥

एवमेष महाशब्दो भगवानिति सत्तम ।

परमब्रह्मभूतस्य वासुदेवस्य नान्यगः ॥७६॥

तत्र पूज्यपदार्थोक्ति–परिभाषासमन्वितः ।

शब्दोऽयं नोपचारेण त्वन्यत्र ह्युपचारतः ॥७७॥

उत्पत्तिं प्रलयञ्चैव भूतानामगतिं गतिम् ।

वेत्ति विद्यामविद्याञ्च स वाच्यो भगवानिति ॥७८॥

ज्ञान–शक्ति–बलैश्वर्य्य–वीर्यतेजांस्यशेषतः ।

भगवच्छब्दवाच्यानि विना हेयैर्गुणादिभिः ॥७९॥

सर्वाणि तत्र भूतानि वसन्ति परमात्मनि ।

भूतेषु च स सर्वात्मा वासुदेवस्ततः स्मृतः ॥८०॥

खाण्डिक्यजनकायाह पृष्टः केशिध्वजः पुरा ।

नामव्याख्यामनन्तस्य वासुदेवस्य तत्त्वतः ॥८१॥

"भकार" का दुईओटा अर्थ लाग्दछन्, ती "भरणकर्ता अर्थात् पालन–पोषणकर्ता र सबैको आधार" हुन् । "गकार" को अर्थ कर्महरूको फल प्राप्त गराइदिने, आफूद्वारा गरिएको सृष्टिलाई अन्त समयमा आफैँमा विलीन गराउनुहुने र फेरि सृष्टिको रचना गर्नुहुने हो ॥७३॥ यसरी नै सबै किसिमका ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान र वैराग्य यी छओटालाई "भग" भनिन्छ तथा परब्रह्म परमात्मामा यी सबै सधैं विद्यमान रहेका हुन्छन् ॥७४॥ यसैगरी सबैको आत्मास्वरूप परब्रह्म परमात्मामा सबै प्राणीमात्रले अथवा जीवमात्रले निवास गर्दछन् र उहाँ स्वयंले पनि सबै जीवमात्रमा समान रूपमा निवास गर्नुहुन्छ । त्यसकारण उहाँ अविनाशी अर्थात् परमात्मा नै वकारको अर्थस्वरूप हुनुहुन्छ ॥७५॥ हे मैत्रेय! यस प्रकारको अर्थबाट सम्पन्न भएको ये अत्यन्त उत्तम "भगवत्" शब्द परमब्रह्मस्वरूप वासुदेवबाहेक *अन्य कसैका लागि कहिल्यै प्रयोग हुन* सक्दैन ॥७६॥ यो शब्द अत्यन्त पूजनीय अर्थात् आदरणीय भएको हुनाले अथवा उत्तम लक्षणहरूबाट पूर्ण रूपमा सम्पन्न भएको हुनाले यो भगवान् शब्द परब्रह्म परमात्मालाई सम्बोधन गर्दाका अवस्थामा मात्र प्रयोगमा आउन सक्दछ, अन्य अवस्थामा यो शब्द गौण रूपमा रहेको हुन्छ ॥७७॥ किनकि जसले सम्पूर्ण प्राणीमात्रको उत्पत्ति र विनाश, आउने र जाने सिलसिला तथा विद्या एवं अविद्याका विषयमा यथार्थ रूपमा जानेको हुन्छ, त्यही भगवान् शब्दबाट सम्बोधन गर्न योग्य हुन्छ ॥७८॥ त्याग गर्न योग्य तीन किसिमका गुणहरू र तिनीहरूको दुःख आदिलाई पूर्ण रूपमा परित्याग गरेर ज्ञान, शक्ति, बल, ऐश्वर्य, वीर्य, तेजजस्ता सबै सद्गुणहरू मात्र भगवत् शब्दबाट सम्बोधन गर्न योग्य हुन्छन् ॥७९॥ जुन परब्रह्म परमात्मामा सबै प्राणीमात्रले निवास गर्दछन् र यी सबैका आत्मास्वरूप उहाँ परमात्मा श्रीवासुदेवले पनि सबै प्राणीमात्रको अन्तरात्मामा सम्भावनापूर्ण निवास गर्नु भएको हुन्छ यसकारण उहाँलाई वासुदेव पनि भनिन्छ ॥८०॥ प्राचीन कालमा खाण्डिक्य जनकद्वारा प्रश्न गरिएपछि केशिध्वजले "वासुदेव" शब्दको यथार्थ व्याख्या यस किसिमले गरेका अर्थात् "वासुदेव" नामको अर्थका विषयमा यसरी प्रस्ट्याएका थिए ॥८१॥ "परमात्म

भूतेषु वसते सोऽन्तर्वसन्त्यत्र च तानि यत्।
धाता विधाता जगतां वासुदेवस्ततः प्रभुः ॥८२॥
स सर्वभूतप्रकृतिं विकारान्
गुणांश्च दोषांश्च मुने! व्यतीतः।
अतीतसर्वावरणोऽखिलात्मा
तेनास्तृतं यद्भुवान्तराले ॥८३॥
समस्तकल्याणगुणात्मको हि
स्वशक्तिलेशावृतभूतवर्गः।
इच्छागृहीताभिमतोरुदेहः
संसाधिताशेषजगद्धितोऽसौ ॥८४॥
तेजोबलैश्वर्यमहावबोधः
स्ववीर्यशक्त्यादिगुणैकराशिः।
परः पराणां सकला न यत्र
क्लेशादयःसन्ति परावरेशे ॥८५॥
स ईश्वरो व्यष्टिसमष्टिरूपो
व्यक्तस्वरूपोऽप्रकटस्वरूपः।
सर्वेश्वरः सर्वगः सर्ववेत्ता
समस्तशक्तिः परमेश्वराख्यः ॥८६॥
संज्ञायते येन तदस्तदोषं
शुद्धं परं निर्मलमेकरूपम्।
सन्दृश्यते वाप्यधिगम्यते वा
तज्ज्ञानमज्ञानमतोऽन्यदुक्तम् ॥८७॥

श्रीवासुदेव सबै प्राणीमात्रमा व्याप्त हुनुहुन्छ र सबै प्राणीले पनि उहाँमा निवास गर्दछन् तथा उहाँले नै जगत्को रचना एवं संरक्षण गर्नुहुन्छ। यसैले उहाँलाई वासुदेव भनिन्छ ॥८२॥ हे मुनि! उहाँ परमात्मा स्वयं सबै किसिमका आवरणहरूबाट पूर्ण रूपमा अतीत हुनुहुन्छ। उहाँ सबै प्राणीमात्रको प्रकृति, विकार, गुण एवं उनीहरूको कार्य आदि दोषहरूभन्दा पनि विलक्षण हुनुहुन्छ। पृथ्वी र आकाशका बीचमा जे-जति अवस्थित रहेको छ, त्यो सबै उहाँबाटै व्याप्त भएर रहेको छ ॥८३॥ यसरी नै उहाँ सबै शुभगुणहरू स्वरूप हुनुहुन्छ, उहाँले आफ्नो योगशक्तिको अत्यन्त सानो अंशबाट जीवमात्रमा व्याप्त भएर आफ्नो स्वेच्छानुसार अनेकौं शरीर स्वीकार गरेर सम्पूर्ण जगत्को कल्याण गरिदिनुहुन्छ ॥८४॥ उहाँ तेज, बल, ऐश्वर्य, महाविज्ञान, वीर्य तथा शक्ति आदिको गुणहरूको एकमात्र भण्डार हुनुहुन्छ र उहाँ परब्रह्म परमात्मामा अविद्यादि दोषहरूको पूर्णरूपमा अभाव रहेको हुन्छ ॥८५॥ उहाँ ईश्वर नै समष्टि र व्यष्टिस्वरूप हुनुहुन्छ, उहाँ नै व्यक्त र अव्यक्तस्वरूप हुनुहुन्छ, उहाँ नै सबैको साक्षी, सबैको प्रभु एवं सबैको ज्ञाता हुनुहुन्छ तथा उहाँ सबै शक्तिहरूबाट सम्पन्न हुनुभएका पुरुषको नाम परमेश्वर हो ॥८६॥ जसका माध्यमद्वारा उहाँलाई निर्दोष, विरुद्ध, एकस्वरूप र निर्मल हुनुभएको देख्न अथवा जान्न सकिन्छ, त्यसैलाई ज्ञान अर्थात् पराविद्या भनिन्छ र जुन यसका विपरीत रहेको छ त्यसलाई अज्ञान अर्थात् अपराविद्या भनिन्छ ॥८७॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे पञ्चमोऽध्यायः।

ॐ

षष्ठोऽध्यायः	अध्याय – ६

## "केशिध्वज–खाण्डिक्ययोर्विवरणम्"

(केशिध्वज र खाण्डिक्यको कथा)

पराशर उवाच

स्वाध्यायसंयमाभ्यां स दृश्यते पुरुषोत्तमः ।

तत्प्राप्तिकारणं ब्रह्म तदेतदिति चोच्यते ॥१॥

स्वाधयायाद् योगमासीत योगात् स्वाध्यायमेव च ।

स्वाध्याय–योगसम्पत्त्या परमात्मा प्रकाशते ॥२॥

तदीक्षणाय स्वाध्यायश्चक्षुर्योगस्तथा परम् ।

न मांसचक्षुषा द्रष्टुं ब्रह्मभूतः स शक्यते ॥३॥

मैत्रेय उवाच

भगवंस्तमहं योगं ज्ञातुमिच्छामि तं वद ।

ज्ञाते यत्राखिलाधारं पश्येयं परमेश्वरम् ॥४॥

पराशर उवाच

यथा केशिध्वजः प्राह खाण्डिक्याय महात्मने ।

जनकाय पुरा योगं तथाहं कथयामि ते ॥५॥

मैत्रेय उवाच

खाण्डिक्यः कोऽभवद् ब्रह्मन् को वा केशिध्वजोऽभवत् ।

कथं तयोश्च संवादो योगसम्बन्धवानभूत् ॥६॥

पराशर उवाच

धर्मध्वजो वै जनकस्तस्य पुत्रो मितध्वजः ।

कृतध्वजश्च नाम्ना स सदाध्यात्मरतिर्नृपः ॥७॥

**पराशरजीले भन्नुभयो–** स्वाध्याय र संयमका माध्यमद्वारा उहाँ पुरुषोत्तमलाई देख्न सकिन्छ, परब्रह्म परमात्मालाई प्राप्त गर्ने साधन भएकाले यी दुवैलाई पनि ब्रह्म नै भनिन्छ अर्थात् यिनीहरू पनि परमात्माकै स्वरूप हुन् ॥१॥ स्वाध्यायबाट योगको एवम् योगबाट स्वाध्यायको आश्रयमा रहनुपर्दछ। स्वाध्याय र योगरूप सम्पत्तिबाट परमात्माको तत्त्वका विषयमा ज्ञान हासिल गर्न सकिन्छ अर्थात् ज्ञान प्रकाशमय हुन्छ ॥२॥ ब्रह्मस्वरूप परमात्माको दर्शन गर्ने कार्यमा स्वाध्याय र योग दुवैले आँखाको भूमिका निभाउँछन् अर्थात् यी दुवै आँखास्वरूप हुन्छन्। हामीहरूसँग भएका साधारण आँखाले परब्रह्म परमात्माको दर्शन गर्न सकिँदैन ॥३॥ **मैत्रेयले भने–** हे भगवन्! जुन योगका विषयमा ज्ञान हासिल गरिसकेपछि परमात्माको प्रत्यक्ष रूपमा दर्शन गर्न सक्दछु, त्यो योग कुन हो? म त्यसका बारेमा जान्न चाहन्छु, कृपया हजुरले त्यसका सम्बन्धमा विस्तारपूर्वक बताइदिनुहोस् ॥४॥ **पराशरजीले भन्नुभयो–** जसरी प्राचीन कालमा योगको महात्म्यका विषयमा खाण्डिक्य जनकलाई बताएका थिए। म तपाईंलाई त्यही महात्म्यका सम्बन्धमा सविस्तार बताइदिनेछु ॥५॥ **मैत्रयले भने–** हे ब्रह्मन्! यी केशिध्वज र खाण्डिक्य को थिए? र के कारणले गर्दा यिनीहरू दुवैका बीचमा योगसँग सम्बन्धित कुराकानी भएको थियो ? मलाई यिनीहरूका विषयमा स्पष्ट पारिदिनुहोस् ॥६॥ **पराशरजीले भन्नुभयो–** प्राचीन कालमा धर्मध्वज जनक नाम भएका एउटा राजा थिए । उनका अमितध्वज र कृतध्वज नाम भएका दुई छोरा थिए । यिनीहरूमध्ये कृतध्वज निरन्तर रूपमा अत्यन्त एकाग्रतापूर्वक अध्यात्मशास्त्रको चिन्तन–मननमा लागिरहन्थे ॥७॥

कृतध्वज पुत्रोऽभूत् ख्यातः केशिध्वजो द्विज!।

पुत्रो मितध्वजस्यापि खाण्डिक्यो जनकोऽभवत्॥८॥

कर्ममार्गेण खाण्डिक्यः पृथिव्यामभवत् कृती।

केशिध्वजोऽप्यतीवासीदात्मविद्याविशारदः ॥९॥

तावुभावपि चैवास्तां विजिगीषू परस्परम्।

केशिध्वजेन खाण्डिक्यः स्वराष्ट्रादवरोपितः ॥१०॥

पुरोधसा मन्त्रिभिश्च समवेतोऽल्पसाधनः।

राज्यान्निराकृतः सोऽथ दुर्गारण्यचरोऽभवत्॥११॥

इयाज सोऽपि सुबहून् यज्ञान् ज्ञानव्यपाश्रयः।

ब्रह्मविद्यामधिष्ठाय तर्तुं मृत्युमविद्यया ॥१२॥

एकदा वर्तमानस्य यागे योगविदां वर।

धर्मधेनुं जघानोग्रः शार्दूलो विजने वने ॥१३॥

ततो राजा हतं ज्ञात्वा धेनुं व्याघ्रेण ऋत्विजः।

प्रायश्चितं स पप्रच्छ किमत्रेति विधीयते ॥१४॥

ते चोचुर्न वयं विद्मः कशेरुः पृच्छ्यतामिति।

कशेरुरपि तेनोक्तस्तथैव प्राह भार्गवम्॥१५॥

शुनकं पृच्छ राजेन्द्र! नाहं वेद्मि स वेत्स्यति।

स गत्वा तमपृच्छच्च सोऽप्याह शृणु यन्मुने॥१६॥

कृतध्वजका छोरा केशिध्वज संसारमा अत्यन्त प्रख्यात भएका थिए तथा अमितध्वजका छोराको नाम खाण्डिक्य जनक रहेको थियो अर्थात् यिनीहरू दुवै एउटै वंशमा उत्पन्न भएका थिए ॥८॥यो सम्पूर्ण जगतम्मा खाण्डिक्य कर्ममार्ग अर्थात् कर्मयोगका विषयमा अत्यन्त सिपालु भएका थिए। यसरी नै केशिध्वज पनि निरन्तर रूपमा अध्यात्मविद्याको मनन-चिन्तनमा लागिरहेका कारणले त्यस विषयमा सर्वोत्कृष्ट थिए॥९॥ यिनीहरू दुवै आफूलाई सर्वोत्कृष्ट भएको प्रमाणित गर्नका लागि एकले अर्कालाई पराजित गर्ने कार्यमा अत्यन्त तत्परतापूर्वक लागिरहेका हुन्थे। धेरै समय पश्चात् केशिध्वजले खाण्डिक्यलाई राज्यबाट हटाइदिए अर्थात् राज्याच्युत गरिदिए ॥१०॥ आफ्नो राज्यबाट च्युत अर्थात् अपदस्थ भइसके पछि खाण्डिक्य आफ्ना पुरोहित र मन्त्रीहरूलाई एवं अत्यन्त थोरै सामग्री साथमा लिएर अत्यन्त टाढाको जङ्गलमा गए॥११॥राजा केशिध्वजले स्वयं आफू ब्रह्मनिष्ठ भए तापनि अविद्या अर्थात् कर्मयोगका माध्यमद्वारा मृत्युमाथि विजय प्राप्त गर्नका लागि ज्ञानमय दृष्टिकोण राख्दै अनेकौं किसिमका यज्ञहरूको अनुष्ठान गरे॥१२॥ हे योगिश्रेष्ठ! एकदिन जुन समयमा राजा केशिध्वज यज्ञको अनुष्ठान गर्नका लागि बसेका थिए, त्यसै समयमा यज्ञमा हवन गर्ने पायस (खीर) पकाउनका लागि दूध दिने उनको गाईलाई एकान्त जङ्गलमा एउटा अत्यन्त भयानक बाघले मारिदियो अर्थात् आफ्नो सिकार बनाइदियो ॥१३॥ राजा केशिध्वजले आफ्नो यज्ञमा दूधका लागि समर्पण गरिएको गाईलाई बाघले मारिदिएको समाचार सुनेपछि वैदिक यज्ञ गराउने ब्राह्मणहरूसँग सोधे- "यस्तो अवस्थामा कस्तो किसिमको प्रायश्चित गर्ने विधान रहेको छ?" ॥१४॥ वैदिक यज्ञ गराउने ब्राह्मणहरूले भने- "हामीहरूलाई यस विषयको ज्ञान छैन अर्थात् हामी यसको विधिका बारेमा अनभिज्ञ छौं। तपाईंले कशेरुध्वजलाई सोध्नुहोस्।" त्यसपछि राजा केशिध्वजले कशेरुसँग सोधेपछि उनले पनि राजासँग भने- "हे राजेन्द्र! म यस विषयमा पूर्ण रूपमा अनभिज्ञ रहेको छु। तपाईंले भृगुका छोरा शुनकसँग सोध्नुहोस्, उनले यस विषयमा अवश्य जान्दछन् होला।" हे मुनि! त्यसपश्चात् राजा केशिध्वजले शुनकको सामीप्यमा गएर यही कुरा सोधेपछि शुनकले जुन कुरा बताए त्यसका विषयमा सुन्नुहोस्॥१५-१६॥ हे राजन्! यस

न कशेरुर्न चैवाहं चान्यः साम्प्रतं भुवि।

वेत्त्येक एव त्वच्छत्रुः खाण्डिक्यो यो जितस्त्वया ॥१७॥

स चाह तं प्रयाम्येष प्रष्टुमात्मरिपुं मुने।

प्राप्त एव महायज्ञो यदि मां स हनिष्यति ॥१८॥

प्रायश्चित्तमशेषेण यदि पृष्टो वदिष्यति।

ततश्चाविकलो यागो मुनिश्रेष्ठ! भविष्यति ॥१९॥

पराशर उवाच

इत्युक्त्वा रथमारुह्य कृष्णाजिनधरो नृपः।

वनं जगाम यत्रास्ते खाण्डिक्यः स महामतिः ॥२०॥

तमायान्तं समालोक्य खाण्डिक्यो रिपुमात्मनः।

प्रोवाच क्रोधताम्राक्षः समारोपितकार्मुकः ॥२१॥

कृष्णाजिनं त्वं कवचमाबध्यास्मान्निहंस्यसि।

कृष्णाजिनधरे वेत्सि न मयि प्रहरिष्यति ॥२२॥

मृगाणां वत पृष्ठेषु मूढ! कृष्णाजिनं न किम्।

येषां त्वया मया चोग्राः प्रहिताः शितसायकाः ॥२३॥

स त्वामहं हनिष्यामि न मे जीवन् विमोक्ष्यसे।

आततायस्यसि दुर्बुद्धे ! मम राष्ट्रहरो रिपुः ॥२४॥

केशिध्वज उवाच

खाण्डिक्य! संशयं प्रष्टुं भवन्तमहमागतः।

न त्वां हन्तुं विचार्यैतत् कोपं वाणञ्च मुञ्चवै ॥२५॥

समयमा यो सम्पूर्ण पृथ्वीमा कशेरु, म अथवा अन्य कोही पनि यस विषयमा स्पष्ट रूपमा बताउन सक्ने पुरुष रहेको छैन, तर जो तिमीबाट पराजित भएका थिए, तिनै तिम्रा शत्रु एकमात्र खाण्डिक्यले यस विषयमा स्पष्ट शब्दमा बताउन सक्नेछन् ॥१७॥ यसपछि राजा केशिध्वजले भने- हे मुनि! म प्रायश्चितका विषयमा सोध्नका लागि आफ्नो शत्रु खाण्डिक्यको सामीप्यमा अवश्य जानेछु। यदि उसले मेरो हत्या गरिदियो भने मलाई यज्ञ-समाप्तिको फल प्राप्त हुनेछ अथवा मैले सोधेपछि यस प्रायश्चितका विषयमा शास्त्रानूकुल विधि बताइदियो भने पनि मेरो यज्ञ निर्विघ्न रूपमा सम्पन्न हुनेछ। त्यसकारण यी दुईमध्ये जुन कार्य सम्पन्न भए पनि मेरो कल्याण हुन्छ ॥१८-१९॥ **पराशरजीले भन्नुभयो-** यसो भनिसकेपछि राजा केशिध्वज कृष्णसागर मृगको छाला धारण गरेर अर्थात् लगाएर आफ्नो अत्यन्त सुन्दर रथमा चढे तथा जहाँ बुद्धिमान् खाण्डिक्यले बसोबास गरेका थिए, त्यहीं जानका लागि प्रस्थान गरे ॥२०॥ आफ्नो शत्रु त्यो केशिध्वज आफैं भएतिर आइरहेको देखेपछि खाण्डिक्यले आफ्नो धनुषमा ताँदो चढाए तथा अत्यन्त क्रोधित भएर आफ्ना आँखा राता-राता पार्दै केशिध्वजसँग भने... ॥२१॥ **खाण्डिक्यले भने-** के तिमी कृष्णसागर मृगको छालाको कवच लगाएर हामीहरूको वध गर्न आएका हौ? अथवा के तिमीले कृष्णसागर मृगको छालाको कवच लगाएको हुनाले ममाथि कसैले आक्रमण गर्न सक्दैन भन्ने सोचेका छौ? ॥२२॥ हे मूर्ख! के मृगको पिठ्यूँमा कृष्णसागर मृगको छाला रहेको हुँदैन, जसमाथि मैले र तिमीले कयौं पटक अत्यन्त तेजिला बाणहरूको वर्षा गराइसकेका छौ ॥२३॥ त्यसकारण म तिमीलाई अवश्य मार्नेछु, अब तिमी यहाँबाट जीवित फर्किएर जान सक्नेछैनौ। हे दृष्टबुद्धि! तिमी आततायी अर्थात् महापापी हौ, मेरो राज्य जबरजस्ती आफ्नो बनाउने अर्थात् हरण गर्ने शत्रु हौ ॥२४॥ केशिध्वजले भने- हे खाण्डिक्य! म तिमीसँग केही प्रश्न सोध्न आएको हुँ। म तिम्रो बध गर्न, तिमीलाई मार्नका लागि यहाँ आएको होइन। त्यसकारण तिमी आफूमा उत्पन्न भएको क्रोध र आफूले हातमा लिएका वाण दुवैको परित्याग गरिदेऊ ॥२५॥ **पराशरजीले भन्नुभयो-**

पराशर उवाच

ततः स मन्त्रिभिः सार्द्धमेकान्ते सपुरोहितः ।

मन्त्रयामास खाण्डिक्यः सर्वैरेव महामतिः ॥२६॥

तमूचुर्मन्त्रिणो वध्यो रिपुरेष वशं गतः ।

हते तु पृथिवी सर्वा तव वश्या भविष्यति ॥२७॥

खाण्डिक्यश्चाह तान् सर्वानितदेवं न संशयः ।

हते तु पृथिवी सर्वा मम वश्या भविष्यति ॥२८॥

परलोकजयस्तस्य पृथिवी सकला मम ।

न हन्मि चेल्लोकजयो मम तस्य वसुन्धरा ।

नाहं मन्ये लोकजयादधिका स्याद् वसुन्धरा ॥२९॥

परलोकजयोऽनन्तः स्वल्पकालो महीजयः ।

तस्मान्नैनं हनिष्यामि यत् पृच्छति वदामि तत् ॥३०॥

ततस्तमभ्युपेत्याह खाण्डिक्यजनको रिपुम् ।

प्रष्टव्यं यत्त्वया सर्वं तत् पृच्छस्व वदाम्यहम् ॥३१॥

पराशर उवाच

ततः सर्वं यथावृत्तं धर्मधेनुवधं द्विज! ।

कथयित्वा स पप्रच्छ प्रायश्चित्तं हि तद्गतम् ॥३२॥

स चाचष्ट यथान्यायं द्विज! केशिध्वजाय तत् ।

प्रायश्चित्तमशेषेण यद् वै तत्र विधीयते ॥३३॥

केशिध्वजका कुरा सुनेपछि अत्यन्त बुद्धिमान खाण्डिक्यले आफ्ना पुरोहित र मन्त्रीहरूसँग एकान्तमा बसेर केही समय विचार-विमर्श अर्थात् सरसल्लाह गरे ॥२६॥ खाण्डिक्यका मन्त्रीहरूले भने– जब शत्रु स्वयं हजुरका नियन्त्रणमा आएको छ, यस्तो अवस्थामा त्यसको वध गर्नु नै हजुरको परम कर्तव्य हुन्छ; अर्थात् हजुरले यस्तो अवस्थामा केशिध्वजको वध गर्नु नै न्यायसङ्गत हुन्छ। किनकि शत्रुको विनाश भएपछि सम्पूर्ण पृथ्वी हजुरको नियन्त्रणमा आउनेछ ॥२७॥ खाण्डिक्यले उनीहरूसँग भने– यसमा कुनै किसिमको सन्देह अर्थात् द्विविधा रहेको छैन कि यस अवस्थामा यसलाई मार्दा यस केशिध्वजलाई पारलौकिक विजय प्राप्त हुन्छ र मलाई सम्पूर्ण पृथ्वीको प्राप्ति हुन्छ। तर, यदि मैले यो अत्यन्त अत्याचारी केशिध्वजको वध नगरेमा मलाई पारलौकिक विजय प्राप्त हुन्छ र यसलाई केवल पृथ्वीको मात्र प्राप्ति हुन्छ। यसकारण म पृथ्वी प्राप्त गर्ने विजयलाई भन्दा पारलौकिक विजयलाई अत्यधिक मान्यता दिन्छु अर्थात् उत्तम सम्झन्छु। यसैले केशिध्वजको वध गर्न उचित हुँदैन ॥२८-२९॥ पारलौकिक विजय अनन्तकालसम्म अर्थात् धेरै लामो समयसम्मका लागि हुन्छ र पृथ्वीमाथिको अर्थात् लौकिक विजय अत्यन्त थोरै समयसम्मका लागि मात्र हुन्छ। त्यसकारण म यसको वध गर्दिन अर्थात् यसलाई मार्दिन, तर यसले जे सोध्दछ म त्यसको जवाफ दिन्छु ॥३०॥ त्यसपछि खाण्डिक्य जनकले केशिध्वजका नजिकमा आएर भने– तिमीले जे कुरा सोध्न आएका हौ, त्यो कुरा निःसन्देह सोध। म त्यसको स्पष्ट शब्दमा जवाफ दिनेछु अर्थात् तिमीमा उत्पन्न भएको द्विविधा पूर्ण रूपमा हटाइदिन्छु ॥३१॥ **पराशरजीले भन्नुभयो–** हे ब्राह्मणश्रेष्ठ! त्यसपछि राजा केशिध्वजले जुन किसिमले आफ्नो धर्मधेनु अर्थात् आफ्नो यज्ञमा हवन गर्ने खीर पकाउनका लागि दूध प्रयोग गर्ने गाईको वध भएको थियो, त्यो सबै वृत्तान्त खाण्डिक्यलाई बताएर त्यसको प्रायश्चित गर्ने उपायका विषयमा सोधे ॥३२॥ हे द्विज! त्यसपछि खाण्डिक्य जनकले केशिध्वजलाई न्यायिक सिद्धान्त अनुसार गोवध अर्थात् गाईको हत्या भएका अवस्थामा गरिने सबै प्रायश्चितका विषयमा स्पष्ट रूपमा अर्थात् अत्यन्त विस्तारपूर्वक बताइदिए ॥३३॥ त्यसपछि महात्मा

विदितार्थः स तेनैव सोऽनुज्ञातो महात्मना।

यागभूमिमुपाश्रित्य चक्रे सर्वाः क्रियाः क्रमात् ॥३४॥

क्रमेण विधिवद् यागं नीत्वा सोऽवभृथाप्लुतः।

कृतकृत्यस्ततो भूत्वा चिन्तयामास पार्थिवः ॥३५॥

पूजिता ऋत्विजः सर्वे सदस्या मानिता मया।

तथैवार्थिजनोऽप्यर्थैर्योजितोऽभिमतैर्यथा ॥३६॥

यथार्हमस्य लोकस्य मया सर्वं विचेष्टितम्।

अनिष्पन्नक्रियं चेतस्तथापि मम किं यथा ॥३७॥

इति सञ्चिन्त्य यत्नेन सस्मार स महीपतिः।

खाण्डिक्याय न दत्तेति मया वै गुरुदक्षिणा ॥३८॥

जगाम च ततो भूयो रथमारुह्य पार्थिवः।

मैत्रेय! दुर्गगहनं खाण्डिक्यो यत्र संस्थितः ॥३९॥

खाण्डिक्योऽपि तथायान्तं पुनर्दृष्ट्वा धृतायुधः।

तस्थौ हन्तुं कृतमतिस्तथाह स पुनर्नृपः ॥४०॥

भो नाहं तेऽपकाराय प्राप्तः खाण्डिक्य! मा क्रुधः।

गुरोर्निष्क्रयदानाय मामवेहि त्वमागतम् ॥४१॥

निष्पादितो मया यागः सम्यक् त्वदुपदेशतः।

सोऽहं ते दातुमिच्छामि वृणुष्व गुरुदक्षिणाम् ॥४२॥

खाण्डिक्य जनकबाट प्रायश्चितको विधिका विषयमा स्पष्ट रूपमा ज्ञान प्राप्त गरिसकेपछि उनीबाट आज्ञा पाए अनुसार राजा केशिध्वजले आफ्नो यज्ञ गरिएको स्थानमा आएर क्रमबद्ध रूपमा सबै कर्महरू पूर्ण गरे अर्थात् यज्ञ समाप्त गरे ॥३४॥त्यसपछि कालक्रम अर्थात् समयको अनुक्रम अनुसार यज्ञ समाप्त भएपछि अवभृथ अर्थात् यज्ञान्तको स्नान गरेर कृतकृत्य अर्थात् अत्यन्त सन्तुष्ट भएर राजा केशिध्वजले चिन्तन गरे अर्थात् विचार गरे ॥३५॥ मैले सबै यज्ञ गराउने ब्राह्मणहरूको विधिपूर्वक पूजा-अर्चना गरें, सदस्यहरूको सम्मान गरें तथा याचकहरू अर्थात् भिक्षा प्राप्त गर्ने अभिलाषा लिएर आएका सबैलाई उनीहरूको स्वेच्छानुसारका वस्तुहरू पनि दिएँ ॥३६॥यस संसारमा जन्म लिएपछि मनुष्यले जे-जे गर्नुपर्दछ, मैले त्यो सबै गरिसकेको छु, तर पनि मेरो अन्तरात्मामा कुनै कर्मको अभाव भएको अर्थात् कुनै कर्म गर्न बिर्सिएको जस्तो अनुभव भइरहेको छ अर्थात् मलाई कता-कता असजिलो भएको जस्तो लागिरहेको छ ॥३७॥ यस प्रकारको चिन्ता गरिरहेका अवस्थामा राजा केशिध्वजले अहिलेसम्म आफूले खाण्डिक्य जनकलाई गुरुदक्षिणा नदिएको कुरा सम्झिए अर्थात् उनलाई गुरुदक्षिणा छुटेको स्मरण भयो ॥३८॥ हे मैत्रेय! त्यसपछि ती राजा केशिध्वज आफ्नो रथमा चढेर खाण्डिक्य जनकले जहाँ बसोबास गरेका थिए, त्यो अत्यन्त भयानक जङ्गलमा पुगे ॥३९॥ खाण्डिक्य पनि केशिध्वज हात-हतियारबाट सुसज्जित भएर आफैंतिर आइरहेको देखेर फेरि उसलाई मार्नका लागि तयार भए। त्यस समयमा राजा केशिध्वजले खाण्डिक्य जनकसँग भने ... ॥४०॥ हे खाण्डिक्य जनक! म यहाँ कुनै किसिमबाट तिम्रो अपकार अर्थात् अकल्याण गर्नका लागि आएको होइन। त्यसकारण तिमीले शान्तभाव धारण गर; अर्थात् तिमी शान्त होऊ, क्रोधित नहोऊ। तिमी सम्झ, म तिमीलाई गुरुदक्षिणा दिनका लागि मात्र यहाँ आएको हुँ॥४१॥ तिमीबाट पाएको उपदेशको प्रभावले गर्दा मेरो यज्ञ अत्यन्त उत्तम किसिमबाट सम्पन्न भयो। अब म तिमीलाई आफ्नो गुरु सम्झँदै गुरुदक्षिणा दिन चाहन्छु, त्यसकारण तिमीलाई गुरुदक्षिणका रूपमा जे माग्ने चाहना छ, त्यो वस्तु निश्चिन्त भएर माग ॥४२॥

भूयः स मन्त्रिभिः सार्द्धं मन्त्रयामास पार्थिवः ।

गुरुनिष्कृतिकामोऽत्र किमयं प्रार्थ्यतामिति ॥४३॥

तमूचुर्मन्त्रिणो राज्यमशेषं प्रार्थ्यतामिति ।

कृतिभिः प्रार्थ्यते राज्यमनायासितसैनिकैः ॥४४॥

प्रहस्य तानाह नृपः स खाण्डिक्यो महामतिः ।

स्वल्पकालं महीराज्यं मादृशैः प्रार्थ्यते कथम् ॥४५॥

एवमेतद्भवन्तोऽत्र ह्यर्थसाधनमन्त्रिणः ।

परमार्थः कथं कोऽत्र यूयं नात्र विचक्षणाः ॥४६॥

इत्युक्त्वा समुपेत्यैनं स तु केशिध्वजं नृपम् ।

उवाच किमवश्यं त्वं ददासि गुरुदक्षिणाम् ? ॥४७॥

बाढमित्येव तेनोक्तः खाण्डिक्यस्तमथाब्रवीत् ।

भवानध्यात्मविज्ञानपरमार्थविचक्षणः ॥४८॥

यदि चेद्दीयते मह्यं भवता गुरुनिष्क्रयः ।

तत् क्लेशप्रशमायालं यत् कर्म तदुदीरय ॥४९॥

त्यसपछि फेरि पनि खाण्डिक्य जनकले आफ्ना मन्त्रीहरूसँग विचार–विमर्श गरे कि केशिध्वज मलाई गुरुदक्षिणा दिनका लागि आएका छन्, यस समयमा मैले उनीसँग के माग्दा उचित होला ? अर्थात् आफ्नो कल्याण होला? ॥४३॥ खाण्डिक्य जनकका मन्त्रीहरूले भने– हे राजन्! हजुरले यिनीसँग सम्पूर्ण राज्य माग्नुहोस्, बुद्धिमान् मनुष्यले आफ्नो सेनामा कुनै किसिमको क्षति हुन तथा सेनालाई कुनै कष्ट हुन नदिएर नै आफ्ना शत्रुहरूसँग राज्य मात्र माग्दछन् ॥४४॥ त्यसपछि ती मन्त्रीहरूको कुरा सुनेर मुसुमुसु हाँस्दै खाण्डिक्य जनकले भने– मजस्तो व्यक्तिले अत्यन्त थौरै समयसम्म मात्र रहने राज्य कसरी माग्न सक्दछ? अर्थात् मैले केशिध्वजसँग राज्य माग्न उचित हुँदैन ॥४५॥ यो उचित नै हो कि तपाईंहरूले मलाई स्वार्थबाट सम्पन्न भएका साधनका लागि मात्र सल्लाह दिन सक्नुहुन्छ, तर परमार्थ के हो? कस्तो छ? यस विषयको ज्ञान तपाईंहरूलाई रहेको छैन ॥४६॥ आफ्ना मन्त्रीहरूसँग यति भनिसकेपछि खाण्डिक्य जनकले राजा केशिध्वजका नजिकमा आएर भने–"के तिमी निश्चितरूपमा मलाई आफ्नो चाहना अनुसारको गुरुदक्षिणा दिनका लागि तयार भएर आएका छौ?" ॥४७॥ त्यसपछि राजा केशिध्वजले भने– "हो, म निश्चितरूपमा तपाईंले माग्नु भएअनुसारको गुरुदक्षिणा दिनका लागि तयार छु। त्यसपछि महात्मा खाण्डिक्यले भने–"तिमी अध्यात्मविद्या अर्थात् अध्यात्मविज्ञानस्वरूप पारमार्थिक विद्यामा अत्यन्त सिपालु छौ अर्थात् त्यसका ज्ञाता हौ ॥४८॥ त्यसकारण यदि तिमी मलाई गुरुदक्षिणा दिने चाहना राख्दछौ भने जुन कर्म गर्दा सबै किसिमका दुःखहरूबाट पूर्ण रूपमा मुक्त भएर शान्ति प्राप्त गर्न सकिन्छ, त्यसका विषयमा अत्यन्त विस्तारपूर्वक बताइदेऊ ॥४९॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे षष्ठोऽध्यायः ।

ॐ

## सप्तमोऽध्यायः

## अध्याय – ७

### "ब्रह्मयोगनिर्णः"

(ब्रह्मयोगको निर्णय)

केशिध्वज उवाच

न प्रार्थितं त्वया कस्मान्मम राज्यमकण्टकम्।

राज्यलाभाद् विना नान्यत् क्षत्रियाणामतिप्रियम् ॥१॥

खाण्डिक्य उवाच

केशिध्वज निबोध त्वं मया न प्रार्थितं यतः।

राज्यमेतदशेषं ते यत्र गृध्नन्तपण्डिताः ॥२॥

क्षत्रियाणामयं धर्मो यत् प्रजापरिपालनम्।

वधश्च धर्मयुद्धेन स्वराज्यपरिपन्थिनाम् ॥३॥

यत्राशक्तस्य मे दोषो नैवास्त्यपहृते त्वया।

बन्धायैव भवत्येषा ह्यविद्याप्यक्रमोज्झिता ॥४॥

जन्मोपभोगलिप्सार्थमियं राज्यस्पृहा मम।

अन्येषां दोषजा नैषा धर्ममेवानुरुध्यते ॥५॥

न याञ्चा क्षत्रबन्धूनां धर्मो ह्येतत् सतां मतम्।

अतो न याचितं राज्यमविद्यान्तर्गतं तव ॥६॥

**केशिध्वजले भने**– तिमीले मसँग निष्कण्टक अर्थात् एकलौटी राज्यको माग किन गरेनौ? किनकि, शूरवीर क्षत्रियहरूका लागि राज्यप्राप्तिभन्दा धेरै प्रिय अरू हुन सक्दैन अर्थात् सबै क्षत्रियहरूले एकलौटी राज्य प्राप्त गर्ने नै चाहना राख्दछन् ॥१॥ **खाण्डिक्यले भने**– हे केशिध्वज! मूर्खहरूले मात्र सधैं राज्यप्राप्तिको लोभका नियन्त्रणमा परेर दुराचारयुक्त कार्य गर्दछन्। मैले तिमीसँग विशाल राज्य किन मागिन, त्यसका विषयमा तिमी ध्यानपूर्वक सुन ॥२॥ आफ्नो राज्यमा बसोबास गरिरहेका प्रजाहरूको न्यायिक सिद्धान्त अनुसार पालन–पोषण गर्नु तथा राज्यका विरोधीहरूलाई धर्ममय युद्धबाट मार्नु नै क्षत्रियहरूको परम धर्म हो ॥३॥ तर म शक्तिहीन भएका कारणले गर्दा तिमीले मेरो राज्य हरण गरेर लियौ। यस्तो अवस्थामा आफ्नो असमर्थताका कारणले मैले आफ्ना प्रजाहरूको पालन–पोषण नगरे तापनि मलाई कुनै किसिमको दोष लाग्दैन। तर राज्य गर्ने अधिकार प्राप्त भएपछि प्रजाहरूको धर्मानुकूल पालन–पोषण नगर्दा मात्र दोष लाग्दछ। किनकि, यद्यपि यो आफ्नो कर्म अविद्या नै हो, तथापि नियम–विपरीत राज्यको त्याग गर्दा त्यो बन्धनको कारण हुन्छ ॥४॥ यो राज्यप्रतिको लालच अर्थात् लोभ हामीले जन्मान्तरमा गरेका कर्महरूका आधारमा प्राप्त हुने सुखभोगका लागि मात्र हो र त्यही मन्त्री आदि अन्य मनुष्यहरूको राग एवं लोभजस्ता दोषहरूबाट उत्पन्न हुन्छ, धर्म अनुसार होइन ॥५॥ उत्तम क्षत्रियहरूले राज्य आदिको माग गर्नु अर्थात् माग्नु न्यायसङ्गत हुँदैन, यो महात्माहरूको मान्यता हो। त्यसकारण मैले अविद्या अन्तर्गत अर्थात् पालनादि कर्म अन्तर्गत पर्ने तिम्रो राज्य नमागेको हो ॥६॥ जुन मनुष्य अहङ्कारबाट सम्पन्न

राज्य गृध्नन्त्यविद्वांसो ममत्वाहतचेतसः ।

अहम्मानमहापान–मदमत्ता न मादृशः ॥७॥

पराशर उवाच

प्रहृष्टः साध्विति प्राह ततः केशिध्वजो नृपः ।

खाण्डिक्यजनकं प्रीत्या श्रूयतां वचनं मम ॥८॥

अहन्त्वविद्यया मृत्युं तर्तुकामः करोमि वै ।

राज्यं यागांश्च विविधान् भोगैः पुण्यक्षयं तथा ॥९॥

तदिदं ते मनो दिष्ट्या विवेकैश्वर्यतां गतम् ।

श्रूयतां चाप्यविद्यायाः स्वरूपं कुलनन्दन ॥१०॥

अनात्मन्यात्मबुद्धिर्या चास्वे स्वमिति या मतिः ।

संसारतरुसम्भूतेर्बीजमेतद् द्विधा स्थितम् ॥११॥

पञ्चभूतात्मके देहे देही मोहतमोवृतः ।

अहमेतदितीत्युच्चैः कुरुते कुमतिर्मतिम् ॥१२॥

आकाश–वाय्वग्नि–जल–पृथिवीभ्यः पृथक् स्थिते ।

आत्मन्यात्ममयं भावं कः करोति कलेवरे ॥१३॥

कलेवरोपभोग्यं हि गृहक्षेत्रादिकञ्च कः ।

अदेहे ह्यात्मनि प्राज्ञो ममेदमिति मन्यते ॥१४॥

इत्थञ्च पुत्र–पौत्रेषु तद्देहोत्पादितेषु कः ।

करोति पण्डितः स्वाम्यमनात्मनि कलेवरे ॥१५॥

भएको, मदिरा पिएर अत्यन्त उन्मत्त भएको हुन्छ तथा जसको अन्तरात्मा पूर्ण रूपमा मायाको जालमा बेरिएको छ; यसप्रकारका अविवेकी मनुष्यहरूले मात्र राज्य–प्राप्तिको कामना गर्दछन्, तर म समानको पुरुषले राज्य प्राप्त गर्ने चाहना राख्दैन ॥७॥ **पराशरजीले भन्नुभयो–** त्यसपश्चात् राजा केशिध्वजले खाण्डिक्य जनकलाई धन्यवाद दिए र अत्यन्त प्रसन्नतापूर्वक भने कि अब मेरो कुरा सुन...॥८॥ मैले अविद्यारूपी अर्थात् प्रजाहरूको पालन–पोषण गर्ने कर्मका माध्यमद्वारा मृत्युमाथि विजय प्राप्त गर्ने कामनाबाट अभिप्रेरित भएर राज्य एवं विभिन्न किसिमका यज्ञहरूको अनुष्ठान गरिरहेको छु र विभिन्न किसिमका भोगहरूको उपभोग गरेर आफ्ना पुण्यहरूको पनि विनाश गरिरहेको छु ॥९॥ हे कुलका उज्ज्वल तारा! तिम्रो मन यस प्रकारले विवेकबाट सम्पन्न हुनु अत्यन्त सौभाग्यको कुरा हो। त्यसकारण अब तिमी अविद्याको स्वरूपका बारेमा अत्यन्त विस्तारपूर्वक सुन ॥१०॥ संसाररूपी रूखको बीऊका रूपमा रहेको यो अविद्या दुई किसिमको रहेको छ। त्यो अनात्मामा आत्मबुद्धि र जुन आफ्नो हुँदै होइन त्यसलाई आफ्नो सम्झिनु हो ॥११॥ यो मति बिग्रिएको जीवले ममतारूपी अन्धकारबाट यथार्थ रूपमा ढाकिएर पञ्चमहाभूतबाट बनेको अर्थात् मञ्चमहाभूतहरूको कार्यरूप शरीरमा आत्मबुद्धि अथवा म र मेरो भाव राख्दछ ॥१२॥ जब आत्मा आकाश, वायु, आगो, पानी र पृथ्वी आदिबाट पूर्ण रूपमा अलग रहेको छ भने कुन विवेकशील मनुष्यले यस शरीरमा आत्मबुद्धि अर्थात् म र मेरो भाव राख्दछ ॥१३॥ तथा कुन विद्वान् मनुष्यले आत्मालाई शरीरभन्दा अलग भएको देखिसकेपछि पनि शरीरका उपभोग्य वस्तुहरू घर एवं जग्गा–जमीन आदिमा आफ्नो भएको भाव राख्दछ अर्थात् यी भौतिक वस्तुहरूलाई कसरी आफ्नो सम्झन्छ? ॥१४॥ यसरी यस आत्मालाई शरीरभन्दा अलग भएको जानिसकेपछि कुन विवेकशील पुरुषले यस शरीरबाट उत्पन्न भएका छोरा–नातिहरूप्रति पनि अपनत्व अर्थात् आफ्नो भएको भाव राख्दछ ॥१५॥ मनुष्यले शरीरको उपभोगका लागि

सर्वं देहोपभोगाय कुरुते कर्म मानवः ।

देहश्चान्यो यदा पुंसस्तदा बन्धाय तत्परम् ॥१६॥

मृन्मयञ्च यथा गेहं लिप्यते च मृदम्भसा ।

पार्थिवोऽयं तथा देहो मृदम्ब्वालेपनस्थितिः ॥१७॥

पञ्चभूतात्मकैर्भोगैः पञ्चभूतात्मकं वपुः ।

आप्यायते यदि ततः पुंसो गर्वोऽत्र किं ततः ॥१८॥

अनेकजन्मसाहस्रीं संसारपदवीं व्रजन् ।

मोहश्रमं प्रयातोऽसौ वासनारेणुगुण्ठितः ॥१९॥

प्रक्षाल्यते यदा सोऽस्य रेणुर्ज्ञानोष्णवारिणा ।

तदा संसारपान्थस्य याति मोहश्रमः शमम् ॥२०॥

मोहश्रमे शमं याते स्वस्थान्तः करणः पुमान् ।

अनन्यातिशयाबाधं परं निर्वाणमृच्छति ॥२१॥

निर्वाणमय एवायमात्मा ज्ञानमयोऽमलः ।

दुःखाज्ञानमया धर्माः प्रकृतेस्ते तु नात्मनः ॥२२॥

जलस्य नाग्निसंसर्गः स्थालीसङ्गात्तथापि हि ।

शब्दोद्रेकादिकान् धर्मांस्तत् करोति यथा मुने ॥२३॥

तथात्मा प्रकृतेः सङ्गादहम्मानादिदूषितः ।

भजते प्राकृतान् धर्म्मानन्यस्तेभ्यो हि सोऽव्ययः ॥२४॥

तदेतत् कथितं बीजमविद्यायास्तव प्रभो ।

क्लेशानाञ्व क्षयकरं योगादन्यत्र विद्यते ॥२५॥

मात्र सबै किसिमका कर्महरू गरिरहेको हुन्छ, तर जब यो शरीर आफूभन्दा अलग रहेको छ भने आफूद्वारा गरिएका सबै कर्महरू केवल शरीरको उत्पत्तिरूपी बन्धनका लागि मात्र गरिएको हुन्छ ॥१६॥ जसरी माटोबाट बनाइएको घरलाई माटो र पानी मिसाएर लिपिन्छ, ठीक त्यसरी नै यो पार्थिव शरीर पनि माटो नै माटो भएको अन्न र पानीको सहायताले स्थिर रहेको हुन्छ ॥१७॥ यदि पञ्चमहाभूतहरूबाट निर्माण भएको अर्थात् बनेको यो शरीर पाञ्चभौतिक पदार्थहरू अर्थात् अन्न र पनीबाट पुष्ट हुन्छ भने यसमा पुरुषले के उपभोग गर्‍यो ? ॥१८॥ अनेकौं, हजारौं जन्महरूसम्म संसारमा घुमिरहेको र विषयवासनारूपी धुलोबाट पूर्ण रूपमा ढाकिएर रहेको यो जीवले केवल ममतारूपी परिश्रमलाई मात्र प्राप्त गर्दछ ॥१९॥ तर जब विवेकरूपी अत्यन्त तातो पानीले त्यसको ममतारूपी धुलो पखालिन्छ, त्यसपछि सांसारिक चक्रको बाटोमा अत्यन्त तीव्र गतिमा घुमिरहेको यात्रीरूपी जीवको ममतारूपी श्रम पूर्ण रूपमा विनष्ट हुन्छ ॥२०॥ ममतारूपी श्रम पूर्ण रूपमा विनष्ट भइसकेपछि स्वच्छ अर्थात् निर्मल अन्तरात्मा भएको पुरुषले निरतिशय अर्थात् अन्तिम सीमा भएको परम निर्वाणपद प्राप्त गर्दछ ॥२१॥ यो ज्ञानबाट सम्पन्न भएको निर्मल आत्मा निर्वाणस्वरूप नै रहेको छ । दुःख र अज्ञानादि आत्माको नभएर प्रकृतिको धर्म हो अर्थात् यिनीहरूसँग निर्मल आत्माको कुनै किसिमको सम्बन्ध रहेको छैन ॥२२॥ हे मुनि! जसरी कसौंडी वा तपेसमा राखिएको पानीको आगोसँग प्रत्यक्ष रूपमा सम्पर्क नभए तापनि केवल कसौंडी वा तपेससँग आगोको सम्पर्क भएका कारणले त्यसमा रहेको पानी उम्लिन थाल्दछ र त्यसबाट आवाज निस्कन्छ अर्थात् त्यसले शब्दादि धर्म प्राप्त गर्दछ; त्यसरी नै प्रकृतिसँग सम्पर्क भएका कारणले त्यो अविनाशी आत्माले अभिमानादि दोषहरूबाट दूषित भएर प्राकृतिक धर्मको उपभोग गर्दछ अर्थात् उसले संसार र शरीरलाई आफ्नो अत्यन्त नजिकको मित्र सम्झन्छ ॥२३-२४॥ हे प्रभो! मैले यसरी अविद्याको बीजका विषयमा बताइदिएँ दुःखहरूको विनाश गर्नका लागि योगबाहेक अन्य कुनै उपाय रहेको छैन अर्थात् दुःखहरूको पूर्णरूपमा विनष्ट गराउने सर्वोत्तम उपाय योगमात्र हो ॥२५॥

खाण्डिक्य उवाच

तन्नु ब्रूहि महाभाग! योगं योगविदुत्तम!

विज्ञानयोगशास्त्रार्थस्त्वमस्यां निमिसन्ततौ ॥२६॥

केशिध्वज उवाच

योगस्वरूपं खाण्डिक्य! श्रूयतां गदतो मम।

यत्र स्थितो न च्यवते प्राप्य ब्रह्मलयं मुनिः ॥२७॥

मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः।

बन्धाय विषयासङ्गि मुक्त्यै निर्विषयं तथा ॥२८॥

विषयेभ्यः समाहृत्य विज्ञानात्मा मनो मुनिः।

चिन्तयेन्मुक्तये तेन ब्रह्मभूतं परेश्वरम् ॥२९॥

आत्मभावं नयत्येनं तद्ब्रह्म ध्यायिनं मुनिम्।

विकार्यमात्मनः शक्त्या लोहमाकर्षको यथा ॥३०॥

आत्मप्रयत्नसापेक्षा विशिष्टा या मनोगतिः।

तस्या ब्रह्मणि संयोगो योग इत्याभिधीयते ॥३१॥

एवमत्यन्तवैशिष्ट्ययुक्तकर्मोपलक्षणः।

यस्य योगस्य वै योगी मुमुक्षुरभिधीयते ॥३२॥

योगयुक् प्रथमं योगी युञ्जानो ह्यभिधीयते।

विनिष्पन्नसमाधिस्तु परं ब्रह्मोपलब्धिमान् ॥३३॥

यद्यन्तरायदोषेण दूष्यते चास्य मानसम्।

जन्मान्तरैरभ्यसतो मुक्तिः पूर्वस्य जायते ॥३४॥

विनिष्पन्नसमाधिस्तु मुक्तिं तत्रैव जन्मनि।

प्राप्नोति योगी योगाग्निदग्धकर्मचयोऽचिरात् ॥३५॥

**खाण्डिक्यले भने–** हे योगका सर्वज्ञ! हे धर्मात्मा केशिध्वज! तिमी मलाई त्यो योगको यथार्थ स्वरूपका विषयमा विस्तारपूर्वक बताइदेऊ। किनकि, निमिका वंशमा तिमीमात्र विशेष रूपले योगशास्त्रका ज्ञाता रहेका छौ ॥२६॥ **केशिध्वजले भने–** हे खाण्डिक्य! म योगको यथार्थ स्वरूपका विषयमा बताउँछु, सुन। जुन योगको साधना गरेर ब्रह्मलोकमा पुगेका मुनिहरू फेरि फर्किएर संसारमा आउनु पर्दैन अर्थात् उनहरू पूर्ण रूपमा मुक्त हुन्छन् ॥२७॥ मनुष्यको मन नै बन्धन र मुक्तिको कारकतत्त्व हो। जब मन विषयवासनामा अत्यन्त आसक्त हुन्छ, त्यसपश्चात् बन्धनको र जब मनले विषयवासनाको परित्याग गरिदिन्छ, त्यसपछि मुक्तिको कारकतत्त्व बन्दछ ॥२८॥ त्यसकारण ज्ञानी महात्माहरूले आफ्नो मनलाई विषयवासनाहरूबाट हटाएर मुक्तिका लागि ब्रह्मस्वरूप परमेश्वरको उपासना गर्दछन् अर्थात् योगसाधनामा तत्परतापूर्वक लाग्दछन् ॥२९॥ हे मुनि! जसरी चुम्बक भएको ढुङ्गाले फलामलाई आफूतिर तान्दछ, त्यसरी नै ब्रह्मको चिन्तन गर्ने योगीलाई स्वयं परमात्माले आफ्नो स्वरूपतिर तानेर आफैंमा समाहित गरिदिनु हुन्छ अर्थात् आफ्नो परमधाममा पुऱ्याइदिनु हुन्छ ॥३०॥ आत्मज्ञान-प्राप्तिको प्रयासस्वरूप यम, नियम आदिको अभिलाषा राख्ने मनको जुन विशेष किसिमको उत्तम गति छ, त्यसको ब्रह्मसँग संयोग हुनुलाई नै "योग" भनिन्छ ॥३१॥यस किसिमको विशिष्ट कर्मका माध्यमद्वारा जसको योग उपलक्षित भएको हुन्छ, त्यसै पुरुषलाई योगी र मुमुक्षु भनिन्छ ॥३२॥जब मुमुक्षुले सर्वप्रथम योगको अभ्यास गर्न आरम्भ गर्दछ, त्यस समयमा उसलाई युञ्जान अर्थात् ब्रह्ममा लीन हुने योग गर्ने योगी भनिन्छ र क्रमबद्ध रूपमा समाधि सम्पन्न भएपछि उसलाई ब्रह्मज्ञानको प्राप्ति हुन्छ ॥३३॥ यदि यसभन्दा पहिले बताइएको ब्रह्ममा विलीन हुन योग गर्ने योगीको मन कुनै कारणले गर्दा दूषित भइदियो भने उसले त्यसपछिको जन्ममा त्यही अभ्यासका प्रभावले मुक्ति प्राप्त गर्दछ अर्थात् मुक्त हुन्छ ॥३४॥ तर समाधि निर्विघ्नतापूर्वक सम्पन्न भएको योगीले यसै जन्ममा मुक्ति प्राप्त गर्दछ। किनकि, उसका सबै किसिमका कर्महरू योगको अग्निद्वारा जलेर उसले यसै जन्ममा मुक्ति प्राप्त गर्दछ। किनकि, उसका सबै किसिमका कर्महरू योगको अग्निद्वारा जलेर यसै जन्ममा पूर्ण रूपमा भष्म भइसकेका हुन्छन् ॥३५॥

ब्रह्मचर्यमहिंसां च सत्यास्तेयापरिग्रहान्।
सेवेत योगी निष्कामो योग्यतां स्वमनो नयन् ॥३६॥
स्वाध्याय-शौच-सन्तोष-तपांसि नियतात्मवान्।
कुर्वीत ब्रह्मणि तथा परस्मिन् प्रवणं मनः ॥३७॥
एते यमाः सनियमाः पञ्च पञ्च प्रकीर्तिताः।
विशिष्टफलदाः काम्याः निष्कामाणां विमुक्तिदाः ॥३८॥
एकं भद्रासनादीनां समास्थाय गुणैर्युतः।
यमाख्यैर्नियमाख्यैश्च युञ्जीत नियतो यतिः ॥३९॥
प्राणाख्यमनिलं वश्यमभ्यासात् कुरुते तु यत्।
प्राणायामः स विज्ञेयः सबीजोऽबीज एव च ॥४०॥
परस्परेणाभिभवं प्राणापानौ यदानिलौ।
कुरुतः सद्विधानेन तृतीयः संयमात्तयोः ॥४१॥
तस्य चालम्बनवतः स्थूलरूपं द्विजोत्तम।
आलम्बनमनन्तस्य योगिनोऽभ्यसतः स्मृतम् ॥४२॥
शब्दादिष्वनुरक्तानि निगृह्याक्षाणि योगवित्।
कुर्याच्चित्तानुचारीणि प्रत्याहारपरायणः ॥४३॥
वश्यता परमा तेन जायतेऽतिचलात्मनाम्।
इन्द्रियाणामवश्यैस्तैर्न योगी योगसाधकः ॥४४॥
प्राणायामेन पवनैः प्रत्याहारेण चेन्द्रियैः।
वशीकृतैस्ततः कुर्यात् स्थिरं चेतः शुभाश्रये ॥४५॥

योगीले आफ्नो अन्तरमात्मालाई ब्रह्मको उपासनाका योग्य बनाउनका लागि ब्रह्मचर्य, अहिंसा, सत्य, अस्तेय अर्थात् चोरी नगर्नु र अपरिग्रह अर्थात् कसैसँग केही पनि नलिने कार्यलाई निष्कामभावपूर्वक अवलम्बन गर्नुपर्दछ अर्थात् यी नियमहरूको पालना गर्नुपर्दछ ॥३६॥ संयमित-चित्त भएर अर्थात् चित्तलाई यथार्थ रूपमा आफ्नो नियन्त्रणमा राखेर स्वाध्याय, शौच, सन्तोष र तपस्याको अवलम्बन गर्दै मनलाई सधैं परब्रह्मको चिन्तन अर्थात् उपासनामा लगाउनु पर्दछ ॥३७॥ यसभन्दा पहिले बताइएका यी पाँच-पाँचलाई यम र नियम भनिन्छ। सकामभावपूर्वक यिनीहरूको उपयोग गर्नाले अलग-अलग फल प्राप्त हुन्छ र निष्कामभावपूर्वक उपयोग गर्नाले मोक्ष अर्थात् मुक्ति प्राप्त हुन्छ ॥३८॥ यति अर्थात् सांसारिक विषयवासनाबाट विरक्त भएको योगनिष्ठ सन्यासीले भद्रासन आदि यिनीहरूमध्ये कुनै एकको अवलम्बन गर्दै यम, नियम आदि गुणहरूबाट सम्पन्न भएर संयमित चित्तद्वारा योगको अभ्यास गर्नुपर्दछ ॥३९॥ अभ्यासका माध्यमद्वारा प्राणवायुलाई जसबाट नियन्त्रण गरिन्छ, त्यसको नाम "प्राणायाम" हो। सजीव र निर्जीव भेदका आधारमा प्राणायाम दुई किसिमका हुन्छन् ॥४०॥ सद्गुरुबाट प्राप्त भएको उपदेश अनुसार विशेष प्रणालीबाट परिचालित भएर जब योगीले प्राण र अपान वायुद्वारा एक अर्कालाई निरोध अर्थात् रोक्ने काम गर्दछ, त्यसपश्चात् क्रमबद्ध रूपमा पूरक र रेचक नाम नभएका दुई प्राणायम हुन्छन् र यी दुवैलाई एकैपटक संयम गर्नाले तेस्रो कुम्भक नाम भएको प्राणायाम हुन्छ ॥४१॥ हे ब्राह्मणश्रेष्ठ! जब योगीले सबीज प्राणायाम आरम्भ गर्दछ, तब उसको आलम्बन अर्थात् आधार अनन्त भगवान्को स्थूलरूप हुन्छ ॥४२॥ त्यसपछि प्रत्याहारमा परायण भएर शब्द आदि विषयवासनाहरूमा लागिरहेका इन्द्रियहरूलाई नियन्त्रण गरेर आफ्नो चित्तलाई अनुकूल बनाउँछ ॥४३॥ यसबाट अत्यन्त चञ्चल स्वभाव भएका इन्द्रियहरू आफ्नो नियन्त्रणमा हुन्छन् र इन्द्रियहरूलाई यथार्थ रूपमा नियन्त्रणमा नराखेसम्म कुनै पनि योगीले योगको साधना गर्न सक्दैन ॥४४॥ यसरी प्रायायामका माध्यमद्वारा वायुलाई र प्रत्याहारका माध्यमद्वारा इन्द्रियहरूलाई यथार्थ रूपमा आफ्नो नियन्त्रणमा राखेर चित्तलाई शुभ अर्थात् कल्याणदायक आश्रयमा स्थिर गराउनु पर्दछ ॥४५॥

खाण्डिक्य उवाच

कथ्यतां मे महाभाग! चेतसो यः शुभाश्रयः ।

यदाधारमशेषं तद्धन्ति दोषसमुद्भवम् ॥४६॥

केशिध्वज उवाच

आश्रयश्चेतसो ब्रह्म द्विधा तच्च स्वभावतः ।

भूप मूर्तममूर्तञ्च परञ्चापरमेव च ॥४७॥

त्रिविधा भावना भूप! विश्वमेतन्निबोध मे ।

ब्रह्माख्या कर्मसंज्ञा च तथा चैवोभयात्मिका ॥४८॥

ब्रह्मभावात्मिका ह्येका कर्मभावात्मिका परा ।

उभयात्मिका तथैवान्या त्रिविधा भावभावना ॥४९॥

सनन्दनादयो ब्रह्मन् ब्रह्मभावनया युताः ।

कर्मभावनया चान्ये देवाद्याः स्थावराश्चराः ॥५०॥

हिरण्यगर्भादिषु च ब्रह्मकर्मात्मिका द्विधा ।

बोधाधिकारयुक्तेषु विद्यते भावभावना ॥५१॥

अक्षीणेषु समस्तेषु विशेषज्ञानकर्मसु ।

विश्वमेतत् परं चान्यद् भेदभिन्नदृशां नृप ॥५२॥

प्रत्यस्तमितभेदं यत् सत्तामात्रमगोचरम् ।

वचसामात्मसंवेद्यं तज्ज्ञानं ब्रह्मसंज्ञितम् ॥५३॥

तच्च विष्णोः परं रूपमरूपस्याजमक्षरम् ।

विश्वरूपाच्च वैरूप्यलक्षणं परमात्मनः ॥५४॥

न तद्योगयुजा शक्यं नृप! चिन्तयितुं यतः ।

ततः स्थूलं हरे रूपं चिन्तयेद् विश्वगोचरम् ॥५५॥

**खाण्डिक्यले भने**–हे धर्मात्मा केशिध्वज! जसको आधारमा रहेर चित्तमा उत्पन्न भएका दोषहरूलाई यथार्थ रूपमा नष्ट गर्न सकिन्छ, त्यो चित्तको कल्याणदायक आश्रय के हो ? तिमीले मलाई त्यसका विषयमा विस्तारपूर्वक बताइदेऊ ॥४६॥ **केशिध्वजले भने**– हे राजन्! चित्तको शुभ अर्थात् कल्याणदायक आश्रय ब्रह्म मात्र हुनुहुन्छ, तर उहाँ शरीर नहुनु भएको अमूर्त शरीर वा रूप हुनुभएको मूर्त अर्थात् दुई किसिमको हुनुहुन्छ जसलाई पर र अपर भनिन्छ ॥४७॥ हे राजन! यस जगत्मा तीन किसिमका भावनाहरू रहेका छन्, तिनीहरूका विषयमा तिमी मबाट सुन ॥४८॥ पहिलो– ब्रह्मभावना, दोस्रो कर्मभावना र तेस्रो– उभयभावना । ब्रह्म र कर्म यी दुवैको भावना हो । भावभावना पनि तीन किसिमका हुनछन्, पहिलो– ब्रह्मभावनमा, दोस्रो– कर्मभावना र तेस्रो– बह्म र कर्म भावको भावना ॥४९॥ हे ब्रह्मन्! सनन्दनजस्ता ऋषिहरू ब्रह्मभावबाट सम्पन्न भएका छन् र देवताहरूदेखि स्थावर एवं जङ्गमसम्मका सबै प्राणी कर्मभावनाबाट सम्पन्न भएका छन् ॥५०॥ हिरण्यगर्भजस्तामा कर्म र ब्रह्म दुवै किसिमका भावनाहरू विद्यमान रहेका छन् । जसलाई जुन किसिमको बोध र अधिकार रहेको छ, त्यसमा त्यसै अनुसारको भावभावना रहेको हुन्छ ॥५१॥ हे राजन्! ज्ञानको भेदका कारणले जब कर्महरू नासिने अवस्थामा रहन्छन्, त्यसपश्चात् भेददृष्टिबाट सम्पन्न भएका जीवहरूले संसार र परमात्मामा भेदज्ञान राख्दछन् अर्थात् अलग भएको सम्झन्छन् ॥५२॥ जुन ज्ञानमा कुनै किसिमको भेद रहेको हुँदैन र जसबाट अस्तित्वमात्र एवं देख्न नसकिने आत्मा मात्र रहेको अनुभव हुन्छ, त्यही ज्ञानलाई ब्रह्मज्ञान भनिन्छ ॥५३॥ आफ्नो कुनै निश्चित स्वरूप नहुनु भएका परमात्मा श्रीविष्णुको त्यही नित्य र परमस्वरूप हो तथा यो सबै विश्वरूपभन्दा अत्यन्त विलक्षण किसिमको छ ॥५४॥ हे राजन्! योगसाधनामा तत्परतापूर्वक लागेका योगीहरू योगाभ्यासको आरम्भमा यो अत्यन्त परमस्वरूपको ध्यान गर्नका लागि असमर्थ हुन्छन् । त्यसकारण परमात्मा श्रीहरिको स्थूलस्वरूपको मात्र ध्यान गर्दछन् ॥५५॥ हे भूपति! भगवान् वासुदेव, हिरण्यगर्भ, इन्द्र, प्रजापति, वायु, वसुहरू, रुद्र, सूर्य, ग्रह, नक्षत्र, गन्धर्व, यक्ष, एवं

हिरण्यगर्भो भगवान् वासवोऽथ प्रजापतिः ।
मरुतो वसवो रुद्रा भास्करास्तारका ग्रहाः ॥५६॥
गन्धर्व–यक्ष–दैत्याद्याः सकला देवयोनयः ।
मनुष्याः पशवः शैलाः समुद्राः सरितो द्रुमाः ॥५७॥
भूप! भूतान्यशेषाणि भूतानां ये च हेतवः ।
प्रधानादि विशेषान्तं चेतनाचेतनात्मकम् ॥५८॥
एकपादं द्विपादञ्च बहुपादमपादकम् ।
मूर्तमेतद्धरे रूपं भावनात्रितयात्मकम् ॥५९॥
एतत् सर्वमिदं विश्वं जगदेतच्चराचरम् ।
परब्रह्मस्वरूपस्य विष्णोः शक्तिसमन्वितम् ॥६०॥
विष्णुशक्तिः परा प्रोक्ता क्षेत्रज्ञाख्या तथापरा ।
अविद्या कर्मसंज्ञान्या तृतीया शक्तिरिष्यते ॥६१॥
यया क्षेत्रज्ञशक्तिः सा वेष्टिता नृप! सर्वगा ।
संसारतापानखिलानवाप्नोत्यनुसन्ततान् ॥६२॥
तया तिरोहितत्वाच्च शक्तिः क्षेत्रसंज्ञिता ।
सर्वभूतेषु भूपाल! तारतम्येन लक्ष्यते ॥६३॥
अप्राणवत्सु स्वल्पाल्पा स्थावरेषु ततोऽधिका ।
सरीसृपेषु तेभ्योऽन्याप्यतिशक्त्या पतत्रिषु ॥६४॥
पतत्रिभ्यो मृगास्तेभ्यः स्वशक्त्या पशवोऽधिका ।
पशुभ्यो मनुजाश्चातिशक्त्या पुंसः प्रभाविताः ॥६५॥
तेभ्योऽपि नाग–गन्धर्व–यक्षाद्या देवता नृप ।
शक्रः समस्तदेवेभ्यस्ततश्चाति प्रजापतिः ॥६६॥
हिरण्यगर्भोऽपि ततः पुंसः शक्त्युपलक्षितः ।
एतान्यशेषरूपस्य तस्य रूपाणि पार्थिव ॥६७॥

दैत्यजस्ता सबै किसिमका देवयोनिहरू र मनुष्य, पशु, पर्वत, समुद्र, नदी–नाला एवं रूख आदि सबै किसिमका जीवहरू तथा तिनीहरूका कारणहरू प्रधान अर्थात् प्रकृतिदेखि आरम्भ गरेर विशेष अर्थात् पञ्चतन्मात्रासम्म एक खुट्टा भएका, दुई खुट्टा भएका, धेरै खुट्टा भएका अथवा खुट्टा नभएका चेतन अथवा अचेतनस्वरूप यी सबै तीन किसिमको भावनाबाट सम्पन्न परमात्मा श्रीहरिका मूर्तस्वरूप हुन् ॥५६–५९॥ यो सम्पूर्ण चराचर जगत् परब्रह्म परमात्मास्वरूप भगवान् श्रीविष्णुको शक्तिबाट यथार्थ रूपमा सम्पन्न भएको "विश्व" नाम भएको स्वरूप हो ॥६०॥ परमात्मा श्रीविष्णुका शक्ति पनि तीन किसिमका रहेका छन्। ती हुन् –परा विष्णुशक्ति, अपरा क्षेत्र शक्ति अर्थात् शरीरको शक्ति तथा यी दुईभन्दा बाहेक कर्मशक्ति अथवा अविद्याशक्ति अर्थात् जसले दुःखहरूको उपभोग गर्दछ ॥६१॥ हे राजन! यो अविद्याशक्तिबाट यथार्थरूपमा सम्पन्न भएकाले सर्वव्यापक रूपमा फैलिएर रहेको क्षेत्रशक्तिले सबै किसिमका अत्यधिक मात्रामा विस्तारित भएका सांसारिक तापहरू अर्थात् दुःखहरूको उपभोग गर्दछ ॥६२॥ हे राजन! त्यो अविद्याशक्तिबाट पूर्ण रूपमा ढाकिएर रहेको हुनाले यो क्षेत्रशक्ति सबै किसिमका जीवमा तारतम्य अर्थात् कमवेशीको भावपूर्वक रहेको देखिन्छ ॥६३॥ त्यो क्षेत्रशक्ति प्राण नभएका अर्थात् निर्जिव पदार्थहरूमा अत्यन्त कम मात्रामा, स्थावर अर्थात् अचल रहने पदार्थहरूमा त्यसभन्दा केही धेरै मात्रामा, त्यसभन्दा धेरै मात्रामा सर्प, गँड्उला जसरी नागबेली पर्दै घस्रेर हिँड्ने प्राणीमा, त्यसभन्दा धेरै मात्रामा पक्षीहरूमा रहेको हुन्छ ॥६४॥ पक्षीहरूभन्दा धेरै मात्रामा मृगहरूमा, मृगहरू भन्दा धेरै मात्रामा पशुहरूमा र पशुहरूभन्दा पनि मनुष्य परमात्माको त्यो क्षेत्रशक्तिबाट धेरै मात्रामा प्रभावित भएको हुन्छ ॥६५॥ हे राजन् ! मनुष्यहरूका तुलनामा नाग, गन्धर्व एवं यक्ष आदि सबै किसिमका देवताहरूमा भन्दा धेरै मात्रामा देवराज इन्द्रमा, देवराज इन्द्रमा भन्दा धेरैमात्रामा प्रजापतिमा, प्रजापतिमा भन्दा धेरै मात्रामा हिरण्यगर्भमा परमात्माको त्यो क्षेत्रशक्तिको प्रभाव विशेष रूपमा रहेको हुन्छ ॥६६–६७॥ हे भूपति! यी सबै किसिमका रूपहरू

यतस्तच्छक्तियोगेन व्याप्तानि नभसा यथा।
द्वितीयं विष्णुसंज्ञस्य योगिध्येयं महामते ॥६८॥
अमूर्तं ब्रह्मणो रूपं यत् सदित्युच्यते बुधैः।
समस्ताः शक्तयश्चैता नृप यत्र प्रतिष्ठिताः ॥६९॥
तद्विश्वरूपरूपं वै रूपमन्यद्धरेर्महत्।
समस्तशक्तिरूपाणि तत् करोति जनेश्वर ॥७०।
देव-तिर्य्यङ्मनुष्यादि चेष्टावन्ति स्वलीलया।
जगतामुपकाराय न सा कर्मनिमित्तजा।
चेष्टा तस्याप्रमेयस्य व्यापिन्यव्याहतात्मिका ॥७१॥
तद्रूपं विश्वरूपस्य तस्य योगयुजा नृप !
चिन्त्यमात्मविशुद्ध्यर्थं सर्वकिल्विषनाशनम् ॥७२॥
यथाग्निरुद्धतशिखः कक्षं दहति सानिलः।
तथा चित्तस्थितो विष्णुर्योगिनां सर्वकिल्विषम् ॥७३॥
तस्मात् समस्तशक्तीनामाधारे तत्र चेतसः।
कुर्वीत संस्थितिं सा तु विज्ञेया शुद्धधारणा ॥७४॥
शुभाश्रयः स चित्तस्य सर्वगस्य तथात्मनः।
त्रिभावभावनातीतो मुक्तये योगिनां नृप ॥७५॥
अन्ये च पुरुषव्याघ्र! तेचसो ये व्यपाश्रयाः।
अशुद्धास्ते समस्तास्तु देवाद्याः कर्मयोनयः ॥७६॥
मूर्तं भगवतो रूपं सर्वापाश्रयनिःस्पृहम्।
एषा वै धारणा ज्ञेया यच्चित्तं तत्र धार्यते ॥७७॥

परब्रह्म परमात्माकै शरीर हुन्। किनकि, यी सबै आकाशका जसरी नै व्याप्त भएर रहेका छन्। हे बुद्धिमान् पुरुष! योगीहरूले जुन स्वरूपको ध्यान गर्दछन्, त्यो श्रीविष्णु नाम भएका ब्रह्मको दोस्रो अमूर्त अर्थात् कुनै आकार नभएको स्वरूप हो ॥६८॥ हे राजन्! ब्रह्मको यो कुनै आकार नभएको स्वरूपलाई विद्वानहरूले "सत्" भन्दछन्। त्यसैमा सबै शक्तिहरू प्रतिष्ठित छन् र यही भगवान्को विश्वरूपभन्दा विलक्षण स्वरूप हो ॥६९॥ हे नरेश्वर! भगवान्को त्यही स्वरूपले आफ्नो लीलाको माध्यमद्वारा देवता, तिर्यक् र मनुष्यादिका चेष्टाहरूबाट सम्पन्न भएर सर्वशक्तिमय स्वरूप धारण गर्दछ। यी सबै स्वरूपहरूमा भगवान्को जुन व्यापक र अव्यापक अर्थात् कुनै किसिमको विघ्न–बाधाहरू नभएको चेष्टा हुन्छ, त्यो कर्मजन्य नभएर जगत्को उपकार अर्थात् कल्याणका लागि मात्र भएको हुन्छ ॥७०–७१॥ हे राजन्! योगको अभ्यासमा लागेका योगीले अन्तरात्माको शुद्धिका लागि परमात्मा विश्वरूपको त्यो सर्वपापविनाशक अर्थात् सबै पापहरूको विनाश गरिदिने स्वरूपको नै चिन्तन अर्थात् उपासना गर्दछन् ॥७२॥ जसरी वायुसँग सम्बन्ध स्थापित गरेर अत्यन्त प्रज्वलित ज्वालाहरूबाट सम्पन्न भएको अग्निले सुकेका त्यान्द्रा–त्यान्द्रीहरूलाई जलाएर भष्म गराइदिन्छ, त्यसरी अन्तरात्मामा निवास गर्नुभएका परमात्मा श्रीविष्णुले योगीहरूको सबै पाप भष्म गरिदिनुहुन्छ ॥७३॥ यसकारण सबै शक्तिहरूका आधारस्वरूप परमात्मा श्रीविष्णुमा आफ्नो चित्त एकाग्रतापूर्वक स्थिर गर्ने कार्यलाई "धारणा" भनिन्छ अर्थात् यो शुद्धधारणा हो ॥७४॥ हे राजन्! तीनाटै भावनाहरूबाट पूर्णरूपमा अलग रहनु भएका परमात्मा श्रीविष्णु मात्र योगीहरूको मुक्तिका लागि तिनीहरूको चञ्चल एवं विलक्षण विषयमा अवस्थित रहने चित्तको शुभ अर्थात् कल्याणदायक आश्रय हुनुहुन्छ ॥७५॥ हे वीर पुरुष! परमात्मा श्रीविष्णुका अतिरिक्त आश्रयका रूपमा रहेका जुन अन्य देवता आदि कर्मयोनिहरू रहेका छन्, ती सबै अत्यन्त अशुद्ध छन् ॥७६॥ परमात्मा श्रीविष्णुको यो मूर्त स्वरूपले चित्तलाई अन्य आश्रयहरूबाट ममतारहित गराइदिन्छ। यसरी भगवान्मा आफ्नो चित्तलाई यथार्थ रूपमा स्थिर गराउने कार्यलाई धारणा भनिन्छ ॥७७॥ हे नरेश ! कुनै आधार प्राप्त

यच्च मूर्तं हरे रूपं यादृक् चिन्त्यं नराधिप!।
तच्छ्रूयतामनाधारे धारणा नोपपद्यते ॥७८॥
प्रसन्नचारुवदनं पद्मपत्रोपमेक्षणम्।
सुकपोलं सुविस्तीर्णललाटफलकोज्ज्वलम् ॥७९॥
समकर्णान्तविनस्य–चारुकर्णविभूषणम्।
कम्बुग्रीवं सुविस्तीर्ण–श्रीवत्साङ्कितवक्षसम् ॥८०॥
बलीत्रिभङ्गिना मग्ननाभिना चोदरेण वै।
प्रलम्बाष्टभुजं विष्णुमथवापि चर्तुर्भुजम् ॥८१॥
समस्थितोरुजङ्घञ्च सुस्थिताङ्घ्रिवराम्बुजम्।
चिन्तयेद् ब्रह्म तन्मूर्तं पीतनिर्मलवाससम् ॥८२॥
किरीटहारकेयूरकटकादिविभूषितम्।
सार्ङ्ग–शङ्ख–गदा–खड्ग–चक्राक्षबलयान्वितम् ॥८३॥
चिन्तयेत् तन्मना योगी समाधायात्ममानसम्।
तावद् यावद् दृढीभूता तत्रैव नृप! धारणा ॥८४॥
व्रजतस्तिष्ठतोऽन्यद् वा स्वेच्छया कर्म कुर्वतः।
नापयाति यदा चित्तात् सिद्धां मन्येत तां तदा ॥८५॥
ततः शङ्ख–गदा–चक्र–शार्ङ्गादिरहितं बुधः।
चिन्तयेद्भगवद्रूपं प्रशान्तं साक्षसूत्रकम् ॥८६॥
सा यदा धारणा तद्वदवस्थानवती ततः।
किरीट–केयूरमुखैर्भूषणै रहितं स्मरेत् ॥८७॥

नभएसम्म यस किसिमको धारणा हुन सक्दैन। त्यसकरण परमात्मा श्रीविष्णुको मूर्त स्वरूपको ध्यान गर्ने विधिका विषयमा ध्यानपूर्वक सुन ॥७८॥जो अत्यन्त प्रसन्न मुखाकृति र कमलको फूल जस्ता आँखा भएको हुनुहुन्छ एवं सुन्दर गाला र विशाल टाउकोबाट अत्यन्त शोभायमान भइरहनु भएको छ तथा आफ्ना अत्यन्त सुन्दर कानहरूमा अतिशय मनमोहक कुण्डल लगाउनु भएको छ, जसको विशाल छाती श्रीवत्सको चिन्हबाट सुशोभित भइरहेको छ, जुन भगवान् तरङ्गका जसरी त्रिवली अर्थात नाभिमाथि देखिने तीन लुँदा तथा कमलनाभि भएको पेटबाट शोभासम्पन्न हुनुभएको छ, जसका लामा–लामा आठ अथवा चार हातहरू छन्, जसका जाँघ र तिघ्रा समान किसिमबाट स्थिर रहेका छन् तथा जो सुन्दर चरणकमलबाट सुशोभित हुनुभएको छ, उहाँ निर्मल पीताम्बर धारण गर्नुहुने परब्रह्म परमात्मास्वरूप भगवान् श्रीविष्णुको ध्यान अर्थात उपासना गर्नुपर्दछ ॥७९–८२॥ हे राजन्! योगीले मुकुट (श्रीपेच), अमूल्य रत्नादिको माला, पाखुराको माथिल्लो भागमा बाँधिने बाजुबन्द र कमरपेटी आदि अलङ्कारबाट सम्पन्न शार्ङ्ग धनुष, शङ्ख, गदा, चक्र, तरवार एवं रुद्राक्षका मालाहरू धारण गर्नुभएका भगवान्को दिव्य स्वरूपमा आफ्नो चित्तलाई यथार्थ रूपमा एकाग्र गरेर तन्मयभावपूर्वक त्यस समयसम्म ध्यान गर्नुपर्दछ, जुन समयसम्म धारणा दृढ हुँदैन अर्थात् आफ्नो चित्त भगवान्मा समर्पित हुँदैन ॥८३–८४॥ जब हिँड्दा–डुल्दा, उठ्दा–बस्दा अथवा आफ्नो स्वेच्छाअनुसारको कार्य गर्दाका अवस्थामा पनि आफ्नो चित्त परमात्माको स्वरूपबाट अलग हुँदैन, त्यस समयमा आफ्नो उपासना सिद्ध भएको सम्झनु पर्दछ ॥८५॥ यसरी चित्त दृढ भइसकेपछि योगीले शङ्ख, चक्र, गदा र शार्ङ्ग धनुष आदिबाट रहित एवं स्फटिकको अक्षमाला तथा यज्ञोपवीत अर्थात् जनै धारण गर्नुभएका भगवान्को अत्यन्त शान्त स्वरूपको चिन्तन अर्थात् उपासना गर्नुपर्दछ ॥८६॥ जब यो साधना पनि पहिलेको जसरी नै स्थिर हुन्छ। त्यसपश्चात् मुकुट, पाखुराको माथिल्लो भागमा बाँधिने बाजुबन्द आदिबाट रहित हुनुभएका भगवान्को स्वरूपको स्मरण गर्नुपर्दछ ॥८७॥ त्यसपछि

तदेकावयवं देवं चेतसा हि पुनर्बुधः ।
कुर्यात्ततोऽवयविनि प्रणिधानपरो भवेत् ॥८८॥
तद्रूपप्रत्यया त्वेका सन्ततिश्चान्यनिः स्पृहा ।
तद्ध्यानं प्रथमैरङ्गैः षड्भिर्निष्पाद्यते नृप ॥८९॥
तस्यैव कल्पनाहीनं स्वरूपग्रहणं हि यत् ।
मनसा ध्याननिष्पाद्यं समाधिः सोऽभिधीयते ॥९०॥
विज्ञानं प्रापकं प्राप्ये परे ब्रह्माणि पार्थिव !
प्रापणीयस्तथैवात्मा प्रक्षीणाशेषभावनः ॥९१॥
क्षेत्रज्ञः कारणं ज्ञानं करणं तेन तस्य तत् ।
निष्पाद्यं मुक्तिकार्यं वै कृतकृत्यो निवर्तते ॥९२॥
तद्भावभावनापन्नस्ततोऽसौ परमात्मना ।
भवत्यभेदी भेदश्च तस्याज्ञानकृतो भवेत् ॥९३॥
विभेदजनके ज्ञाने नाशमात्यन्तिकं गते ।
आत्मनो ब्रह्मणो भेदमसन्तं कः करिष्यति ॥९४॥
इत्युक्तस्ते महायोगः खाण्डिक्य! परिपृच्छतः ।
संक्षेप–विस्तराभ्यान्तु किमन्यत् क्रियतां तव ॥९५॥

खाण्डिक्य उवाच

कथिते योगसद्भावे सर्वमेव कृतं मम ।
तवोपदेशेनाशेषो नष्टश्चित्तमलो यतः ॥९६॥
ममेति यन्मया प्रोक्तमसदेतन्न चान्यथा ।
नरेन्द्र! गदितुं शक्यमपि विज्ञेयवेदिभिः ॥९७॥

बुद्धिमान् मनुष्यले आफ्नो अन्तरात्मामा एक प्राकृतिक अवयवबाट सम्पन्न परमात्माको चिन्तन अर्थात् उपासना गरेर फेरि सबै अवयवहरूको परित्याग गरेर केवल अवयवीको चिन्तन अर्थात् उपासना गर्नुपर्दछ ॥८८॥ हे राजन् जसमा केवल परमात्मालाई मात्र देख्न सकियोस्, यस किसिमले अन्य विषयवासनाहरूको ममताबाट पूर्ण रूपमा अलग भएर जुन एकमात्र अनवरत रूपमा बगिरहने धारा छ, त्यसैलाई ध्यान भनिन्छ र यो यसभन्दा पहिले बताइएका यमादि छओटा नियमहरूबाट सम्पन्न हुन्छ ॥८९॥ त्यस ध्येय पदार्थको मात्र मनका माध्यमद्वारा ध्यानबाट सिद्ध हुन योग्य र कल्पनाविहीन जुन स्वरूपलाई ग्रहण गरिन्छ, त्यसैलाई "समाधि" भनिन्छ ॥९०॥ हे पृथ्वीका शासक! समाधिबाट जुन भगवान्को साक्षात्कार रूपको विज्ञानले नै प्राप्त गर्न योग्य परब्रह्मको प्राप्ति गराउँदछ र सबै किसिमका भावनाहरूबाट पूर्ण रूपमा अलग भएको आत्माले मात्र त्यहाँसम्म पुऱ्याउन सक्दछ ॥९१॥ मुक्ति प्राप्त गर्नका लागि क्षेत्रज्ञ अर्थात् जीवात्मा कर्ता र ज्ञान कारण हुन्छ। ज्ञानरूपी कारणका माध्यमद्वारा मोक्षरूपी कार्यलाई सम्पन्न गरेर त्यो विज्ञान अर्थात् आत्मा कृतकृत्य भएर निवृत्त हुन्छ ॥९२॥ त्यस समयमा ऊ भगवद्–भावबाट परिपूर्ण भएर परमात्मासँग अभिन्न हुन्छ । किनकि, यसको भेदज्ञान त अज्ञानबाटै उत्पन्न भएको हुन्छ ॥९३॥ भेदलाई उत्पन्न गराउने अज्ञानको पूर्ण रूपमा अभाव भइसकेपछि ब्रह्म र आत्मामा अविद्यमान असत् असत् भेद कसले उत्पन्न गराउन सक्दछ? ॥९४॥ हे खाण्डिक्य! यसरी तिमीले गरेको प्रश्न अनुसार मैले संक्षेपमा र विस्तारपूर्वक योगका विषयमा बताइदिएँ, अब तिम्रा लागि अरू के गरिदिउँ? ॥९५॥ **खाण्डिक्य भन्दछन्–** तिमीले योगका विषयमा विस्तारपूर्वक बताइदिनु भएर मेरो सबै कार्य सम्पन्न गरिदिनु भयो। किनकि, यो उपदेशका प्रभावले मेरो मनमा भएको सम्पूर्ण दोष अथवा विकार पूर्ण रूपमा विनष्ट भयो ॥९६॥ हे राजन्! मैले जुन "मेरो" भन्ने शब्दको प्रयोग गरेको थिएँ, त्यो पनि असत्य नै थियो। किनकि, ज्ञेय अर्थात् जान्न योग्य वस्तुको ज्ञाता अर्थात् जानकार पुरुषले यो पनि भन्न सक्दैन अर्थात् मेरो भन्दैन ॥९७॥"म" र "मेरो"

अहं ममेत्यविद्येयं व्यवहारस्तथानयोः ।

परमार्थस्त्वसंलाप्यो गोचरो वचसां न सः ॥९८॥

तद्गच्छ श्रेयसे सर्वं ममैतद्भवता कृतम् ।

यद्विमुक्तिप्रदो योगः प्रोक्तः केशिध्वजाव्ययः ॥९९॥

पराशर उवाच

यथार्हपूजया तेन खाण्डिक्येन स पूजितः ।

आजगाम पुरं ब्रह्मंस्ततः केशिध्वजो नृपः ॥१००॥

खाण्डिक्योऽपि सुतं कृत्वा राजानं योगसिद्धये ।

वनं जगाम गोविन्दे विनिवेशितमानसः ॥१०१॥

तत्रैकान्तरतिर्भूत्वा यमादिगुणशोधितः ।

विष्ण्वाख्ये निर्मले ब्रह्मण्यवाप नृपतिर्लयम् ॥१०२॥

केशिध्वजोऽपि मुक्त्यर्थं स्वकर्मक्षपणोन्मुखः ।

बुभुजे विषयान् कर्म चक्रे चानभिसंहितम् ॥१०३॥

स कल्पनोपभोगैश्च क्षीणपापोऽमलस्तथा ।

अवाप सिद्धिमत्यन्तां तापक्षयफलां द्विज ॥१०४॥

यस किसिमको बुद्धि एवं यस प्रकारको व्यवहार पनि अविद्या नै हो। किनकि, जुन वचनभन्दा अगोचर अर्थात् देख्न नसकिने छ, त्यो वर्णन गर्ने विषय होइन ॥९८॥ हे केशिध्वज! तिमीले यसरी यो मुक्तिदायक योगका विषयमा बताइदिएर मेरो कल्याणका लागि सबै कार्य गरिदियौ। त्यसकारण अब तिमी अत्यन्त आनन्दपूर्वक जाऊ ॥९९॥ **पराशरजीले भन्नुभयो**– हे ब्राह्मणश्रेष्ठ! त्यसपछि खाण्डिक्य जनकद्वारा यथायोग्य रूपमा सुपूजित भएर राजा केशिध्वज आफ्नो नगरमा आए ॥१००॥ त्यसपछि राजा खाण्डिक्य जनक पनि आफ्नो छोरालाई राजा बनाइदिएर आफू परमात्मा श्रीगोविन्दमा चित्तलाई एकाग्रतापूर्वक लगाएर योगसिद्धिका लागि तपस्या गर्न वनमा गए ॥१०१॥ त्यसपछि राजा खाण्डिक्य जनक वनमा गएर यमादि साधनद्वारा परमात्मामा आफ्नो चित्तलाई स्थिर गराएर श्रीविष्णु नाम हुनुभएका निर्मल ब्रह्ममा विलीन भए ॥१०२॥ राजा केशिध्वज पनि आफ्नो मुक्तिका लागि कर्महरू नष्ट गराउँदै सबै विषयहरूमा आसक्ति कम गर्न थाले । उनले निष्कामभावपूर्वक अनेकौं किसिमका शुभकर्महरू पनि गरे ॥१०३॥ हे ब्राह्मणश्रेष्ठ! यसरी अनेकौं कल्याणदायक कर्महरूको उपभोग गर्नाले उनका पाप र प्रारब्ध कर्म नष्ट भए, त्यसप्रकार उनले तीनै किसिमका ताप अर्थात् दुःखको विनाश गराउने सिद्धि प्राप्त गरे ॥१०४॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे सप्तमोऽध्यायः ।

ॐ

## अष्टमोऽध्यायः

## अध्याय – ८

### "शिष्यपरम्पराकथनम्, विष्णुपुराणस्य माहात्म्यमुपसंहारश्च"

(शिष्यपरम्पराको वर्णन, विष्णुपुराणको माहात्म्य र उपसंहार)

**पराशर उवाच**

**इत्येष कथितः सम्यक् तृतीयः प्रतिसञ्चरः ।**
**आत्यन्तिको विमुक्तिर्या लयो ब्रह्मणि शाश्वते ॥१॥**
**सर्गश्च प्रतिसर्गश्च वंशो मन्वन्तराणि च ।**
**वंशानुचरितं चैव भवतो गदितं मया ॥२॥**
**पुराणं वैष्णवञ्चैतत् सर्वकिल्विषनाशनम् ।**
**विशिष्टं सर्वशास्त्रेभ्यः पुरुषार्थोपपादकम् ॥३॥**
**तुभ्यं यथावन्मैत्रेय! प्रोक्तं शुश्रूषवेऽव्ययम् ।**
**यदन्यदपि वक्तव्यं तत् पृच्छाद्य वदामि ते ॥४॥**

**मैत्रेय उवाच**

**भगवन्! कथितं सर्वं यत् पृष्टोऽसि मया मुने ।**
**श्रुतञ्चैतन्मया भक्त्या नान्यत् प्रष्टव्यमस्ति ते ॥५॥**
**विच्छिन्नाः सर्वसन्देहा वैमल्यं मनसः कृतम् ।**
**त्वत्प्रसादान्मया ज्ञाता उत्पत्ति–स्थिति–संयमाः ॥६॥**
**ज्ञातश्चतुर्विधो राशिः शक्तिश्च त्रिविधा गुरो !**
**विज्ञाता चापि कार्त्स्न्येन त्रिविधा भावभावना ॥७॥**
**त्वत्प्रसादान्मया ज्ञातं ज्ञेयमन्यैरलं द्विज ।**
**यथैतदखिलं विष्णोर्जगन्न व्यतिरिच्यते ॥८॥**

**पराशरजीले भन्नुभयो–** हे मैत्रेय! यसप्रकार मैले तेस्रो आत्यन्तिक अर्थात् लगातार हुने प्रलयका विषयमा तिमीलाई बताइदिएँ। यसैबाट जीवहरूले शाश्वत ब्रह्मस्वरूपमा विलीन हुने अवसर प्राप्त गर्दछन् ॥१॥ मैले तिमीले प्रश्न गरे अनुसार सर्ग, प्रतिसर्ग, वंश, मन्वन्तर र वंशहरूको चरित्रहरूका विषयमा बताइदिएँ ॥२॥ यो विष्णुपुराण सबै किसिमका पापहरूको विनाश गरिदिने क्षमता भएको र सबै शाखाहरूमध्ये सर्वोत्कृष्ट र मोक्ष प्राप्तिको अपरिहार्य साधन हो ॥३॥ हे मैत्रेय! तिमीलाई यो पुराणका विषयमा सुन्नका लागि अत्यन्त उत्साहित भएको देखेर यसका बारेमा जस्ताको तस्तै बताइदिएँ। अब तिमीलाई जे सुन्न मन लागेको छ, त्यो सोध; म बताइदिनेछु॥४॥ **मैत्रेयले भने–** हे भगवन्! मैले हजुरसँग जे–जति प्रश्न सोधेको थिएँ, ती सबैका विषयमा हजुरले बताइदिनुभयो र मैले अत्यन्त श्रद्धा र भक्तिपूर्वक सुनें तथा अब मेरो मनमा कुनै किसिमको जिज्ञासा रहेको छैन अर्थात् मलाई केही सोध्नु छैन ॥५॥ हजुरको कृपाका प्रभावले गर्दा मेरो अन्तरात्मामा उत्पन्न भएका सबै द्विविधा नष्ट भए एवम् मेरो अन्तरात्मा अत्यन्त निर्मल अथवा स्वच्छ भयो। मैले सृष्टि, स्थिति र प्रलयको कथाका विषयमा ज्ञान हासिल गरिसकें ॥६॥ हे गुरूदेव! चार किसिमका राशि र तीन किसिमका शक्तिहरूका विषयमा मैले ज्ञान हासिल गरिसकें । तीन किसिमका भावनाहरूका विषयमा पनि मलाई राम्ररी ज्ञान प्राप्त भयो ॥७॥ हे ब्राह्मणश्रेष्ठ! हजुरका कृपाको प्रभावले गर्दा मलाई यो सम्पूर्ण संसार परब्रह्म परमात्मा श्रीविष्णुभन्दा अलग नभएको ज्ञान प्राप्त भयो अर्थात् यो संसार परमात्मा श्रीविष्णुकै स्वरूप भएको जानें । त्यसकारण अब कुनै पनि कुरा जान्ने चाहना रहेको छैन ॥८॥ हे महामुनि! हजुरका कृपाको प्रभावले

कृतार्थोऽस्म्यपसन्देहस्त्वत्प्रसादान्महामुने! ।

वर्णधर्मादयो धर्मा विदिता यदशेषतः ॥९॥

प्रवृत्तञ्च निवृत्तञ्च ज्ञातं कर्म मयाखिलम् ।

प्रसीद विप्रप्रवर! नान्यत् प्रष्टव्यमस्ति मे ॥१०॥

यदस्य कथनायासैर्योजितोऽसि मया गुरो ।

तत् क्षम्यतां विशेषोऽस्ति न सुतां पुत्र-शिष्ययोः ॥११॥

पराशर उवाच

एतत्ते यन्मयाख्यातं पुराणं वेदसम्मितम् ।

श्रुतेऽस्मिन् सर्वदोषोत्थपापराशिः प्रशाम्यति ॥१२॥

सर्गश्च प्रतिसर्गश्च वंशो मन्वन्तराणि च ।

वंशानुचारितं कृत्स्नं मयात्र तव कीर्तितम् ॥१३॥

अत्र देवास्तथा दैत्या गन्धर्वोरगराक्षसाः ।

यक्षा विद्याधराः सिद्धाः कथ्यन्तेऽप्सरसस्तथा ॥१४॥

मुनयो भावितात्मानः कथ्यन्ते तपसान्विताः ।

चातुर्वर्ण्यं यथा पुंसां विशिष्टचरिता नराः ॥१५॥

पुण्याः प्रदेशा मेदिन्याः पुण्या नद्योऽथ सागराः ।

पर्वताश्च महापुण्याश्चरितानि च धीमताम् ॥१६॥

वर्णधर्मादयो धर्मा वेदधर्माश्च कृत्स्नशः ।

येषां संश्रवणात् सद्यः सर्वपापैः प्रमुच्यते ॥१७॥

उत्पत्ति-स्थिति-नाशानां हेतुर्यो जगतोऽव्ययः ।

स सर्वभूतः सर्वात्मा कथ्यते भगवान् हरिः ॥१८॥

अवशेनापि यन्नाम्नि कीर्तिते सर्वपातकैः ।

पुमान् विमुच्यते सद्यः सिंहत्रस्तैर्वृकैरिव ॥१९॥

निःसन्देह अर्थात् निश्चित रूपमा अत्यन्त सन्तुष्ट भएँ र वर्ण, धर्म आदि जे-जति सबै किसिमका धर्महरू छन्, तिनीहरूका बारेमा यथार्थ रूपमा ज्ञान प्राप्त गरें ॥९॥ प्रवृत्ति र निवृत्तिरूप जे-जति कर्महरू रहेका छन्, तिनीहरू सबैका विषयमा मलाई स्पष्ट रूपमा ज्ञान प्राप्त भइसकेको छ। हे सर्वोत्कृष्ट ब्राह्मण! हजुर प्रसन्न हुनुहोस्, अब मलाई केही पनि सोध्नु छैन अर्थात् अब मेरो कुनै जिज्ञासा रहेको छैन ॥१०॥ हे गुरुदेव! मैले हजुरलाई यो सम्पूर्ण पुराण बताइदिन जुन दुःख दिएँ, त्यसका लागि मलाई क्षमा गरिदिनुहोला। किनकि, सज्जन पुरुषहरूको दृष्टिकोणमा आफ्नो छोरो र शिष्यमा कुनै किसिमको भेद रहेको हुँदैन ॥११॥ **पराशरजीले भन्नुभयो**- मैले जुन यो वैदिकधर्मसम्मत पुराणका विषयमा तिमीलाई सुनाएँ, यसलाई सुन्नाले आफूद्वारा गरिएका दोषहरूबाट उत्पन्न भएका सबै पाप शान्त अर्थात् नष्ट हुन्छन् ॥१२॥ यसमा मैले तिमीलाई सर्ग अर्थात् सृष्टि, प्रतिसर्ग अर्थात् प्रलय, वंश, मन्वन्तर र वंशहरूको चरित्रका विषयमा अत्यन्त विस्तारपूर्वक बताइदिएँ॥१३॥ यस विष्णुपुराणमा देवता, दैत्य, गन्धर्व, नाग, राक्षस, यक्ष, विद्याधर (एक प्रकारको देवयोनि), सिद्ध र अप्सराहरूका विषयमा पनि विस्तारपूर्वक वर्णन गरिएको छ ॥१४॥ यस पुराणमा अध्यात्मविद्यामा आनन्द मान्ने र तपस्यामा एकाग्रतापूर्वक लागेका मुनिहरू, चारोटै वर्णहरूको विभाजन र महापुरुषहरूको विशेष चरित्रका विषयमा वर्णन गरिएको छ ॥१५॥ पृथ्वीका अत्यन्त पवित्र राज्यहरू, नदीहरू, समुद्रहरू पुण्यदायक पर्वतहरू ज्ञानी महात्माहरूको चरित्र, वर्णको धर्म जस्ता धर्म र सबै वैदिक शास्त्रहरूका विषयमा पनि यथार्थ रूपमा वर्णन गरिएको छ। यिनीहरूका विषयमा अत्यन्त श्रद्धापूर्वक श्रवण गर्नाले मनुष्य सबै पापहरूबाट पूर्ण रूपमा मुक्त हुन्छ ॥१६-१७॥ यस पुराणमा जगत्को उत्पत्ति, स्थिति र विनाशका परम कारण अव्ययात्मा, अर्थात् अविनाशी जीवमात्रमा व्याप्त भएर रहनु भएका, सबैका आत्मास्वरूप परमात्मा श्रीहरिका विषयमा पनि वर्णन गरिएको छ ॥१८॥ जसको नामको कीर्तन अत्यन्त भयभीत अवस्थामा गरिए पनि त्यसबाट मनुष्य सबै पापहरूबाट त्यसरी मुक्त हुन्छ जसरी सिंहबाट अत्यन्त भयभीत भएर भेडो भाग्दछ, त्यसरी नै भगवान्का नामको कीर्तन गरेपछि सबै पापहरू भाग्दछन् ॥१९॥ हे मैत्रेय! जसरी आगोले सबै

यन्नाम कीर्तितं भक्त्या विलायनमनुत्तमम् ।
मैत्रेयाशेषपापानां धातूनामिव पावकः ॥२०॥
कलिकल्मषमत्युग्रं नरकार्तिप्रदं नृणाम् ।
प्रयाति विलयं सद्यः सकृद् यत्रानुसंस्मृते ॥२१॥
हिरण्यगर्भ-देवेन्द्र-रुद्रा-दित्या-श्वि-वायुभिः ।
किन्नरैर्वसुभिः साध्यैर्विश्वदेवादिभिः सुरैः ॥२२॥
यक्ष-रक्षोगणैः सिद्धैर्दैत्य-गन्धर्व-दानवैः ।
अप्सरोभिस्तथा तारानक्षत्रैः सकलैर्ग्रहैः ॥२३॥
सप्तर्षिभिस्तथा धिष्ण्यैर्धिष्ण्याधिपतिभिस्तथा ।
ब्राह्मणाद्यैर्मनुष्यैश्च प्रेताद्यैः समहीरुहैः ।
वना-द्रि-सागर-सरित्-पातालैः सधरादिभिः ॥२५॥
शब्दादिभिश्च सहितं ब्रह्माण्डमखिलं द्विज !
मेरोरिवाणुर्यस्यैतद् यन्मयञ्च द्विजोत्तम ॥२६॥
स सर्वः सर्ववित् सर्वस्वरूपो रूपवर्जितः ।
कीर्त्यते भगवान् विष्णुरत्र पापप्रणाशनः ॥२७॥
यदश्वमेधावभृथे स्नातः प्राप्नोति वै फलम् ।
सकलं तदवाप्नोति श्रुत्वैन्मुनिसत्तम ॥२८॥
प्रयागे पुष्करे चैव कुरुक्षेत्रे तथार्णवे ।
कृतोपवासः प्राप्नोति तदस्य श्रवणान्नरः ॥२९॥
यदग्निहोत्रे सुहुते वर्षेणाप्नोति वै फलम् ।
सकलं समवाप्नोति तदस्य श्रवणात् सकृत् ॥३०॥
यज्ज्येष्ठशुक्लद्वादश्यां स्नात्वा वै नियतेन्द्रियः ।
मथुरायां हरिं दृष्ट्वा प्राप्नोति परमां गतिम् ॥३१॥

धातुहरूमा लागेको अर्थात् जमेको मयल अथवा फोहोरलाई पूर्ण रूपमा विनाश गरिदिन्छ, त्यसरी नै जसका नामहरूको स्मरण गर्नाले सबै पापहरू पूर्ण रूपमा विनष्ट हुन्छन् ॥२०॥ जीवनमा एकपटक मात्र भगवान्को नामको स्मरण गर्नाले मनुष्यहरूलाई अत्यन्त भयानक नरक उपलब्ध गराइदिने कलिकल्मष अर्थात् कलियुगको दुष्प्रयास अति चाँडै समाप्त हुन्छ अर्थात् पूर्ण रूपमा नष्ट हुन्छ ॥२१॥ हे ब्राह्मणश्रेष्ठ! हिरण्यगर्भ, देवराज इन्द्र, रुद्र, आदित्य, अश्विनीकुमार, वायु, साध्य, विश्वदेव आदि देवताहरू, यक्ष, राक्षस, सिद्ध, दैत्य, गन्धर्व, दानव, अप्सरा, तारा, नक्षत्र, ग्रह, सप्तर्षिहरू, लोकपालहरू, ब्राह्मणादि मनुष्य, पशु, मृग, सर्प, चरा र पलाश आदि रुख, वन, अग्नि (आगो), समुद्र, नदी, पाताल,, पृथ्वी आदि एवं शब्दादि विषयहरू सहित सम्पूर्ण ब्रह्माण्ड जसका अगाडि सुमेरु पर्वतका नजिकमा रेणुका जसरी नै रहेका छन् ॥२२-२६॥ तथा जो यिनीहरू सबैको निमित्तोपादान कारण हुनुहुन्छ, उहाँ सबै विषयका ज्ञाता अर्थात् सर्वज्ञ, सर्वस्वरूप, आफ्नो कुनै निश्चित रूप नहुनु भएका र पापविनाशक परमात्मा श्रीविष्णुको यस स्वरूपको कीर्तन गरिएको छ ॥२७॥ हे सर्वोत्कृष्ट मुनि! अश्वमेघ यज्ञ समाप्त भएपछि अवभृथ अर्थात् यज्ञ सकिएपछि गरिने स्नान गर्नाले जुन फल प्राप्त हुन्छ, यस पुराणको श्रद्धा र भक्तिपूर्वक श्रवण गर्नाले अर्थात् सुन्नाले त्यही फल प्राप्त हुन्छ ॥२८॥ प्रयाग, पुष्करक्षेत्र, कुरुक्षेत्र र समुद्रका किनारमा अवस्थित रहेर उपवास गर्नाले जुन फल प्राप्त हुन्छ, यस पुराणको श्रद्धा र भक्तिपूर्वक श्रवण गर्नाले अर्थात् सुन्नाले त्यही फल प्राप्त हुन्छ ॥२९॥ एक वर्षसम्म विधिपूर्वक प्रत्येक दिन अग्निहोत्र अर्थात् स्थापना गरिएको अग्निलाई निभ्न नदिई घिउ एवं दूधद्वारा बिहान-बेलुका अग्निमा होम गरिने एक वैदिक कर्म विशेष गर्दाका अवस्थामा मनुष्यलाई जुन फल प्राप्त गर्दछ, त्यही फल श्रद्धापूर्वक एकपटक सुन्नाले प्राप्त हुन्छ ॥३०॥ आफ्ना इन्द्रियहरूलाई यथार्थ रूपमा आफ्नो नियन्त्रणमा राख्न सफल भएको मनुष्यले जेष्ठ महिनाको शुक्लपक्षको द्वादशी तिथिमा स्नान गरेर मथुरामा निवास गर्नुभएका परमात्मा श्रीहरिको दर्शन गर्नाले जुन उत्कृष्ट गति प्राप्त गर्दछ ॥३१॥ हे ब्राह्मणश्रेष्ठ! परमात्मा श्रीहरिलाई

तदाप्नोति फलं सम्यक् समाधानेन कीर्तनात्।
पुराणस्यास्य विप्रर्षे! केशवार्पितमानसः ॥३२॥
यमुनासलिले स्नातः पुरुषो मुनिसत्तम।
ज्येष्ठामूलेऽमले पक्षे द्वादश्यामुपवासकृत् ॥३३॥
समभ्यर्च्याच्युतं सम्यङ् मथुरायां समाहितः ।
अश्वमेधस्य यज्ञस्य प्राप्नोत्यविकलं फलम् ॥३४॥
आलोक्यर्द्धिमथान्येषामुन्नीतानां स्ववंशजैः।
एतत् किलोचुरन्येषां पितरः सपितामहाः ॥३५॥
कश्चिदस्मत्कुले जातः कालिन्दीसलिलाप्लुतः।
अर्चयिष्यति गोविन्दं मथुरायामुपोषितः ॥३६॥
ज्येष्ठामूले सिते पक्षे येनैवं वयमप्युत।
परामृद्धिमवाप्स्यामस्तारिताः स्वकुलोद्भवैः ॥३७॥
ज्येष्ठामूले सिते पक्षे समभ्यर्च्य जनार्दनम्।
धन्यायां कुलजः पिण्डान् यमुनायां प्रदास्यति ॥३८॥
तस्मिन् काले समभ्यर्च्य तत्र कृष्णं समाहितः।
दत्त्वा पिण्डान् पितृभ्यश्च यमुनासलिलाप्लुतः ॥३९॥
यदाप्नोति नरः पुण्यं तारयन् स पितामहान्।
श्रुत्वाध्यायं तदाप्नोति पुराणस्यास्य भक्तिमान् ॥४०॥
एतत् संसारभीरूणां परित्राणमनुत्तमम्।
दुःस्वप्नाशनं नृणां सर्वदुष्टनिवर्हणम् ॥४१॥
इदमार्षं पुरा प्राह ऋभवे कमलोद्भवः।
ऋभुः प्रियव्रतायाह स च भागुरयेऽब्रवीत् ॥४२॥

अन्तरात्मामा विराजमान गराएर जुन मनुष्यले अत्यन्त श्रद्धा एवं भक्तिपूर्वक यस पुराणको श्रवण गर्दछ, त्यसले पनि त्यही किसिमको उत्तम गति प्राप्त गर्दछ ॥३२॥ हे मुनिश्रेष्ठ! जेष्ठ महिनाको शुक्लपक्षको द्वादशी तिथिमा उपवास बसेर मथुराकी अत्यन्त पवित्र नदी यमुनामा स्नान गरेर एकाग्रतापूर्वक वैदिक विधि अनुसार परमात्मा श्रीविष्णुको पूजा गर्ने मनुष्यले सम्पूर्ण अश्वमेध यज्ञको फल प्राप्त गर्दछ ॥३३-३४॥ आफ्ना वंशजहरूद्वारा सन्तुष्ट पारिएका अर्थात् उन्नत गराइएका पितृहरूको समृद्धिलाई देखेर अन्य पुरुषहरूका पिता-पितामहहरूले आफ्ना वंशजहरूलाई लक्षित गर्दै यसरी भनेका थिए ॥३५॥ के हाम्रो कुलमा पनि यस्तो कुनै सन्तान उत्पन्न हुन सक्दछ? जसले जेष्ठ महिनाको शुक्लपक्षको द्वादशी तिथिमा मथुरा नगरीमा गएर उपवास बसेर तथा यमुना नदीको जलमा नुहाएर परमात्मा श्रीगोविन्दको पूजा आराधना गर्नेछ, जसको प्रभावले हामीहरूको पनि यो संसार-समुद्रबाट उद्धार हुनेछ ? त्यसैका कुलमा जन्मिएको मनुष्यले मात्र जेष्ठ महिनाको शुक्लपक्षको द्वादशी तिथिमा परमात्मा श्रीविष्णुको पूजा-आराधना गरेर यमुना नदीका किनारमा आफ्ना पितृहरूका लागि पिण्डदान गर्दछ ॥३६-३९॥ यस दिन अर्थात् जेष्ठ महिनाको शुक्लपक्षको द्वादशी तिथिका दिन समाहित भएर अर्थात् एक ठाउँमा जम्मा भएर मथुरामा रहेको अत्यन्त पवित्र नदी यमुनामा परमात्मा श्रीविष्णुको पूजा-आराधना गरिसकेर आफ्ना पितृहरूको कल्याणका लागि पिण्डदान गरेर आफ्ना पितृहरूको उद्धार गर्ने मनुष्यलाई जुन फल प्राप्त हुन्छ, त्यसै अनुसारको फल यो विष्णुपुराणको एक अध्यायमात्रको पनि भक्तिपूर्वक श्रवण गर्नाले प्राप्त गर्दछ अर्थात् प्राप्त हुन्छ ॥३९-४०॥ यो पुराण सांसारिक चक्रबाट अत्यन्त भयभीत भएका मनुष्यहरूको रक्षा गर्ने सर्वोत्कृष्ट साधन हो। यसको प्रभावले मनुष्यहरूका खराब सपनाहरू नष्ट हुन्छन् र सबै किसिमका दोषहरू पूर्ण रूपमा शान्त हुन्छन् ॥४१॥ प्राचीन कालमा यस अत्यन्त पवित्र पुराणका विषयमा सबैभन्दा पहिला ब्रह्माजीले ऋभुलाई सुनाउनुभएको थियो, ऋभुले प्रियव्रतलाई र प्रियव्रतले भागुरिलाई बताएका दिए ॥४२॥ त्यसरी नै यस पवित्र पुराणका विषयमा

भागुरिः स्तवमित्राय दधीचाय स चोक्तवान्।
सारस्वताय स प्राह भृगवे सोऽप्यथोक्तवान्॥४३॥
भृगुस्तु पुरुकुत्साय नर्मदायै स चोक्तवान्।
नर्मदा धृतराष्ट्राय नागाय पूरणाय च ॥४४॥
ताभ्याञ्च नागराजाय प्रोक्तं वासुकये द्विज !
वासुकिः प्राह वत्साय वत्सश्चाश्वतराय वै॥४५॥
कम्बलाय च तेनोक्तमेलापत्राय तेन च।
पातालं समनुप्राप्तस्ततो वेदशिरा मुनिः॥४६॥
प्राप्तवानेतखिलं स वै प्रमतये ददौ।
दत्तं प्रमतिना चैतज्जातुकर्णाय धीमते॥४७॥
जातुकर्णेन चैवोक्तमन्येषां पुण्यशालिनाम्।
वशिष्ठवरदानेन ममाप्येतत् स्मृतिं गतम्॥४८॥
मयापि तुभ्यं मैत्रेय! यथावत् कथितं त्विदम्।
त्वमप्येतच्छमीकाय कलेरन्ते गदिष्यसि॥४९॥
इत्येतत् परमं गुह्यं कलिकल्मषनाशनम्।
यः श्रृणोति नरः पापैः स सर्वैर्द्विज! मुच्यते॥५०॥
पितॄणाञ्च मनुष्याणाममराणाञ्च संस्तुति।
कृता तेन भवेदेतद् यः श्रृणोति दिने दिने॥५१॥
कपिलादानजनितं पुण्यमत्यन्तदुर्लभम्।
श्रुत्वैतस्य दशाध्यायानवाप्नोति न संशयः॥५२॥
यस्त्वेतत् सकलं श्रृणोति पुरुषः कृत्वा मनस्यच्युतं,
सर्वं सर्वमयं समस्तजगता माधारमात्माश्रयम्।
ज्ञानं ज्ञेयमनन्तमाद्यरहितं सर्वामराणां हितं
स प्राप्नोति न संशयोऽस्त्यविकलं यद्वाजिमेधे फलम्॥५३॥

भागुरिले स्तवमित्रलाई, स्तवमित्रले दधीचिलाई बताएका थिए तथा दधीचिले सारस्वतलाई बताएका थिए एवं सारस्वतले भृगुलाई बताएका थिए ॥४३॥ यसैगरी भृगुले पुरुत्कुत्सलाई, पुरुत्कुसले नर्मदालाई तथा नर्मदाले धृतराष्ट्र र पूरण नाम भएको नागलाई बताएका थिए ॥४४॥ हे ब्राह्मणश्रेष्ठ! यस पुराणका विषयमा ती दुवै नागहरूले वासुकि नागलाई, वासुकि नागले वत्सलाई एवम् वत्सले अश्वतरलाई बताए। यसैगरी अश्वतरले कम्बललाई, कम्बलले एलापत्रलाई बताए। त्यसपछि वेदशिरा मुनिले पातालमा आएर सम्पूर्ण विष्णुमहापुराण प्राप्त गरे ॥४५–४६॥ उनले विष्णुपुराणका विषयमा प्रमतिलाई बताए, प्रमतिले बुद्धिमान् जातुकर्णलाई बताए, जातुकर्णले अन्य धर्मात्मा महात्माहरूलाई सुनाए र वसिष्ठजीको वरदानका प्रभावले गर्दा मलाई पनि यस पुराणको स्मरण भयो अर्थात् यसलाई मैले सम्झेँ ॥४७–४८॥ हे मैत्रेय! मैले तिमीलाई यस पुराणका विषयमा विस्तारपूर्वक बताइदिएँ, तिमीले पनि कलियुगको अन्तमा यस महापुराणका विषयमा शमीकलाई बताइदिनु ॥४९॥ हे ब्राह्मश्रेष्ठ! जुन मनुष्यले कलियुगको पापलाई पूर्ण रूपमा नाश गराइदिने परम गोपनीय यो पुराण सुन्दछ, ऊ सम्पूर्ण दोषहरूबाट यथार्थ रूपमा मुक्त हुन्छ अर्थात् उसले मुक्ति प्राप्त गर्दछ ॥५०॥ जुन मनुष्यले प्रत्येक दिन यो विष्णुपुराणको अध्ययन वा श्रवण गर्छ अर्थात् सुन्दछ, उसले सम्पूर्ण देवताहरू, पितृहरू र मनुष्यहरूको स्तुति गरेको फल प्राप्त गर्दछ ॥५१॥ कैलो रङ्ग भएको गाईं दान गरेको फल अत्यन्त दुर्लभ हुन्छ। जुन मनुष्यले अत्यन्त श्रद्धापूर्वक यस पुराणका दस अध्यायहरु सुन्दछ, उसले निश्चित रूपमा कैलो गाई दान गरेको फल प्राप्त गर्दछ ॥५२॥ जुन मनुष्यले अत्यन्त श्रद्धा र भक्तिपूर्वक सम्पूर्ण जगत्को आधार, आत्माको आधार, सर्वव्यापक विष्णुपुराण सुन्दछ, उसले सम्पूर्ण अश्वमेघ यज्ञको फल प्राप्त गर्दछ, यसमा कुनै किसिमको सन्देह अर्थात् द्विविधा रहेको छैन ॥५३॥ जुन पुराणको आदि, मध्य र अन्तमा सम्पूर्ण जगत्को सृष्टि, स्थिति र संहार गर्नमा समर्थ ब्रह्मज्ञानमय चराचर संसारका गुरु

यत्रादौ भगवांश्चराचरगुरुर्मध्ये तथान्ते च सः,

ब्रह्मज्ञानमयोऽच्युतोऽखिलजगन्मध्यान्तसर्गप्रभुः ।

तच्छृण्वन् पुरुषः पवित्रममलं भक्त्या पठन् धारयन्,

प्राप्नोत्यस्ति न तत्फलं त्रिभुवनेष्वेकान्तसिद्धिर्हरिः ॥५४॥

यस्मिन्न्यस्तमतिर्न याति नरकं स्वर्गोऽपि यच्चिन्तने,

विघ्नो यत्र निवेशितात्ममनसो ब्राह्मोऽपि लोकोऽल्पकः ।

मुक्तिं चेतसि यः स्थितोऽमलधियां पुंसां ददात्यव्ययः,

किं चित्रं यदघं प्रयाति विलयं तत्राच्युते कीर्तिते ॥५५॥

यज्ञैर्यज्ञविदो यजन्ति सततं यज्ञेश्वरं कर्मिणो,

यं यं ब्रह्ममयं परापरमयं ध्यायन्ति च ज्ञानिनः ।

यञ्च प्राप्य न जायते न म्रियते नो वर्द्धते हीयते,

नैवासन्न च सद्भवत्यति ततः किं वा हरेः श्रूयताम् ॥५६॥

कव्यं यः पितृरूपधृग् विधिहुतं हव्यञ्च भुङ्क्ते प्रभु,

र्देवत्वे भगवाननादिनिधनः स्वाहास्वधासंज्ञितम् ।

यस्मिन् ब्रह्मणि सर्वशक्तिनिलये मानानि नो मानिनाम्,

निष्ठायै प्रभवन्ति हन्ति कलुषं श्रोतुं स यातो हरिः ॥५७॥

नान्तोऽस्ति यस्य न च यस्य समुद्भवोऽस्ति,

वृद्धिर्न यस्य परिणामविवर्जितस्य ।

नापक्षयञ्च समुपैत्यविकारिवस्तु

यस्तं नतोऽस्मि पुरुषोत्तममाद्यमीशम् ॥५८॥

तस्यैव योऽनुगुणभुग् बहुधैक एव,

शुद्धोऽप्यशुद्ध इव मूर्तिविभागभेदैः ।

ज्ञानान्वितः सकलसत्त्वविभूतिकर्ता

तस्मै नतोऽस्मि पुरुषाय सदाव्ययाय ॥५९॥

परमात्मा श्री अच्युतकै कीर्तन गरिएको छ, त्यस स्वच्छ एवं परमश्रेष्ठ पुराणको श्रवण, अध्ययन र धारण गर्नाले जुन फल प्राप्त हुन्छ, त्यस्तो फल समस्त त्रिलोकमा अन्यत्र कतै प्राप्त हुन सक्तैन। किनकि, यसबाट एकान्तसिद्धिस्वरूप परमात्मा श्रीविष्णुकै प्राप्ति हुन्छ ॥५४॥ आफ्नो अन्तरात्मालाई उहाँमा लगाएपछि नरकमा जानु पर्दैन, जसको स्मरण भएपछि स्वर्गप्राप्ति पनि व्यवधानस्वरूप भएको अनुभव हुन्छ। जसमा चित्त लगाइसकेपछि ब्रह्मलोक पनि अत्यन्त तुच्छ भएको ज्ञान हुन्छ एवं जुन अव्यय (अविनाशी) परमात्माले स्वच्छ अन्तरात्मा भएका पुरुषहरूका अन्तरात्मामा अवस्थित भएर मुक्ति प्रदान गर्नुहुन्छ, उहाँ भगवान्को कीर्तन गर्दा यदि पाप नष्ट भयो भने यसमा आश्चर्य हुनुपर्ने कुरा छैन ॥५५॥ यज्ञका ज्ञाता कर्मनिष्ठ मनुष्यहरूले यज्ञका माध्यमद्वारा सधैं जसको पूजा गर्दछन्, ज्ञानीहरूले ब्रह्मस्वरूपमा जसको ध्यान गर्दछन् र जसलाई प्राप्त गरेपछि जीवले सांसारिक चक्रमा घुमिरहनु पर्दैन, जो न सत् अर्थात् कारण हुनुहुन्छ र न असत् अर्थात् कार्य हुनुहुन्छ, उहाँ परमात्मा श्रीविष्णुबाहेक अरू कसको लीलाका विषयमा सुन्ने? ॥५६॥ जुन अनादिनिधन परमात्मा श्रीविष्णुले पितृरूप धारण गर्नुभएर स्वधाममा उपलब्ध भएको कव्य र देवरूप धारण गर्नुभएर विधिपूर्वक अग्निमा हवन गरिएको स्वाहा नाम भएको हव्य स्वीकार गर्नुहुन्छ तथा प्रमाणमा सिपालु व्यक्तिहरू जुन ब्रह्मस्वरूप एवं सबै शक्तिहरूका आश्रयस्वरूप परमात्माका विषयमा यस्तो किसिमको हुनुहुन्छ भनेर अन्दाज गर्न सक्तैनन्, उहाँ परमात्मा श्रीहरिको स्मरण गरेपछि सबै पापहरू नष्ट हुन्छन् ॥५७॥ जसको उत्पत्ति र वृद्धिस्वरूप परिणाम रहेको छैन तथा विनाश हुँदैन, जो ब्रह्मस्वरूप एवं सबैको आदिपुरुष हुनुहुन्छ, जो नित्य निर्विकार पदार्थ हुनुहुन्छ, उहाँ परमात्मालाई म प्रणाम अथवा नमस्कार गर्दछु ॥५८॥ जो एक हुनु भए तापनि आफ्ना गुणहरूको परिणाम अनुसार अनेकौं रूप धारण गर्नुभएर विभिन्न स्वरूपमा विराजमान हुनुभएको छ तथा जो अत्यन्त शुद्ध हुनु भए तापनि अशुद्ध जस्तै देखिनु हुन्छ एवं जो ज्ञानस्वरूप र सबै जीव एवं विभूतिहरूको परमाधार हुनुहुन्छ, उहाँ अविनाशी पुरुषलाई म नमस्कार गर्दछु ॥५९॥ जो ज्ञान

ज्ञानप्रवृत्तिनियमैक्यमयाय पुंसो
भोगप्रदानपटवे त्रिगुणात्मकाय।
अव्याकृताय भवभावनकारणाय
वन्दे स्वरूपभवनाय सदाजराय ॥६०॥
व्योमानिलाग्निजलभूरचनामयाय
शब्दादिभोगविषयोपनयक्षमाय।
पुंसः समस्तकरणैरुपकारकाय
व्यक्ताय सूक्ष्मविमलाय सदा नतोऽस्मि ॥६१॥
इति विविधमजस्य यस्य रूपं
प्रकृतिपरात्ममयं सनातनस्य।
प्रदिशतु भगवानशेषपुंसां
हरिरपजन्मजरादिकां स सिद्धिम् ॥६२॥

अर्थात् सत्त्व, प्रवृत्ति अर्थात् रज र नियम अर्थात् तमको एकतास्वरूप हुनुहुन्छ र पुरुषहरूलाई भोग प्रदान गर्न सक्षम हुनुहुन्छ एवं त्रिगुणात्मक तथा अव्याकृत हुनुहुन्छ, जगत्‌को निमित्तोपादान कारण हुनुहुन्छ, उहाँ स्वतःसिद्ध वृद्धावस्था-शून्य परमात्मालाई नमस्कार गर्दछु ॥६०॥ जो आकाश, वायु, अग्नि, जल र पृथ्वीस्वरूप हुनुहुन्छ, शब्दादि विषयहरू प्रदान गर्न सक्षम हुनुहुन्छ र सबै इन्द्रियहरूद्वारा जीवमात्रको कल्याण गरिदिनु हुन्छ, उहाँ व्यक्त, सूक्ष्म एवं विमलस्वरूप परमात्मालाई म सधैं नमस्कार गर्दछु ॥६१॥ यस प्रकार जुन नित्य एवं सनातन परमात्माका प्रकृति पुरुषमय अनेकौं स्वरूपहरू छन्, उहाँ परमात्मा श्रीहरिले सबै पुरुषहरूलाई जन्म र वृद्धावस्था आदिबाट विहीन भएको मुक्तिस्वरूप सिद्धि प्रदान गर्नुहुन्छ ॥ ६२॥

इति श्रीविष्णुमहापुराणे षष्ठांशे अष्टमोऽध्यायः।
इति श्रीविष्णुमहापुराणे षष्ठांशे सम्पूर्णम्।

ॐ